अकरोत् सर्वभावेन गणेशः प्रीयतामिति ।
अल्पेनैव तु कालेन पुत्रस्तस्याऽभवच्छुभः ।।२१।।

ददौ दानान्यनेकानि पुत्रजन्मनिमित्ततः ।
रुक्माङ्गदेति नामाऽस्य चक्रे द्विजवरोदितम् ।।२२।।

ववृधे बालको नित्यं शुक्लपक्षे यथा शशी ।
चकार गुरुसात् तं स शिक्षार्थं नृपतिः सुतम् ।।२३।।

स च श्रवणमात्रेण जग्राह गुरुणोदितम् ।
सर्वविद्यानिधानेन दत्तं यत् कपिलेन च ।।२४।।

सोऽपि विद्यानिधिरभूद् गजकर्ण इवापरः ।
रुक्माङ्गदोऽतिबलवान् सर्वशास्त्रविशारदः ।।२५।।

तस्मै पट्टाभिषेकं स चकार गुणराशये ।
ददौ च द्विजमुख्येभ्यो वासोरत्नधनानि च ।।२६।।

ततोऽधिकां महाभक्तिं सोऽपि चक्रे विनायके ।
जजापैकाक्षरं मन्त्रं पितुः प्राप्तं दिने दिने ।।२७।।

एकस्मिन् दिवसेऽरण्यं युवराजो विवेश ह ।
मृगयां व्यचरद् भूरि जघान गवयान् मृगान् ।।२८।।

अतिश्रान्तो ददर्शाऽथ मुनेः कस्यचिदाश्रमम् ।
नानावृक्षलताजालं त्यक्तवैरमृगान्वितम् ।।२९।।

ब्राह्मणहरूको पूजा र तर्पण गर्न लागे । तिनले सम्पूर्ण कर्म श्रीगणेशको प्रसन्नताका लागि गरिरहेका थिए । थोरै समयपछि तिनलाई अत्यन्त मङ्गलमय र सुन्दर पुत्र पैदा भयो।।२०-२१।। पुत्रजन्मको उपलक्ष्यमा तिनले नानाथरि पदार्थहरूको दान गरे। ब्राह्मणले बताएबमोजिम छोराको नाम रुक्माङ्गद भनी राखे ।।२२।। त्यो बालक शुक्लपक्षको चन्द्रमा झैं दिनदिनै बढ्न थाल्यो । त्यसपछि राजा भीमले त्यस छोरालाई उत्तम शिक्षा प्रदान गर्ने हेतुले सद्गुरुको जिम्मा लगाइ दिए।।२३।। राजकुमारले पनि सबै विद्याका निधि आफ्ना गुरु कपिलद्वारा उपदेश गरिएको विद्यालाई श्रवण गर्नासाथ ग्रहण गरे। ती रुक्माङ्गद पनि द्वितीय श्रीगणेशसमान विद्याका सागर, अतिपराक्रमी, बलवान् र सबै शास्त्रमा निपुण भए ।।२४-२५।। त्यसपछि राजा भीमले आफ्नो गुणी छोरा रुक्माङ्गदको राज्याभिषेक गरे। त्यस बेला उनले ब्राह्मण आदिलाई वस्त्र, रत्न र धन दिएका थिए।।२६।। रुक्माङ्गद आफ्ना पिता भीमभन्दा पनि अधिक भगवान् श्रीगणेशका भक्त थिए । तिनले आफ्ना पिता भीमबाट प्राप्त श्रीगणेशको एकाक्षरी मन्त्रको दिनदिनै जप गर्दथे ।।२७।। एक दिन रुक्माङ्गद वनभ्रमणमा गए । उनले त्यहाँ शिकार खेल्दा धेरै गवय र मृग मारे ।।२८।। वनभ्रमणपछि अत्यन्त थाकेका रुक्माङ्गदले कुनै मुनिको वृक्ष, लहरा र फूलले शोभायमान, जन्मजात वैरी हुँदाहुँदै पनि वैरभावबाट मुक्त भई खेलिरहेका मृग आदि जनावरको क्रीडाले रमणीय आश्रमको दर्शन गरे ।।२९।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे रुक्माङ्गदाभिषेकवर्णनं नाम सप्तविंशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'भीमका पुत्रका रूपमा रुक्माङ्गदको जन्म र राज्याभिषेक' शीर्षकान्वित सत्ताइसौं अध्याय पूर्ण भयो ।।२७।।

ॐ

# अष्टाविंशोऽध्याय: { २८ अध्याय }

ब्रह्मोवाच

ततो रुक्माङ्गदोऽपश्यदृषिं वाचक्नविं शुभम्
मुकुन्दां तस्य पत्नीञ्च स्निग्धमञ्जुलभाषिणीम् ।।१।।

अतिश्रान्तो नरपतिर्नमश्चक्र उभावपि ।
तस्मिन् मुनौ गते स्नातुं ययाचे नृपसत्तमः ।।२।।

मातर्मुकुन्दे ! मे देहि शीतलं जलमुत्तमम् ।
विना जलं मम प्राणा गमिष्यन्ति यमक्षयम् ।।३।।

आकर्ण्य तस्य वाचं सा जगाद मदनातुरा ।
त्वादृशं पुरुषं क्वापि मारादप्यतिसुन्दरम् ।।४।।

न देवेषु न नागेषु यक्षगन्धर्वपुञ्जयोः ।
पश्यामि चारुसर्वाङ्गमतो मे हृदयं त्वयि ।।५।।

अत्यासक्तं त्वदधरामृतपाने च देहि तत् ।

नारद उवाच

व्यलीकं स तु श्रुत्वैव श्रान्तत्वाद् भृशदुःखितः ।।६।।

तिलोत्तमोत्तमां तां स जितेन्द्रियतया जगौ ।
त्यज प्रौढिं न मे चित्तं पारदार्ये विगर्हिते ।।७।।

विनायकप्रभावेण सक्तं नैवात्र कर्हिचित् ।
न जलं पातुमिच्छामि त्वया दत्तं सुदुष्टया ।।८।।

ऋषेराश्रम इत्येवं यातो यास्य इतो शुभे ।
तं गन्तुमुद्यतं पाणिं धृत्वाऽवीवददातुरा ।।९।।

मुकुन्दोवाच

बलात्कारेण योऽन्यस्य स्त्रियं धर्षितुमिच्छति ।
स एव नरकं याति न स्वयं याति तामपि ।।१०।।

कृते त्रेतायुते ब्रह्मा स्त्रीणां स्वातन्त्र्यमभ्यधात् ।
न करोषि यदा वाक्यं तदा भस्म भविष्यसि ।।११।।

अथवा राज्यविभ्रष्टं करिष्ये वनचारिणम् ।

ब्रह्माजीले भन्नुभयो- आश्रमको दर्शन गरेपछि रुक्माङ्गदले आश्रममा विराजमान मङ्गलमूर्ति ऋषि वाचक्नवि र प्रेमपूर्वक मीठो बोल्ने ऋषि पत्नी मुकुन्दाको पनि दर्शन गरे ।।१।। वनभ्रमणका कारण अत्यन्त थाकेका रुक्माङ्गदले ती दुबैलाई प्रणाम गरे । मुनि वाचक्नवि तुरुन्तै नुहाउन बाहिर गएपछि रुक्माङ्गदले मुनिपत्नी मुकुन्दासँग याचना गर्दै भने- 'हे आमा ! मलाई उत्तम चीसो जल दिनुहोस् । पानीविना मेरा प्राण छुट्नै लागेका छन्' ।।२-३।। रुक्माङ्गदका ती कुरा सुनेर कामातुर मुनिपत्नी मुकुन्दाले भनिन् - 'हे रुक्माङ्गद ! तपाईँजस्तो सम्पूर्ण अङ्गमा सौन्दर्यले वास गरेको, कामदेवभन्दा पनि राम्रो पुरुष, देवता, यक्ष, गन्धर्व, नाग, किन्नर आदि कुनै जातिमा पनि मैले देखेकी छैन । मेरो मन तपाईँमा आसक्त भएको छ। म तपाईँको अधरामृत पिउन चाहन्छु । मलाई तपाईँको अधरामृत पान गर्न दिनुहोस् ।' यस्तो असत्य र निन्दनीय प्रार्थना सुनेर अत्यन्त दुःखित भएका रुक्माङ्गदले आफ्नो इन्द्रियजयी स्वभावअनुसार तिलोत्तमा अप्सराभन्दा पनि राम्री ती मुनिपत्नीलाई भने - 'हे ऋषिपत्नी ! तपाईँले हठ-परित्याग गर्नुहोस् । मेरो मन परस्त्रीसेवनजस्तो निन्दनीय कर्ममा लाग्दैन । श्रीगणेश भगवान्‌का प्रभावले मेरो मन यस्ता कुनै पनि लौकिक तुच्छ कार्यमा आसक्त हुँदैन । तपाईँजस्ती दुष्ट नारीले दिएको पानी म पिउन चाहन्नँ । वास्तवमा म त ऋषिको पवित्र आश्रम हो भनेर यहाँ आएको थिएँ । अब म यहाँबाट छिटै बाहिर जान्छु।' यसरी जवाफ दिएर प्रस्थान गर्न लागेका रुक्माङ्गदको हात समातेर कामातुर मुकुन्दाले भनिन् ।।४-९।। 'जुन मानिसले बलात्कार गरेर परस्त्रीसेवन गर्दछ त्यो मानिस नरकमा जान्छ । तर जुन मानिस परस्त्रीले स्वयं याचना गरेपछि परस्त्रीगमन गर्दछ त्यसलाई पाप लाग्दैन र नरक जान पर्दैन ।।१०।। त्रेतायुग लाग्ने र सत्ययुगको अन्त्य हुने बेलामा ब्रह्माजीले स्त्रीजातिको स्वतन्त्र अधिकारको विषयमा यस्तै कुरा बताउनुभएको थियो। यदि तपाईँले मैले भनेको मान्नुहुन्न भने तपाईं मेरो सरापबाट खरानी हुनुहुनेछ अथवा मैले तपाईँलाई राज्यहीन, बनवासी र कङ्गाल पनि बनाउन सक्नेछु।'

नारद उवाच

इत्युक्त्वा धावमाना सा काममार्गणपीडिता ।।१२।।

रभसाऽऽलिङ्गयामास चुचुम्ब वदनं हठात् ।
ततो रुक्माङ्गदस्तां तु बलाच्चिक्षेप दूरतः ।।१३।।

मूर्च्छिता पतिता भूमौ रम्भेव मरुता हता ।
उत्थितां तां तदा प्राह परदारविरक्तधीः ।।१४।।

रुक्माङ्गदो महाभागे ! मुनिपत्न्यविवेकिनि !
परपुंसि मनो यस्याः सा वै निरयभाग्भवेत् ।।१५।।

न मे मनश्चलेत् क्वापि यदि शुष्येन्महोदधिः ।
एवं निराकृता तेन तं शशाप रुषान्विता ।।१६।।

यथाऽहं कष्टमगमं तथा त्वं कुष्ठभाग् भव ।
यतस्ते हृदयं वज्रात् सारभूतं न च द्रुतम् ।।१७।।

इत्थं वदन्तीं तां राजा निर्भर्त्स्य बहुधा ततः ।
त्वरया निर्गतस्तस्मादाश्रमाद् भृशदुःखितः ।।१८।।

स्वं ददर्श शरीरं स श्वेतं बकशरीरवत् ।
कुष्ठरोगयुतं कान्त्या हीनञ्च भृशकुत्सितम् ।।१९।।

चिन्तार्णवे तदा मग्न इदमाह गजाननम् ।
अपराद्धं मया किन्ते कथमत्रागतोऽप्यहम् ।।२०।।

प्राप्तः कथं नु दुष्टाया मुनिपत्न्याः समागमम् ।
त्वया नूनं सिद्धिपते ! दुष्टाः संवर्द्धिता भृशम् ।।२१।।

अवतारांश्च साधूनां रक्षणाय बिभर्षि हि ।
इयं न नाशिता दुष्टा स्वैरिणी रूपगर्विता ।।२२।।

कथं मम शरीरं तत् काञ्चनस्पर्द्धि सुन्दरम् ।
इमामवस्थां सम्प्राप्तः केन वा दुष्टकर्मणा ।।२३।।

तव भक्तिं यथापूर्वं सदा कुर्वे यथाविधि ।
त्वदन्यं नैव शरणं यामि नाथ ! गजानन ।।२४।।

**नारदजीले भन्नुभयो** - यस्तो भनेर कामबाणद्वारा पीडित भएकी ती मुकुन्दाले वेगपूर्वक दौडेर आई रुक्माङ्गदलाई समाती आलिङ्गनपाशमा बाँधिन् र हठपूर्वक उनको मुखमा धेरै बेर चुम्बन गरिन् । त्यसपछि राजा रुक्माङ्गदले आफ्नो शक्ति लगाएर उनलाई भुइँमा टाढै फालिदिए ।।११-१३।। हावाले ढलेको केराको स्तम्भ झैं भुइँमा लडेकी ती मुकुन्दा मूर्च्छित भइन् । तिनी ब्यूँझिएपछि परस्त्रीगमनजस्ता कुकर्मबाट बुद्धिलाई निवृत्त गराएका राजा रुक्माङ्गदले भने - 'हे विवेक नभएकी मुनिपत्नी ! जुन नारी परपुरुषमा आसक्त हुन्छिन् ती नरकमा जान्छिन् । सागर सुकेर जानसक्छ, तर मेरो मन परस्त्रीको सौन्दर्य हेरेर कहिले चञ्चल हुँदैन । तसर्थ तपाईंले मप्रति आसक्ति नदेखाउनुहोस्।' यसरी रुक्माङ्गदद्वारा निषेध गरिएकी ती मुकुन्दाले क्रुद्ध भएर सराप दिँदै भनिन् ।।१४-१६।। 'हे राजा रुक्माङ्गद ! मलाई तपाईंले ठूलो कष्ट दिनुभयो, त्यसकारण तपाईं कुष्ठरोगी बन्नुहोस्। तपाईंको मन वज्रभन्दा पनि कठोर रहेछ, किनभने त्यो मन मजस्ती भर्खरकी युवती नारीले कामक्रीडाका लागि प्रार्थना गर्दा पनि पग्लिएन'।।१७।। यसरी सराप दिने ती ऋषिपत्नीलाई बेस्सरी हप्काएर ती राजा दुःखी मनले तीव्रगतिका साथ आश्रमबाट बाहिर आए ।।१८।। तुरुन्तै तिनले आफ्नो शरीरको रङ्ग बकुल्लाको शरीरझैं सेतो स्वरूपमा परिणत भएको देखे । कुष्ठरोगले पीडित तिनको शरीर कान्तिहीन र घृणित भइसकेको थियो ।।१९।। चिन्ताको सागरमा डुबेका राजाले भगवान् गजाननसँग प्रार्थना गर्दै भने - हे प्रभु ! मैले आज कुन अपराध गरें ? म किन मुनिको आश्रममा आएँछु ? प्यास मेटाउन आउँदा मैले किन दुष्ट मुनिपत्नीको सङ्गतिमा पर्नुपर्‍यो ? हे सिद्धिपति श्रीगणेश प्रभु ! हजुरले यस संसारमा किन दुष्ट मानिसहरूको संरक्षण र संवर्धन गर्नुभएको छ? हजुरले त सज्जनहरूको रक्षाका लागि अवतार लिनुहुन्छ । मुकुन्दाजस्ती रूपगर्वित वेश्या नारीको नाश किन गर्नुहुन्न ? ।।२०-२२।। कुन पापले सुन झैं चम्किलो र सुन्दर मेरो शरीर आज यो दुर्गतिमा प्राप्त भएको छ ? यस अवस्थामा पनि मैले पहिले झैं हजुरको विधिपूर्वक भक्ति गर्नेछु । हे गजानन ! हजुरबाहेक अरू कुनै देवताको पनि

नेदं शरीरं वक्त्रं वा दर्शयिष्ये जनं प्रति ।
प्रायोपवेशनेनेदं शोषयिष्ये कलेवरम् ।।२५।।

निश्चित्यैवं नरपतिरास न्यग्रोधसन्निधौ ।
भृत्या इतस्ततोऽधावन् नेक्षन्ते स्म च तं नृपम् ।।२६।।

प्रवृत्तायां निशायां च जग्मुः स्वं स्वं निकेतनम् ।
स्वामिसेवकयोर्जाता गतिश्चक्राह्वयोरिव ।।२७।।

शरणमा म जान चाहन्नँ ।।२३-२४।। अब म आफ्नो यो शरीर र मुख कसैलाई पनि देखाउन चाहन्नँ। अनशन गरेर यो शरीरलाई ठाडै सुकाउँछु।।२५।। राजा रुक्माङ्गद यसरी निश्चय गरी वट-वृक्षको फेंदमा बसे। राजाका अनुचरहरूले तिनलाई यता-उति खोजिरहेका थिए तर देख्न सकेनन्। रात परेपछि ती अनुचरहरू आ-आफ्ना घरतर्फ लागे । यसरी स्वामी र सेवकहरूको गति चखेवा र चखेवीको जस्तो भयो ।।२६-२७।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे प्रायोपवेशनं नामाष्टाविंशोऽध्यायः

प्रा.डा. वेणीमाधव वकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'ऋषिपत्नीद्वारा अभिशप्त रुक्माङ्गदको चिन्तित अवस्था र अनशन' शीर्षकान्वित अट्ठाइसौँ अध्याय पूर्ण भयो ।।२८।।

ॐ

## ऊनत्रिंशोऽध्यायः { २९ अध्याय }

मुनिरुवाच

तस्मिन् वटे समासीनः कस्मिँश्चिद् दिवसे नृपः ।
दूराद् ददर्श देवर्षिं नारदं मुनिपुङ्गवम् ।।१।।

ननाम प्रार्थयामास क्षणं विश्राम्यतामिति ।
उत्ततार नभोमार्गान्नारदः करुणानिधिः ।।२।।

पूजयित्वा यथाशक्ति पप्रच्छ मुनिमादरात् ।
अहं रुक्माङ्गदो नाम भीमपुत्रो महाबलः ।।३।।

मृगयां व्याचरन् वाचक्नवेराश्रममागतः ।
जलयाञ्चा कृता तत्र तृषितेन मयाऽनघ ।।४।।

तस्य पत्नी भृशं नष्टा कामार्ता मामचुम्बत ।
तस्मिन् मुनौ गते स्नातुं दुष्टभावेन चेतसा ।।५।।

उवाच मां भजस्वेति कामबाणप्रपीडिता ।
जितेन्द्रियतया देवप्रसादात् सा निराकृता ।।६।।

अशपद् दुःखिताऽत्यन्तं सा मां निष्ठुरचेतसा ।
कुष्ठी भव महादुष्ट ! सकामां त्यजसे यतः ।।७।।

रुक्माङ्गद उवाच

श्रुत्वैवं दुष्टवचनं निर्गतोऽहं तदाश्रमात् ।
श्वेतकुष्ठी तदा जातो वद मे निष्कृतिं मुने ।।८।।

वियोगान्मम भीमोऽपि मग्नः स्याद् दुःखसागरे ।
श्रुत्वेत्थं वचनं तस्य नारदः प्राह विश्ववित् ।।९।।

उपायं तस्य कुष्ठस्य नाशाय करुणायुतः ।

नारद उवाच

आगच्छता मया मार्गे दृष्टमाश्चर्यमुत्तमम् ।।१०।।

**भृगुले भन्नुभयो -** वटवृक्षको समीपमा बसेका राजा रुक्माङ्गदले एक दिन आकाशमार्गमा आइरहेका मुनिश्रेष्ठ नारदजीलाई टाढैबाट देखे । रुक्माङ्गदले नारदजीलाई प्रणाम गरेपछि भने – हे ऋषिवर! हजुर यहाँ आउनुहोस् र केहीबेर विश्राम गर्नुहोस् । परम दयालु नारदजी पनि तिनको प्रार्थना सुनेर आकाशमार्गबाट भुइँमा अवतरण गर्नुभयो ।।१-२।। रुक्माङ्गदले आफ्नो शक्तिअनुसार स्वागत-सत्कार गरेपछि नारद मुनिसँग भलाकुसारी गरी आफ्नो परिचय दिँदै भने - हे निष्पाप मुनिवर! म राजा भीमको छोरा महाबली रुक्माङ्गद हुँ । एक दिन शिकार खेल्दै म वाचक्नवि ऋषिको आश्रममा आइपुगें । त्यस बेला म प्यासले व्याकुल थिएँ र जलको याचना गरें । ऋषि वाचक्नवि नुहाउन जलाशयतर्फ जानुभएपछि उहाँकी अत्यन्त चरित्रहीन पत्नी मुकुन्दाले कामातुर भई मलाई चुम्बन गरिन् । दुष्ट भावनाले भरिएको चित्तबाट तिनले मसँग रतिक्रीडा गर भनिन् । श्रीगणेशको कृपा र म आफै जितेन्द्रिय भएको कारणबाट पनि मैले उनको प्रार्थना लत्याएँ ।।३-६।। त्यसो गर्दा अत्यन्त दुःखित भएकी ती मुनिपत्नीले निष्ठुर वचनद्वारा मलाई सराप दिँदै भनिन्- तिमीले म कामक्रीडा गर्न चाहने कामातुर युवतीको तिरस्कार गरेका छौ, तसर्थ तिमी कुष्ठरोगी बन ।।७।।

**रुक्माङ्गदले भने -** यस्तो कठोर सराप सुनेर म त्यस आश्रमबाट बाहिर आएँ । आउनासाथ मैले आफ्नो शरीरलाई सेतो कुष्ठरोगले ग्रस्त भएको पाएँ । हे मुनिवर ! मेरो रोगको उपचार गर्ने उपाय के छ ? त्यो बताइदिनुहोस् ।।८।। उता घरमा मेरा पिता राजा भीम पनि मेरो वियोगका कारण दुःखको सागरमा डुब्नुभएको हुनसक्छ । रुक्माङ्गदका यी कुरा सुनेर विश्वघटनाका प्रत्यक्षदर्शी दयालु नारद ऋषिले कुष्ठरोग नाश गर्ने उपाय बताउँदै भन्नुभयो ।

**नारदजीले भन्नुभयो -** हे रुक्माङ्गद! अहिले बाटोमा आउँदा मैले एउटा उत्तम आश्चर्य देखें ।।९-१०।। विदर्भ

विदर्भे नगरं ख्यातं कदम्बमिति संज्ञया ।
तत्प्रासादे मया दृष्टा मूर्तिर्वैनायकी शुभा ।।११।।

चिन्तामणिरिति ख्याता सर्वेषां सर्वकामदा ।
तस्याऽग्रतो महाकुण्डं गणेशपदपूर्वकम् ।।१२।।

कश्चिच्छूद्रो महाकुष्ठी जराजर्जरितो नृप !
तीर्थयात्राप्रसङ्गेन कदम्बपुरमागतः ।।१३।।

गणेशकुण्डे स्नात्वैव दिव्यदेहमवाप सः ।
विनायकस्वरूपैस्तु गणैरानीतमम्बरात् ।।१४।।

विमानवरमारुह्य स गतः स्थानमुत्तमम् ।
यत्र गत्वा न शोचन्ति न पतन्ति पुनः क्वचित् ।।१५।।

दृष्टो मयैव राजेन्द्र ! तत्र स्नानाय साम्प्रतम् ।
स्नात्वा देवं समभ्यर्च्य चिन्तितार्थप्रदं विभुम् ।।१६।।

देहि दानानि विप्रेभ्यः सद्यः पूतो भविष्यसि ।
जीर्णां त्वचं परित्यज्य सुरूपी भुजगो यथा ।।१७।।

ब्रह्मोवाच

इति वाणीं नारदोक्तां निशम्य नृपसत्तमः ।
न किञ्चिदुक्तवान् वाक्यं मग्न आनन्दसागरे ।।१८।।

गन्तुं समुद्यते तस्मिन्नारदे मुनिपुङ्गवे ।
प्रणिपत्य ततोऽपृच्छत् प्रपूज्य च मुनिं पुनः ।।१९।।

रुक्माङ्गद उवाच

तस्मिन् क्षेत्रे पुरा केन सिद्धिः प्राप्ता शुभाऽनघ।।२०।।

मूर्तिश्च स्थापिता केन मणिरत्नमयी शुभा ।
वैनायकीति मे शंस परं कौतूहलं मुने ।।२१।।

भवादृशानां साधूनां परोपकरणे मतिः ।
अन्यथा भ्रमणे कृत्यं न लोकेषु प्रदृश्यते ।।२२।।

देशमा कदम्बपुर-नामक एउटा विख्यात नगर छ। त्यस नगरमा रहेको एउटा मन्दिरमा मैले सबैको इच्छा परिपूर्ण गराउने चिन्तामणिका नामबाट प्रसिद्ध भगवान् श्रीगणेशको पवित्र मूर्तिको दर्शन गर्ने अवसर पाएँ। मन्दिरको अगाडि श्रीगणेशमहाकुण्ड रहेछ।।११-१२।। वृद्ध र कुष्ठरोगले ग्रस्त कुनै शूद्र जातिको मानिस एक दिन तीर्थयात्राको प्रसङ्गले कदम्बपुरमा आएको रहेछ । त्यसले श्रीगणेशकुण्डमा स्नान गर्नासाथ दिव्य शरीर प्राप्त गर्‍यो । विनायकजस्तै आकृति भएका विनायकका गणहरूले त्यो शूद्रलाई भुइँमा ओरालेको विमानमा सवार गराई जहाँ गएर कुनै चिन्ता लिनुपर्दैन र जन्मनका लागि धर्तीमा आउन पनि पर्दैन त्यस्तो उत्तमधाममा प्राप्त गराए ।।१३-१५।। हे राजन् ! आज मैले स्नानका लागि सर्वथा उत्तम त्यो महिमामय श्रीगणेशकुण्डको दर्शन गरें । श्रीगणेशकुण्डमा गई स्नान गरेमा तपाइँको कुष्ठरोग नाश हुनसक्छ। तपाईं अहिले छिटै त्यहाँ गई श्रीगणेशकुण्ठमा स्नान गरेर मनकामना पूरा गराउने भगवान् गजाननको पूजा गरी ब्राह्मणहरूलाई दान दिनुहोस् । त्यसपछि तपाईं पवित्र र सुन्दर हुनुहुनेछ । जस्तै सर्प काँचुली फेरेपछि सुन्दर देखिन्छ त्यस्तै तपाईं पनि रोगनिवृत्त भएपछि आकर्षक देखिनुहुनेछ ।।१६-१७।।

**ब्रह्माजीले भन्नुभयो** - नारदजीले भनेका यी कुरा सुनेर राजा रुक्माङ्गद आनन्दमा मग्न भए । तीव्र आनन्दानुभूतिका बेला ती केही पनि बोल्न सकेनन् । मुनिश्रेष्ठ नारद बिदा हुन लागेपछि उनको पाउमा परेर प्रशंसा र पूजा गर्दै रुक्माङ्गदले निवेदन गरे ।।१८-१९।।

**रुक्माङ्गदले भने** - हे निष्पाप मुनि ! विदर्भको त्यस पुण्यक्षेत्रमा पहिले कसले सिद्धि प्राप्त गर्‍यो ? मणिमय र मङ्गलमय त्यो गजानन मूर्तिको कसले प्रतिष्ठा गर्‍यो ? मलाई बताउनुहोस् । यो कुरा जान्न मेरो ठूलो कौतूहल रहेको छ ।।२०-२१।। हजुरजस्ता महात्माहरूको बुद्धि परोपकारमा लागेको हुन्छ । त्यस कारण हजुरहरू जगत्मा परोपकारकै लागि घुम्ने गर्नुहुन्छ । नत्र भने स्वयंमा परिपूर्ण हजुरहरूका लागि भ्रमणको कुनै आवश्यकता रहँदैन।।२२।। परोपकारका

लोकेषु वर्षते मेघः शेषेण ध्रियते धरा ।
उपकाराय सूर्योऽपि भ्रमतेऽहर्निशं द्विज ।।२३।।

समस्य सर्वभूतेषु सर्वज्ञस्य तवाग्रतः ।
अनभिज्ञेन मूढेन किं वक्तव्यं दयानिधे ।।२४।।

पृच्छे तथापि देवर्षे ! संशयच्छेदनाय वै ।

नारद उवाच

साधु पृष्टं त्वया भूप ! लोकानुग्रहकारक !।२५।।

तृप्तोऽहं तव वाक्येन सर्वज्ञ कथयामि ते ।।२६।।

लागि बादलले वर्षा गराउँछ, शेषनागले धराधारण गर्दछन् र सूर्य अहर्निश आकाशमण्डलमा भ्रमण गर्दछन्, हे दयासागर महर्षि ! सबै प्राणीमा समदृष्टि राख्ने सर्वज्ञ तपाईंका सामु केही नजानेको म मूढ मानिसले धेरै के बिन्ती गरूँ ।।२३-२४।। त्यसो हो ता पनि हे देवर्षि ! संशयनिराकरणका लागि मैले हजुरसँग केही सोध्ने जमर्को गरेको छु ।

**नारदजीले भन्नुभयो** - प्राणीमात्रमा दयादृष्टि राख्ने हे राजन् ! तपाईंले राम्रो कुरा सोध्नुभएको छ । तपाईंको वचनबाट म तृप्त भएको छु र तपाईंका प्रश्नहरूको उत्तर म दिनेछु ।।२५-२६।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे नारदागमनं नामैकोनत्रिंशोऽध्यायः

प्रा.डा. क्षेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'रुक्माङ्गदका समीपमा नारद ऋषिको आगमन' शीर्षकान्वित उनन्तीसौं अध्याय पूर्ण भयो ।।२९।।

ॐ

# त्रिंशोऽध्यायः { ३० अध्याय }

नारद उवाच

कदाचिदमरावत्यां शक्रं द्रष्टुं गतोऽस्म्यहम् ।
स मां सम्पूज्य विधिवदुवाचावनतो भृशम् ।।१।।

इन्द्र उवाच

किञ्चिदाश्चर्यभूतं मे सन्तोषाय मुने वद ।
भ्रमसे सर्वलोकाँस्त्वं विदितं सर्वमस्ति ते ।।२।।

नारद उवाच

मृत्युलोके मया दृष्टो गौतमस्याश्रमो महान् ।
नानावृक्षलताजालैर्नानापक्षिगणैर्युतः ।।३।।

अहल्यासहितं तत्र गौतमं दृष्टवानहम् ।
रूपं विलोक्य तस्यास्तु जातोऽहं कामविह्वलः ।।४।।

यस्या रूपेण सावित्री शची लक्ष्मीर्गिरीन्द्रजा ।
उर्वशी मेनका रम्भा लोके ख्याता तिलोत्तमा ।।५।।

केशा बाला यया ऽकारि साऽनसूयाप्यरुन्धती ।
छाया संज्ञा रवेर्भार्या कश्यपस्य च याऽदितिः ।।६।।

सदृशी नैव कापि स्यान्नागपत्नीषु वा क्वचित् ।
न च मे रोचते गानं न पूजा न च भोजनम् ।।७।।

ब्रह्मचर्यञ्च मे स्वीयं निद्राञ्च न लभे क्वचित् ।
त्वरावानहमायातो द्रष्टुं साध्वमरावतीम् ।।८।।

तुच्छां पश्य इमां देवीं विनाताममरावतीम् ।

नारद उवाच

इति शक्रं ब्रुवन्नन्तर्हितोऽहं नृपते वर ।।९।।

अन्तर्हिते मयि तदा मद्वाक्यं मनसा स्मरन् ।
जम्भभेदी मत्स्यकेतुविद्धो मूर्च्छामवाप सः ।।१०।।

**नारदजीले भन्नुभयो** - कुनै दिन म देवलोकको राजधानी अमरावतीमा देवराज इन्द्रको दर्शन गर्न गएको थिएँ । इन्द्रले मेरो विधिवत् सत्कार गरेपछि नम्र भएर मसँग कुरा गर्नुभएको थियो ।।१।।

**इन्द्रले भन्नुभयो** - हे नारदमुनि ! तपाईंले नबुझेको कुरा केही पनि छैन तापनि केही जान्न खोजेझैं तपाईं लोकलोकान्तरमा भ्रमण गरिरहनुहुन्छ । यो देखेर मलाई आश्चर्य लागेको छ । मेरो सन्तोषका निमित्त कृपापूर्वक मलाई उत्तर दिनुहोस् ।।२।।

**नारदजीले भन्नुभयो** - मैले कुनै दिन मृत्युलोकमा नानावृक्ष, लता र पुष्पले घेरिएको अनेक थरि पक्षीहरूको कलरवबाट गुञ्जायमान गौतमाश्रमको दर्शन गरेको थिएँ ।।३।। त्यस बेला त्यस आश्रममा मैले अहल्यासहित विराजमान गौतम ऋषिको दर्शन गरें । ऋषिपत्नी अहल्याको रूप-सौन्दर्य देखेर म साह्रै कामान्ध भएँ ।।४।। सावित्री, इन्द्राणी, लक्ष्मी, पार्वती, उर्वशी, मेनका, रम्भा, विश्वविख्यात तिलोत्तमा, ब्रह्मा, विष्णु र शिवजीलाई पनि बच्चाका रूपमा परिणत गराउन समर्थ पतिव्रताशिरोमणि अनसूया, अरुन्धती, सूर्यपत्नी- छाया एवं सन्ध्या, कश्यपकी पत्नी अदितिजस्ता विश्वविख्यात महानारीहरूको स्वरूपसौन्दर्य अहल्याको रूपमाधुरीका सामु फिका भएको देखें । त्यसै गरी अहल्याको सौन्दर्यसामु नागसुन्दरीहरूको रूपसौन्दर्य पनि मूल्यहीन बनेको थियो । अहल्याको सौन्दर्यचिन्तनका कारण हे देवराज ! मलाई अहिले वीणागान गर्न मन लागेको छैन, न त म ईश्वरपूजा गर्न मन पराउँछु ।।५-७।। न त मलाई खान-पिउन नै मन लाग्छ, मेरो ब्रह्मचर्य पनि मलाई मन परेको छैन र निद्रा लाग्दैन । रूपसौन्दर्यको दर्शनका कारण मन चञ्चल हुँदा कहाँ जाऊँ ? के गरूँ ? जस्तो भयो र हतारिएर तपाईंको अमरावती पुरी हेर्न आएको छु ।।८।। अहल्याजस्ती सुन्दरीको वास नभएको यो अमरावतीलाई पनि मैले तुच्छ ठानेको छु।

**नारदजीले भन्नुभयो** - हे राजन् ! यसरी इन्द्रसँग कुरा गर्दागर्दै म अन्तर्धान भएँ ।।९।। मेरो अन्तर्धानपछि मेरा कुरालाई मनमा खेलाउने इन्द्र अहल्याको रूप-सौन्दर्य सम्झेर

पश्ये कदा मुनेर्भार्यां गौतमस्येत्यचिन्तयत् ।
कदाधराऽमृतं प्राप्य मुच्येयं मदनानलात् ।।११।।
जीवितुं नैव पश्येऽन्यत्तदाश्लेषं विना शुभम् ।
एवं निश्चित्य सङ्कल्पं गौतमोऽभूत् स जम्भहा ।।१२।।
चिन्तयन्नेव तां मार्गे मुनेराश्रममाययौ ।
ददर्श तामहल्यान्तु स्नातुं याते स गौतमे ।।१३।।
अभ्यन्तरगत: प्रोचे प्रिये ! शय्यां शुभां कुरु ।
सा चोवाच जपं त्यक्त्वा कथमद्यागतो गृहम् ।।१४।।
दिवैव सुरतेच्छां किं कुरुषेऽतिविगर्हिताम् ।

गौतम उवाच

अहं स्नातुं गतो यावत् तावदेव वराप्सरा: ।।१५।।
तत्रैव स्नातुमायाता जाता नग्नाक्षिगोचरा ।
विम्बाधरा सुचार्वङ्गी चारुपीनपयोधरा ।।१६।।
न लग्नं मे मनो देवि ! जपे कामास्त्रपीडितम् ।
ततोऽहमाश्रमं यातो रतिं देहि प्रियेऽधुना ।।१७।।
नो चेत् कामाग्निना दग्धं मृतं मां क्व नु पश्यसि ।
शपे त्वां प्रव्रजिष्ये वा निग्रहीष्ये मनो भृशम् ।।१८।।

अहल्योवाच

स्वाध्यायं देवपूजाञ्च त्यक्त्वा किं प्रार्थ्यते रति: ।
नोचितं तव ब्रह्मर्षे ! तथाप्याज्ञां करोम्यहम् ।।१९।।
भर्त्तु: शुश्रूषणादन्यो धर्मो नास्ति स्त्रिया: क्वचित् ।

नारद उवाच

स्वराकृतिस्वभावै: सा ज्ञात्वा तं स्वामिनं निजम् ।।२०।।
विवेश शयने रन्तुमहल्या सह वज्रिणा ।
नि:शङ्कं चुम्बनाश्लेषनीवीविस्त्रंसनादिभि: ।।२१।।

कामातुर भई मूर्च्छामा परे ।।१०।। इन्द्रले मनमनै भने - मैले कुन बेला गौतमपत्नी अहल्याको दर्शन गर्ने सौभाग्य पाउँछु ? कहिले अहल्याको अधरामृतको पान गर्ने अवसर पाएर कामज्वालाबाट मुक्ति पाउँछु ? ।।११।। अहल्याको आलिङ्गनविना मेरो बाँच्ने उपाय छैन । यसरी मनमा सङ्कल्प गरेर इन्द्रले आफ्नो स्वरूप गौतम ऋषिसमान बनाई गौतम ऋषिको आश्रममा जान स्वर्गबाट प्रस्थान गरे । बाटोमा अहल्याको स्वरूपसौन्दर्यको चिन्तन गर्दै ती गौतम ऋषिको आश्रममा आइपुगे । गौतम ऋषि नुहाउन जलाशयतर्फ जानुभएपछि तिनले लुकेर आश्रममा प्रवेश गरी अहल्याको दर्शन गरे । आश्रमको अन्तरङ्ग कक्षमा गएर तिनले अहल्यालाई भने - हे प्रिये ! तिमीले राम्रो शय्या सजाऊ । अहल्याले भनिन् - हे प्रिय ! जप, ध्यान छोडेर तपाईँ किन घर फर्किनुभयो? ।।१२-१४।। किन दिउँसै कामक्रीडाको इच्छा गर्नुहुन्छ? दिउँसोमा कामक्रीडा गर्नु त साह्रै निन्दित विषय हो ।

**गौतम ऋषिरूप इन्द्रले भने** - म नुहाउन जाँदा त्यहाँ एउटी सुन्दरी अप्सरा पनि स्नान गर्न आइपुगिन् । बिम्बोष्ठी, सुकुमारी र पुष्ट छाती भएकी ती अप्सरालाई मैले नग्नावस्थामा देखें । तिनलाई देखेपछि कामबाणले घाइते भएको मेरो मन जप र ध्यानमा लाग्नै सकेन। त्यस कारण म तिमीसँग कामक्रीडा गर्ने रहरले आश्रममा फर्केको छु । मलाई रतिक्रीडा गर्ने अवसर देऊ ।।१५-१७।। मेरो अनुरोध स्वीकार गर्दिनौ भने म कामाग्निको ज्वालाले भस्म हुनेछु र तिमीले फेरि मलाई देख्न पाउने छैनौ। अथवा मैले तिमीलाई सराप दिन सक्नेछु । म जोगी भएर घर छाड्न सक्नेछु अथवा सबै समयका लागि मन बाँधेर बस्नेछु ।।१८।।

**अहल्याले भनिन्** - हे ब्रह्मर्षि ! स्वाध्याय र देवपूजन छाडेर तपाईँ कामक्रीडाको इच्छा गर्नुहुन्छ । यो राम्रो होइन । तापनि मैले मेरा पतिको आज्ञापालन गर्नै पर्छ ।।१९।। पतिव्रता नारीका लागि पतिसेवाबाहेक अरू धर्म हुँदैन ।

**नारदजीले भन्नुभयो** - अहल्याले स्वर, आकार र स्वभावबाट इन्द्रलाई आफ्नै पति गौतम ऋषि हुन् भन्ने ठहऱ्याइन् र तिनका साथ रमण गर्न शय्यामा गइन् । इन्द्रले पनि गौतमको आकार-प्रकार लिएर अहल्याका साथ आनन्दपूर्वक चुम्बन, आलिङ्गन र निर्वस्त्रीकरण जस्ता

आकृत्या गौतमस्यैवं चिक्रीडे जम्भहा तया ।
दिव्यान् गन्धानुपाघ्राय चकिता शङ्किता भृशम् ।।२२।।

तर्कयामास मनसि किमयं कूटरूपवान् ।
कलङ्कोऽयं मम भृशं चन्द्रस्येव भवेन्नु किम् ।।२३।।

उभे कुले मे नष्टे किं दुष्टस्यास्य तु सङ्गमात् ।
दर्शयिष्ये कथं लोकेऽयशःश्यामं मुखं त्विदम् ।।२४।।

नयिष्यति गतिं कां मे प्रियो भर्ता तु मां मुनिः ।
पप्रच्छ तं शठं कोपात् कोऽसि त्वं कूटरूपधृक् ।।२५।।

विश्वस्ता स्वामिरूपेण वद नो चेच्छपामि ते ।
इत्युक्तः शापभीतोऽसावाविश्चक्रे निजं वपुः ।।२६।।

दिव्याभरणसंयुक्तं किरीटकटकान्वितम् ।
कुण्डलाद्भुतदीप्तिभिर्विलसन् मुखपङ्कजम् ।।२७।।

उवाच स ततस्तान्तु विद्धि मां त्वं शचीपतिम् ।
लावण्यदर्शनात् तेऽहं विह्वलो मदनाग्निना ।।२८।।

न लेभे कुत्रचिच्छर्म तत इत्थं कृतं मया ।
इतोऽपि मां भजस्व त्वं त्रैलोक्येश्वरमादरात् ।।२९।।

श्रुत्वेत्थं वचनं तस्य मुनिपत्नी रुषान्विता ।
वमन्तीव मुखाज्ज्वालां जगाद त्रिदशाधिपम् ।।३०।।

अस्य ते वपुषो मूढ ! मद्भर्तरि समागते ।
अवस्था का भवेन् मन्द ! न जानेऽहं शतक्रतो ।।३१।।

पातिव्रत्यं त्वया भग्नं दुष्ट ! पापीयसा मम ।
कामवस्थां गमिष्यामि शापाद् गौतमवाग्भवात् ।।३२।।

क्रियाकलापका साथ कुनै शङ्का नमानी धेरै बेरसम्म रतिक्रीडा गरे । रमण गर्दा अहल्या अचम्मको दिव्य गन्ध महसुस गरी अत्यन्त चकित र शङ्कित पनि भइन् ।।२०-२२।। तिनले मनमा तर्कना गरिन् - 'के यो कुनै छली पुरुष हो ? के अब मैले चन्द्रमाले झैं कलङ्क बेहोर्नु पर्नेछ ? ।।२३।। यस दुष्ट पुरुषसँग गरिएको कामक्रीडाबाट मेरा दुबै कुल कलङ्कित त हुने होइनन् ? त्यस बेला मैले आफ्नो दुष्कर्मका कारण कालो बन्न पुगेको आफ्नो अनुहारलाई संसारका सामु कसरी देखाउँली? मेरा प्यारा पति गौतमले मलाई कुन अवस्थामा पुर्‍याउनु होला?' यस्तो तर्कनापछि स्पष्टरूपमा अहल्याले त्यस छली पुरुषलाई सोधिन् - 'हे पुरुष! नक्कली रूप बनाएर मेरो धर्म लुट्ने तिमी को हौ ? मैले त तिमीलाई मेरै स्वामीको रूपमा देखेर विश्वास गरें ? तर तिमीले मलाई ठग्यौ, भन तिमी को हौ ? अन्यथा मैले तिमीलाई सराप दिनेछु ।' यसरी अहल्याले भनेपछि सरापले भयभीत इन्द्रले आफ्नो सक्कली स्वरूप देखाए ।।२४-२६।। दिव्य अलङ्कार, किरीट र कटकले शोभायमान, कुण्डलको दीप्तिबाट चम्किलो मुखमण्डल भएका इन्द्रले कम्पायमान हुँदै भने - हे अहल्या ! मलाई तिमीले शचीपति इन्द्रका रूपमा जान । तिम्रो सौन्दर्य देखेर कामातुर हुँदा मैले कहीं पनि शान्ति पाउन सकिनँ । त्यस कारण तिमीसँग मैले यो व्यवहार गरें । जे भयो सो भयो, अब तिमीले त्रिलोकीको स्वामी म इन्द्रलाई पतिभावले स्वीकार गर ।।२७-२९।। इन्द्रका ती कुरा सुनेर अत्यन्त क्रुद्ध भएकी अहल्याले मुखबाट आगाको ज्वाला छुटाउँदै इन्द्रलाई भनिन्- हे इन्द्र! मेरा पति फर्केर आएपछि तिम्रो शरीरको कुन अवस्था हुनेछ भन्ने कुरा म अहिले भन्न सक्दिनँ । तिमी दुष्ट र पापी रहेछौ । तिमीले मेरो पतिव्रताधर्म नष्ट गर्‍यौ । अब गौतम ऋषिको सरापले गर्दा मेरो कुन दशा हुने हो ? ।।३०-३२।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डेऽहल्याधर्षणं नाम त्रिंशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'इन्द्रद्वारा अहल्याको पातिव्रत्य भङ्ग' शीर्षकान्वित तीसौं अध्याय पूर्ण भयो ।।३०।।

ॐ

# एकत्रिंशोऽध्याय: { ३१ अध्याय }

रुक्माङ्गद उवाच

आगते गौतमे को वा वृत्तान्तोऽभून्महामुने ! ।
वद मे सकलं तन्नु जिज्ञासा महती मम ।।१।।

नारद उवाच

नित्यकर्म समाप्यैव स्वाश्रमं गौतमो ययौ ।
आकार्य निजपत्नीं तां देहि पादोदकं मम ।।२।।

किमर्थं नागताऽद्य त्वं सम्मुखं मम पूर्ववत् ।
नानीतमासनं कस्मात् कथं चारु न भाषसे ।।३।।

श्रुत्वेत्थं वचनं तस्य वेपमाना लतेव सा ।
अधोमुखी विनिर्गम्य मुहूर्त्तान्मुनिमाययौ ।।४।।

साष्टाङ्गं पतिता भूमौ तत्पादोपरिमस्तका ।
विह्वला शापभीता सा शनैरथ जगौ मुनिम् ।।५।।

उषसि त्वं प्रयातोऽसि स्नानं कर्तुं निजं विधिम् ।
तव रूपधरो दुष्टो देवेन्द्रो मामुवाच ह ।।६।।

दृष्टा वराऽप्सराभ्योऽपि सुन्दरी कामिनी मया ।
न मे मनो जपे दैवे विधौ नित्ये स्थिरं भवेत् ।

परावृत्यागतस्तस्माद्रतिं मे देहि शोभने ।।७।।
त्वमेवेति मया भ्रान्त्या कृतं वाक्यं तथैव तत् ।

दिव्यगन्धानुपाघ्राय विकल्पो मेऽभवत् पुन: ।।८।।
दुरात्मन् ! कोऽसि नो ब्रूहि नो चेद् भस्म भविष्यसि।
इति शापभयाज्जात: प्रकटो बलसूदन: ।।९।।

तावदेव भवद्वाक्यं श्रुतन्तु मुनिसत्तम !
लज्जया नागता शीघ्रमपराधं क्षमस्व मे ।।१०।।

रुक्माङ्गदले भने - गौतम ऋषि स्नान गरेर फर्किनु भएपछि त्यहाँ के के भयो मलाई राम्ररी जानकारी गराउनुहोस्। त्यो सुन्न मलाई ठूलो कौतूहल लागेको छ ।।१।।

नारदजीले भन्नुभयो- नित्यकर्म समाप्त गरेपछि महर्षि गौतम आफ्नो आश्रममा आउनुभयो । आफ्नी पत्नीलाई सम्बोधन गरेर मलाई पाउ पखाल्न जल देऊ भन्नुभयो । उनी तत्काल भित्रबाट बाहिर नआएपछि उहाँले फेरि भन्नुभयो - आज तिमी पहिलेझैं मेरा सामु किन आउँदिनौ ? किन आसन ल्याउँदिनौ? र किन नजिकै आएर मीठा कुरा गर्दिनौ ? ।।२-३।। गौतमका ती कुरा सुनेर लताझैं काँप्दै लाजले भुइँमा हेरिरहेकी ती अहल्या एक मुहूर्तपछि मात्र पतिका सामु आइन् ।।४।। भुइँमा श्रद्धापूर्वक साष्टाङ्ग प्रणाम गरी मुनिका पाउमा शिर राखेर नुहेकी व्याकुल र सरापबाट भयभीत ती अहल्याले सुस्तरी भनिन् ।।५।। हे प्राणनाथ ! बिहान हजुर नुहाउन र सन्ध्याविधि सम्पन्न गर्न आश्रमबाट बाहिर जानुभएपछि हजुरकै रूपधारण गरी मेरा सामु आएर दुष्ट इन्द्रले मलाई भन्यो - 'अप्सराहरूमध्ये अत्यन्त राम्री अप्सरा मैले देखें, मेरो मन जप, तप र नित्यकर्ममा लागेन, त्यस कारण म फर्केर आश्रममा आएको छु । तसर्थ हे सुन्दरी ! मलाई रतिक्रीडा गर्ने अवसर देऊ' ।।६-७।। यसरी रतिको याचना गर्ने पुरुष हजुर नै हो भन्ने विश्वास गरेर मैले अह्राए अनुसार गरें । रतिक्रीडाको अवसरमा दिव्य गन्ध सुँघेरमात्र मेरो मनमा तर्क चल्यो र मैले भनें - हे दुरात्मा ! तिमी को हौ? भन, अन्यथा म भर्खरै तिमीलाई खरानी बनाइदिन्छु । मैले यसरी भनेपछि सरापको डरले गर्दा त्यो पुरुष इन्द्रका रूपमा प्रकट भयो ।।८-९।। त्यस घटनाको लगत्तैपछि मैले हजुरको वाक्य सुनें । लाजले गर्दा म तत्काल हजुरका सामु आउन सकिनँ । हे प्राणेश्वर ! मेरो अपराध भयो, त्यसलाई हजुरले क्षमा गर्नुहोस् । आफ्नो अपराध आफैं बताउँदा दोष लाग्दैन तर अरूले बताउँदा भने दोष

स्वयं निवेदनेऽदोषोदोषो परनिवेदने ।
मन्त्रायुर्गृहरन्ध्रश्रीरतयश्चौषधानि च ।।११।।

मानापमानदानानि प्रकटानि न कारयेत् ।
इत्थं निशम्य स मुनिः कोपव्याकुलितेन्द्रियः ।।१२।।

शशाप वनितां स्वीयां दुःशीले त्वं शिला भव ।
नाज्ञासीर्मे स्वरूपं तं स्वभावं चेष्टितानि च ।।१३।।

परे पुंसि निमग्नं ते यतश्चेतोऽतिकामुके ।
यदा दाशरथी रामो भ्रमेद्राजा वने वने ।।१४।।

तस्याङ्घ्रिस्पर्शनादेव स्वरूपं प्रतिपत्स्यसे ।

नारद उवाच

तदैव सा शिला जाता तपोनिधिवचोबलात् ।।१५।।

तस्याः शापं समाकर्ण्य चकम्पे पाकशासनः ।
प्रकम्पनस्य संयोगाद् हिमवान् पर्वतो यथा ।।१६।।

तर्कयामास मनसि कथं कार्यं मयाऽधुना ।
समुद्रमध्ये कूपे वा तडागे कमलेऽथवा ।।१७।।

लीनो भूत्वा यदा स्थास्ये तदा ज्ञास्यति मां मुनिः ।
अतो बिडालरूपेण विचचार स वज्रभृत् ।।१८।।

गौतमस्तमचक्षाणो गृहे द्वारि तथाश्रमे ।
क्व गतो दानवरिपुर्यो मे भार्याविदूषकः ।।१९।।

ध्यानेन बुबुधे तन्तु क्षणेन मुनिसत्तमः ।
न ते भस्म करिष्यामि देवेन्द्रोऽसि यतः खलः ।।२०।।

शपामि त्वां शचीभर्तः ! सहस्रभगवान् भव ।
श्रुतवान् वचनं यावद् रोषेण मुनिनेरितम् ।।२१।।

तावद् ददर्श स्वं देहं सहस्रभगचिह्नितम् ।
ततो दुःखार्णवे मग्नः शुशोच बलवृत्रहा ।।२२।।

इन्द्र उवाच

अहं शिक्षापितो वृद्धैर्नानाधर्माननेकशः ।
वृद्धानां वचनं यन्मे न विचारितमादरात् ।।२३।।

लाग्छ । मन्त्र, आयु, घरको झगडा, सम्पत्ति, रतिक्रीडा, औषधि, मान-अपमान र दानमा आधारित रहस्य आफैंले प्रकट गर्न हुँदैन भनिएको छ। यसरी अहल्याको कुरा सुनेपछि गौतम ऋषि साह्रै रिसाउनु भयो ।।१०-१२।। त्यसपछि उहाँले आफ्नी पत्नी अहल्यालाई सराप दिंदै भन्नुभयो - तिमी शिला बन । तिमीले परपुरुष एकान्तमा आउँदा मेरो रूप, स्वर र चेष्टाको ख्याल गरिनौ । हे कामुकी ! तिम्रो मन परपुरुषमा आसक्त भयो । जब दशरथका छोरा श्रीराम वनमा घुम्दैघुम्दै यहाँ आउनुहुनेछ, तब उहाँका पाउको स्पर्श पाएर तिमीले आफ्नो स्वरूप प्राप्त गर्नेछ्यौ ।

**नारदजीले भन्नुभयो-** त्यसपछि ती अहल्या तपोनिधि गौतमको सरापबाट शिलाको रूपमा परिणत भइन्।।१३-१५।। अहल्यामाथि सराप परेको थाहा पाएपछि इन्द्र पनि आँधी आउँदा हिमालय पर्वत काँपिझैं थर्थर काँप्न लागे।।१६।। इन्द्रले मनमनै विचार गरे - 'मैले अब के गरूँ ? समुद्रको बीचमा, कुवामा, तलाउमा अथवा कमलमा लुकेर रहुँ भने पनि ती मुनिले तपोबलबाट चाल पाउँछन् ।' यसरी तर्क गरेपछि ती इन्द्र बिरालाको रूप लिएर विचरण गर्न थाले ।।१७-१८।। गौतम ऋषिले घर, द्वार, आश्रम र अन्त कतै पनि इन्द्रलाई नदेखेर पत्नीको धर्म नष्ट गर्ने दानवरिपु इन्द्र कहाँ गयो ? भन्दै चारैतिर हेर्नुभयो । उहाँले तुरुन्तै ध्यानदृष्टिबाट इन्द्रलाई बिरालाको रूपमा डुलेको थाहा पाउनुभयो । त्यस बेला उहाँले भन्नुभयो- 'हे शचीपति ! म तिमीलाई भस्म त गर्दिनँ, किनकि तिमी देवताका राजा हौ । परन्तु तिमी नीच र दुष्कर्मी पनि छौ । त्यस कारण तिम्रो शरीरमा हजार योनिका चिह्न पैदा हुनेछन् । मेरो सराप यही हो ।' जब इन्द्रले मुनिद्वारा दिइएको सरापवचन सुने, त्यस बेला तुरुन्तै आफ्नो शरीरलाई एक हजार योनिको चिह्नबाट चिह्नित भएको पाए । त्यसपछि दुःखको सागरमा डुबेका इन्द्र शोक गर्न लागे ।।१९-२२।।

**इन्द्रले भने -** वृद्ध पुरुषहरूले मलाई अनेक थरि धर्मको उपदेश दिनुभएको थियो । मैले आज वृद्धवचनको

स्वबुद्धिर्हितकृत् सर्वा विनाशाय परेरिता ।
गुरोर्गरीयसी बुद्धिः क्षयदा कामिनीमतिः ।।२४।।

कुतो नारदवाक्येन यातोऽहं तामनिन्दिताम् ।
देवराजोऽभवन्नास्यं लोकानां दर्शये कथम् ।।२५।।

अनादर गरें। आफ्नो बुद्धिले काम गर्दा जहिले पनि कल्याण हुन्छ, अरूका बुद्धिमा लागेर काम गरियो भने त्यसले मानिसलाई विनाशको गोरेटोमा पुऱ्याउँछ । गुरुजनको बुद्धि गम्भीर र महान् हुन्छ, कामिनीमा लाग्ने बुद्धिले जहिले पनि आत्मनाश गराउँछ । किन म नारदजीका कुरा सुनेर अनिन्दनीय चरित्र भएकी अहल्याको छेउमा गएँ ? आज आफूलाई देवराज हुँ भन्दै संसारका सामु शरीर र मुख कसरी देखाऊँ ?।।२३-२५।।

दिव्यदेहो गतः क्वाद्य निजभार्यां वदे नु किम् ।
धिङ् माञ्च धिक् स्मरं येन प्रापितो गर्हितां दशाम्।।२६।।

प्राणिभिर्भुज्यते कर्म शुभं वा यदि वाऽशुभम् ।
तिर्यग्योनिं समासाद्य क्षपयिष्येऽघमात्मनः ।।२७।।

नलिनीकुड्मले तिष्ठे हीन्द्रगोपकरूपधृक् ।।२८।।

मेरो त्यस्तो दिव्य शरीर आज कहाँ गयो ? मेरी पत्नी इन्द्राणीलाई मैले के भनेर चित्त बुझाऊँ ? मलाई धिक्कार छ र त्यो कामदेवलाई पनि धिक्कार छ जसले मलाई आज यो घृणित अवस्थामा पुऱ्याएको छ । प्राणीहरूले आफूले गरेका शुभ अथवा अशुभ कर्महरूको फल भोग्नुपर्छ । अब मैले तिर्यक्योनि लिएर आफ्नो पाप कटाउने छु । मैले इन्द्रगोप (वीरबहूटी अथवा ओरिगाँठि) कीराको रूप धारण गरी कमललताको कोपिलालाई आफ्नो आश्रय बनाउनेछु ।।२६-२८।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे शक्रशापवर्णनं नामैकत्रिंशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'महर्षि गौतमद्वारा इन्द्र र अहल्यालाई सराप' शीर्षकान्वित एकतिसौं अध्याय पूर्ण भयो ।।३१।।

ॐ

## द्वात्रिंशोऽध्यायः { ३२ अध्याय }

नारद उवाच

शक्रे तु नलिनीं याते तत्पुरं त्वहमागतः ।
बृहस्पतिपुरोगाँस्ताँस्तत्रापश्यं स्थितान् सुरान् ।।१।।

तेभ्यो ह्यकथयं सर्वमुभयोः शापकारणम् ।
अहल्याया महेन्द्रस्य संयोगञ्च विरूपताम् ।।२।।

सहस्रभगतां यातः शक्रो गौतमशापतः ।
अहल्याधर्षणाद् देवास्तत्सङ्गात् सा शिलाऽभवत् ।।३।।

ब्रह्मोवाच

श्रुत्वा ते नारदोक्तं तत् सर्वे देवाः शुचान्विताः ।
अतिदुःखाद् रुदन्तस्ते निश्वासोच्छ्वासविभ्रमैः ।।४।।

देवा ऊचुः

येनाकारि शतं यज्ञा दानवा येन निर्जिताः ।
त्रैलोक्यं पालितं येन भुक्तमैन्द्रपदं शुभम् ।।५।।

पूजिता बहवो देवा ब्राह्मणा ब्रह्मवित्तमाः ।
भुक्ता नानाविधा भोगा अन्येषामतिदुर्लभाः ।।६।।

कुत्र स्थास्यत्यसौ देवो भोक्ष्यते स्वप्स्यते कथम् ।
कमद्य शरणं यामः स्वकृते तत्कृतेऽपि वा ।।७।।

पालयिष्यति कोऽस्मान् वै पदमैन्द्रं शचीन्तथा ।
कथं प्रसन्नतां यायाद् गौतमो मुनिसत्तमः ।।८।।

स्वीयभार्यावियुक्तः सँस्तत्कृतागः स्मरन् रुषा ।
अन्योपायं न पश्यामो गौतमस्य प्रसादतः ।।९।।

तस्मान्नारद ! यास्यामो गौतमं सान्त्वितुं मुनिम् ।
एवं ते निर्ययुर्देवा नारदेन समन्विताः ।।१०।।

गौतमं ते समासाद्य बद्धाञ्जलिपुटा मुनिम् ।
तुष्टुवुर्विविधैर्वाक्यैस्तमेव शरणं गताः ।।११।।

**नारदजीले भन्नुभयो** - देवराज इन्द इन्द्रगोप (वीरबहुटी कीरा) को रूप लिएर कमलमा बस्न गएपछि म अमरावती पुगें। मैले त्यहाँ बृहस्पति आदि देवताहरूलाई देखें ।।१।। मैले ती सबै देवतासँग इन्द्र र अहल्यालाई गौतम ऋषिबाट सराप परेको घटना सुनाएँ । अहल्या इन्द्रको सम्भोग र सरापका कारण विरूप अवस्थाको पनि राम्रोसँग बयान गरें ।।२।। त्यस बेला मैले भनें - हे देवगण ! गौतमका सरापबाट अहल्या शिलाको रूपमा परिणत भइन् र इन्द्रको शरीरमा सहस्र योनिका चिह्न उत्पन्न भएका छन् ।।३।।

**ब्रह्माजीले भन्नुभयो** - नारदजीबाट यो खबर पाएर सबै देवताहरू शोकसन्तप्त भए । अत्यन्त दुःखका कारण तीव्र श्वास-प्रश्वासका साथ आतुरता प्रकट गर्दै रुन र विलाप गर्न लागे ।।४।।

**देवताहरूले भने** - 'जुन इन्द्रले सयौं यज्ञ सम्पन्न गर्नुभयो, दानवहरूलाई परास्त गर्नुभयो, त्रिलोकीको पालन गर्नुभयो,मङ्गलमय इन्द्र पदको ऐश्वर्य भोग गर्नुभयो, अनेक देवता, ब्रह्मज्ञानी र ब्राह्मणको पूजा गर्नुभयो र अरूका लागि दुर्लभ मानिएका अनेक भोगहरूको उपभोग गर्नुभयो, उहाँ अब कहाँ रहनुहुनेछ ? कस्तो खान-पान गर्नुहुनेछ ? कहाँ शयन गर्नुहुनेछ ? यी प्रश्नहरूले साह्रै चिन्ता बढाएका छन् । आज हामी आफ्नो र इन्द्रको उद्धारका लागि कसका शरणमा जाऔं ?।।५-७।। अब इन्द्राणी, इन्द्र र हाम्रोसमेत कसले रक्षा गर्ला ? आफ्नी पत्नीबाट वियुक्त हुनुभएका इन्द्रले गरेका अपराध सम्झनु हुने उत्तम ऋषि गौतमलाई प्रसन्न तुल्याउनु बाहेक अर्को उपाय छैन । उहाँलाई प्रसन्न तुल्याउनु नै इन्द्रको उद्धारका लागि एकमात्र उपाय हुनसक्छ । त्यस कारण हे नारद ऋषि ! अब हामी गौतम ऋषिलाई सान्त्वना प्रदान गर्न र प्रार्थनाद्वारा प्रसन्न तुल्याउन उहाँको आश्रममा जानेछौं ।' यो कुरा बताएर ती देवताहरू नारदजीका साथमा गौतम ऋषिको आश्रमतर्फ लागे ।।८-१०।। गौतम ऋषिका सामु पुगेर हात जोडिरहेका ती देवताहरू अनेक स्तुतिवाक्यद्वारा गौतम ऋषिको प्रार्थना गरी उहाँको शरणमा परे।।११।।

देवा ऊचुः

तव प्रभावं वक्तुं नो मुने शक्तिर्न विद्यते ।
गरिमाणं वदेत् को नु मेरोर्हिमवतोऽपि च ।
वृष्टिधारा रजो भूमेर्गङ्गायाः सिकता अपि ।।१२।।

कमम्बुधेर्गुणान् विष्णोर्गणयेत् को नु मूढधीः ।
प्रातरेवोप्तबीजानां मध्याह्ने सस्यसम्पदः ।।१३।।

सम्पादितास्त्वयापूर्वमविता ऋषिसत्तमाः ।
वालखिल्यैर्यजिं कृत्वाऽपर इन्द्रो विनिर्मितः ।।१४।।

ब्रह्मादिभिः प्रार्थितास्ते पक्षिणान्तमकल्पयन् ।
पयसां निधिरेकेन प्राशितश्चुलकेन यत् ।।१५।।

अपरा सृष्टिरारब्धा गाधिपुत्रेण धीमता ।
स्तम्भितो भुज इन्द्रस्य च्यवनेन महात्मना ।।१६।।

तस्मात् सर्वात्मना पुंसां भवतां सेवनं नतिः ।
दर्शनं भाषणं पूजा स्पर्शनं पापनाशनम् ।।१७।।

उपकारे रतानाञ्च दीनानुग्रहकारिणाम् ।
इन्द्रार्थे शरणं यातान् कृपां कर्तुं त्वमर्हसि ।।१८।।

गौतम उवाच

भवतां दर्शनं चर्मचक्षुषां नैव जायते ।
मम पुण्येन जातं तत् कामसम्पादनं नृणाम् ।।१९।।

जन्माश्रमतपोदानं देह आत्मा व्रतानि च ।
सार्थकानीक्षणेनैव जातानि भवतां खलु ।।२०।।

**देवताहरूले भने -** हे महर्षि ! हजुरको प्रभाव र प्रतापको वर्णन गर्न हाम्रो सामर्थ्य छैन। मेरुपर्वतको गम्भीरताको बयान कल्ले गर्न सक्छ ? हिमालयबाट अजस्ररूपमा बगिरहने जलधाराको गणना कसले गर्न सक्छ? पृथिवीको धूलाको गणना कल्ले गर्न सक्छ ? त्यस्तै गङ्गाका बालुवाको पनि बयान कसैले गर्न सक्दैन।।१२।। त्यसै गरी महासागरमा कति जल छ भनेर कल्ले बताउन सक्छ ? कुन मूर्ख मानिसले भगवान् नारायणका गुणको महिमा भन्न सक्छ? बिहानीमा छरेका बिउबिजनलाई मध्याह्न समयमा सस्यसम्पत्तिका रूपमा परिणत गराउने तपाईँको हामी महिमा बताउन सक्दैनौं । त्यसैगरी तपाईँले आफ्नो तपस्याबाट ठूला-ठूला ऋषिहरूमा परेको सङ्कट टार्नुभएको छ । यस्तै गरी ऋषिहरूका विलक्षण सामर्थ्यका द्योतक अनेक दृष्टान्त छन् । एक पटकको कुरा हो वालखिल्यहरूले यज्ञ गरी कारणवश दोस्रो इन्द्र तयार गरेका थिए ।।१३-१४।। एउटा इन्द्र छँदाछँदै दोस्रा इन्द्र तयार भएपछि आपत्तिमा परेका ब्रह्मा आदि देवताहरूले बालखिल्यहरूको प्रार्थना गरे। त्यसपछि तिनले दोस्रा इन्द्रलाई पक्षीहरूका इन्द्र बनाए । आर्को उदाहरणको चर्चा गरौं - अगस्त्य ऋषिले समुद्रलाई एकै अञ्जुलिमा पान गरे ।।१५।। गाधिपुत्र विश्वामित्रले नौलो सृष्टिको थालनी गरे । यसै गरी च्यवन ऋषिले इन्द्रको बाहुस्तम्भन गरे ।।१६।। त्यस कारण ऋषिहरूको महिमा बताएर सकिंदैन । मानिसहरूले सर्वात्मना सेवा, प्रणाम, दर्शन, सम्भाषण, पूजा र स्पर्शनद्वारा परोपकारी र दीनदुःखीहरूमाथि अनुग्रह गर्ने ऋषिहरूलाई प्रसन्न तुल्याउनु नै पापनाशको सर्वोत्तम उपाय हो ।।१७।। तसर्थ हामी देवताहरू इन्द्रको उद्धारका निमित्त हजुरको शरणमा आएका छौं । हजुरले हामीमाथि कृपा गर्नुहोस् ।।१८।।

**गौतमले भन्नुभयो -** हे देवता हो ! चर्मचक्षु भएका मानिसहरूले तपाइँहरूको दर्शन पाउँदैनन् । मेरा पुण्यले मैले आज मानिसहरूका कल्याणकारी र सबै प्रकारका कामनाहरू पूरा गर्ने हजुरहरूको दर्शन पाएको छु ।।१९।। हजुरहरूको दर्शन पाएर मेरा जन्म, आश्रम, तपस्या, दान, देह, आत्मा र व्रतहरू सार्थक भएका छन् ।।२०।। यति बेला हजुरहरूलाई

इदानीं प्रार्थितं किं वस्तन्निरूप्यं ममाग्रतः ।
शक्यं चेत् तत्करिष्येऽहं भवत्स्मृतिबलेन तत् ।।२१।।

मुनिरुवाच

इति तद्वचनं श्रुत्वा जहृषुस्ते दिवौकसः ।
चन्द्रोदये यथा हर्षं प्राप्नोति जलधिः स्फुटम् ।।२२।।

यथा वा बालभाषाभिः पितरौ मुदमीयतुः ।
प्रार्थनां चक्रिरे सर्वे गौतमन्तं महामुनिम् ।।२३।।

देवा ऊचुः

ईश्वरस्यापराधेन कामो भस्मत्वमागतः ।
आगस्कारी त्वया शक्रो न च प्राणैर्वियोजितः ।।२४।।

इदानीं स यथास्थानं स्वकीयं प्राप्नुयान्मुने ।
क्षमित्वा तस्य चागांसि सर्वेषां वचनाद्धि नः ।।२५।।

कृते तस्मिन् प्रसादे तु सर्वेषां वाञ्छितं भवेत् ।

नारद उवाच

श्रुत्वा देवसमूहस्य वचनानि स गौतमः ।।२६।।
प्रहस्य प्रत्युवाचेदं सर्वान् देवगणान् प्रति ।

गौतम उवाच

नामापि तस्य न ग्राह्यं पतितस्य कृतागसः ।।२७।।

कपटस्य शठस्यापि दुष्टस्याप्यविवेकिनः ।
अनुतापविहीनस्य निष्कृतिर्नैव विद्यते ।।२८।।

तथापि भवतां वाक्यात् करिष्ये तत्प्रियं सुराः ।
भवन्तोऽपि यदा रुष्टास्तदा शापः पतेन्मयि ।।२९।।

पूतो भवति जन्तुर्हि बहुभिर्योऽनुगृह्यते ।
अत एकं वदे मन्त्रं तस्मै तं प्रदिशन्तु च ।।३०।।

सर्वकर्ता सर्वहर्ता सर्वपाता कृपानिधिः ।
विनायको देवदेवो ब्रह्मविष्णुशिवात्मकः ।।३१।।

के चाहिएको छ र म के दिन सक्छु ? यसबारेमा वहाँहरूले खुलस्तरूपमा बताउनुहोस्। यदि मेरो सामर्थ्य रहेछ भने म ती कुरा पूरा गर्नेछु। हजुरहरूले संझनुभयो, यस कारण पनि मैले उपकार गर्नुपर्छ ।।२१।।

**नारदजीले भन्नुभयो -** गौतम ऋषिका कुरा सुनेपछि चन्द्रमाको उदय हुँदा महासागर तरङ्गित भएझैं सम्पूर्ण देवताहरू खुसीले रमाए । जसरी बालकका मीठा कुरा सुनेर आमा-बाबुहरू प्रसन्न हुन्छन् त्यसैगरी ती देवता पनि प्रसन्न भए र तिनले गौतम महामुनिको प्रार्थना गरे ।।२२-२३।।

**देवताहरूले भने -** भगवान् शङ्करका प्रति अपराध गर्दा कामदेव भस्म भएका हुन् । हजुरले भने डरलाग्दो अपराध गर्दा पनि देवराज इन्द्रको प्राणहरण गर्नुभएन अपितु दया गर्नुभयो। यो हजुरको विशेषता हो । अहिले हजुरसँग डराएर देवराज इन्द्रले पलायन गर्नुभएको छ । हजुर ती इन्द्रमाथि कृपालु हुनुहोस् । अब इन्द्रलाई इन्द्र पदमा आसीन गराउन पाऔं । उहाँले गरेका सम्पूर्ण अपराधलाई क्षमा गरिदिनुहोस् । यसका लागि हामी सबै देवता हजुरको प्रार्थना गर्दछौं ।।२४-२५।। हजुरले इन्द्रमाथि कृपा गर्नुभयो भने हामी सबै देवताहरूको कल्याण हुनेछ ।

**नारदजीले भन्नुभयो -** देवताहरूको प्रार्थनावचन सुनेर गौतम ऋषिले हाँस्दै देवताहरूप्रति भन्नुभयो ।

**गौतमले भन्नुभयो -** अपराधी, पतित, कपटी, धूर्त, दुष्ट र अविवेकी इन्द्रको नाम पनि मेरा सामु नलिनुहोस् । अपराध गरेर पनि अपराधको बोध नगर्ने त्यस्ता दुष्टको प्रायश्चित्तका लागि कुनै उपाय हुँदैन ।।२६-२८।। यसो हो ता पनि तपाईंहरूको प्रार्थनालाई ध्यानमा राखी म तपाईंहरूको प्रिय र रुचिकर कार्य गर्नेछु । तपाईंहरू पनि रिसाउनुभयो भने ममाथि सराप पर्न सक्छ । धेरै मानिसहरूले जसको उद्धार गर्न खोज्छन् त्यो अपराधी भए पनि पवित्र हुन्छ । यस बेलामा म एउटै मन्त्रमय उपाय बताउँछु, त्यो उपाय तपाईंहरूले इन्द्रलाई बताउनुहोस् ।।२९-३०।। त्यो के हो भने भगवान् श्रीगणेश सर्वकर्ता, सर्वहर्ता, सर्वरक्षक, दयासागर, ब्रह्मा, विष्णु र शिवजीका स्वरूप, देवताका पनि देवता हुनुहुन्छ । उहाँको ६ अक्षर भएको मन्त्रले ठूलो सिद्धि प्रदान गर्न सक्दछ । यदि

षडक्षरस्तस्य मन्त्रो महासिद्धिप्रदायकः ।
उपदेशे कृते तस्य दिव्यदेहो भवेत् तु सः ।।३२।।

भगानि तस्य यावन्ति तावन्नेत्रो भविष्यति ।
स्वराज्यं प्राप्स्यते शक्र इति सत्यं वदामि वः ।।३३।।

अभिधाय सुरानित्थं तूष्णीमासीत् स गौतमः ।
तञ्च ते पूजयित्वा तु नमश्चक्रुर्मुदान्विताः ।।३४।।

प्रदक्षिणीकृत्य पुनः प्राप्याऽनुज्ञां ययुः सुराः ।
प्रशंसन्तो मुनिं तत्र यत्रास्ते बलवृत्रहा ।।३५।।

गौतमाज्ज्ञानसम्पन्नात् सात्त्विकोऽन्यो न वर्तते ।।३६।।

कसैले इन्द्रका कानमा त्यस मन्त्रको उपदेश गर्‍यो भने इन्द्रको शरीर दिव्य हुनेछ ।।३१-३२।। तिनका शरीरमा जति योनिका चिह्न छन्, ती सबै आँखाका रूपमा परिणत हुनेछन् र इन्द्रले आफ्नो राज्य प्राप्त गर्नेछन् । म यो सत्य-तथ्य बताइरहेको छु ।।३३।। यसरी देवताहरूलाई उपाय बताएर गौतम ऋषि मौन हुनुभयो। देवताहरूले गौतम ऋषिको पूजा र नमस्कार गरी प्रसन्नतापूर्वक उनको प्रदक्षिणा गरेपछि आज्ञा लिएर जहाँ इन्द्र लुकेर बसेका थिए, त्यस ठाउँमा गए । घोर अपराधीमाथि पनि दया गर्ने गौतम ऋषिको तुलना कसैसँग हुन सक्दैन । हुन पनि संसारमा गौतम ऋषिसमान सात्त्विक महापुरुष अरू कुनै पनि छैनन्।।३४-३६।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे मन्त्रकथनं नाम द्वात्रिंशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'देवताहरूको प्रार्थनाबाट प्रसन्न महर्षि गौतमद्वारा इन्द्रको उद्धारका लागि श्रीगणेशमन्त्रको उपदेश' शीर्षकान्वित बत्तीसौं अध्याय पूर्ण भयो ।।३२।।

ॐ

# त्रयस्त्रिंशोऽध्याय:    { ३३ अध्याय }

नारद उवाच

ऊचुर्देवा वृत्रहणं बहिर्याहि शतक्रतो !
वयं हि सहितास्तत्र नारदेन सुरर्षिणा ।।१।।
तं गत्वा गौतममुनिं प्रसाद्य त्वामिहागता: ।
उपायस्तेन कथितो वरो दत्तस्तवापि च ।।२।।
दोषे जाते स्वयं सन्त: ख्यापयन्ति जनेषु तम् ।
तत्र प्रतिविधिं सम्यक् कुर्वन्ति तन्निरर्थकम् ।।३।।
आच्छादने दोषवृद्धि: ख्यापने तु लयो भवेत् ।
तस्मात् त्वमपि देवेन्द्र ! बहिरागत्य तं वद ।।४।।
देवर्षि प्रति तं ब्रूहि कुरूपायं मुनीरितम् ।
वैनायकं महामन्त्रं गृहाण त्वं षडक्षरम् ।।५।।
ब्रह्मा ददर्श चाङ्गुष्ठं विवाहे गिरिजेशयो: ।
चस्कन्द स तदा रेतो लज्जितोऽवाङ्मुखो गत: ।।६।।
ज्ञात्वा महेश: कृतवान्निर्दोषं तमुपायत: ।
इति वाणीं स श्रुत्वैव देवर्षिगणनिर्मिताम् ।।७।।
आजगाम बहि: शक्रो नलिनीकोशतो नृप ।
सर्वेषां तत्र देवानां श्रुत्वा वाक्यानि सादरम् ।।८।।
पूयशोणितदिग्धाङ्गो मलिन: पूतिगन्धवान् ।
दृष्ट्वा तथाविधं देवा नेमु: सर्वे सुरेश्वरम् ।।९।।
आच्छाद्य घ्राणरन्ध्राणि वस्त्राग्रैर्नृपसत्तम ।
सुस्नातं पुनराचान्तं तमिन्द्रं वाक्पतिस्तदा ।।१०।।
षडक्षरं महामन्त्रं गणेशस्योपदिष्टवान् ।
उपदेशे कृते तेन दिव्यदेहोऽभवच्च स: ।।११।।
सहस्रनयन: श्रीमान् बभौ सूर्य इवापर: ।
ततो वाद्यनिनादैश्च जयशब्दैर्दिवौकसाम् ।।१२।।

**नारदजीले भन्नुभयो -** देवताहरूले इन्द्रलाई भने - हे वृत्रासुरका नाशक इन्द्र ! हजुर अब बाहिर आउनुहोस् । हामी नारद ऋषि साथमा गौतम मुनिको समीपमा गई उहाँलाई प्रसन्न तुल्याएर अहिले हजुरका समीपमा आएका छौं । गौतम ऋषिले हजुरको कल्याणको उपाय बताउनुभएको छ र हजुरका निमित्त वर पनि दिनुभएको छ ।।१-२।। आफूबाट अपराध भएपछि सज्जनहरूले त्यसलाई अरुका सामु खुलस्त पार्दछन्। यसरी तिनले दोषको प्रतिकार गर्दछन् । यसो गर्ने मानिसहरूका अपराध अर्थहीन हुन जान्छन्।।३।। अपराध लुकाएमा अपराधको मात्रा वृद्धि हुन्छ भने त्यसलाई सबैका सामु खुलस्त गर्दा त्यो समाप्त भएर जान्छ । तसर्थ हे इन्द्र ! तपाईं बाहिर आउनुहोस् र अरुका सामु आफ्नो अपराध प्रकाशित गर्नुहोस् ।।४।। तपाईँले महर्षि नारदजीका सामु नढाँटीकन सबै कुरा भन्नुहोस् र गौतम मुनिले बताएको श्रीगणेशको षडक्षरी महामन्त्र सुन्नुहोस् ।।५।। अघि शिव-पार्वतीको विवाहमा ब्रह्माजीले पार्वतीको चरणका बूढी औंलामात्र देख्नुभएको थियो । त्यस बेला कामवासना जागी उहाँको वीर्यपतन भयो। त्यसले ब्रह्माजी साह्रै लज्जित हुनुभयो र मुख निहुर्‍याएर फर्किनुभयो ।।६।। यो कुरा थाहा पाउनुभएपछि भगवान् शिवजीले अमोघ उपाय बताई ब्रह्माजीलाई निर्दोष तुल्याउनुभयो । देवता र ऋषिले भनेका यी कुरा सुनेर इन्द्र कमललताको कोशबाट बाहिर आए। त्यस बेला इन्द्रको शरीर पीप र रगतले परिपूर्ण, मलिन र दुर्गन्धमय थियो । इन्द्रलाई त्यस रूपमा देखेर देवताहरूले नमस्कार गरे ।।७-९।। हे राजन्! त्यस बेला देवगुरु बृहस्पतिले राम्ररी स्नान गरी आचमनसमेत गरेका इन्द्रलाई रुमालले आफ्ना नाकका प्वाल थुनेर श्रीगणेश भगवान्को षडक्षरी मन्त्र सुनाउनुभयो । बृहस्पतिले मन्त्रोपदेश गरेपछि देवराज इन्द्र दिव्य देहले सम्पन्न भए ।।१०-११।। त्यसपछि सहस्रयोनि भएको इन्द्रको शरीर सहस्रनयनले सम्पन्न भयो र ती दोस्रा सूर्यझैं चम्किए । त्यस बेला देवताहरूले बजाएका वाद्यहरूको

गन्धर्वाणां गानरवैर्नादिता विदिशो दिशः ।
मुमुचुः पुष्पवर्षाणि सर्वे देवा मुदान्विताः ।।१३।।

आशिषोऽथ ददुःसर्वे मुनयो नारदादयः ।
आलिलिङ्गुर्मुदादेवास्तुष्टुवुश्चापरे च तम् ।।१४।।

केप्यूचुस्तं सुमनसः सनाथा हि वयं त्वया ।
विना त्वां नैव शोभामो विना चन्द्रं नभो यथा ।।१५।।

विना स्वपितरौ बाला न सुखं यान्ति सर्वथा ।
तथा विना वयं त्वां हि लभामः शर्म न क्वचित् ।।१६।।

मुनिरुवाच

श्रुत्वेत्थं देववचनं जहर्ष च शतक्रतुः ।
उवाच च प्रसन्नात्मा तथ्यं वाक्यं सुरान् प्रति ।।१७।।

इन्द्र उवाच

मया कृतं कर्म सुदुष्करं यद्
देवर्षिवाक्येन विमोहितेन।
लब्धं फलं दुःसहमद्य सर्वै-
रुद्धारितोऽहं दुरितप्रकोपात्।।१८।।

नमामि सर्वानमरप्रवर्हान्
ऋषींश्च सर्वान् सुगुरुप्रभावान्।
उद्धर्त्तुमात्मानमतोऽखिला मां
संत्रातुमर्हाः शरणं प्रपन्नम्।।१९।।

कथं प्रयत्नो रचितो भवद्भिः
प्रसादनायास्य हि गौतमस्य।
कथं नु मन्त्रं परमं मदर्थे
स उक्तवाँस्तत् कथयन्तु सर्वे।।२०।।

देवा ऊचुः

मुनिं पुरस्कृत्य गुरुं वयञ्च
गता मुनिं तं प्रणिपत्य सम्यक्।
प्रसादितो वागमृतैर्विचित्रैः
संयाच्यमानोऽप्यवदत् स्वमन्त्रम्।।२१।।

ध्वनि जयजयकारको नाद र गन्धर्वहरूका गायनको स्वरले दसै दिशा र विदिशा सङ्गीतमय बनेका थिए। हर्षित भएका देवताले पुष्पवृष्टि गरे र नारद आदि मुनिहरूले आशीर्वाद प्रदान गरे । प्रसन्न भएका देवताहरूले इन्द्रलाई आलिङ्गन गरे । अरू उपस्थित जनसमूहले पनि इन्द्रको स्तुति गरे ।।१२-१४।। त्यस बेला केही देवताहरू इन्द्र महाराजसँग भन्न लागे – हे इन्द्र ! हजुर फर्केर आउनुभएकाले हामी सनाथ भएका छौं । जसरी चन्द्रमाविना आकाश सुहाउँदैन त्यसरी हजुरविना हाम्रो शोभा हुँदैन । जसरी आफ्ना बाबु-आमा नहुँदा बालकहरूले सुख पाउँदैनन् त्यसैगरी हजुर नहुँदा हामीले कहीं गए पनि सुख पाउँदैनौं ।।१५-१६।।

**मुनिले भने** – देवताहरूका यी कुरा सुनेर इन्द्र हर्षित भए र तिनले देवताहरूलाई लक्षित गरी सत्यवचन प्रकाशित गरे ।।१७।।

**इन्द्रले भने** – नारदजीका वचनद्वारा मोहित भएर मैले दुष्कर पाप गरें । परिणामस्वरूप असह्य कष्ट पनि प्राप्त गरें । आज तपाइँहरू सबैले मिलेर पापको प्रकोपबाट मेरो उद्धार गर्नुभयो ।।१८।। म देवताहरूलाई नमस्कार गर्छु । गुरुतापूर्ण प्रभाव भएका सबै ऋषिहरूलाई प्रणाम गर्दछु । तपाइँहरू सबैले मेरो रक्षा गर्नुहोस् । म तपाइँहरूकै शरणमा आएको छु। तपाइँहरूले महामुनि गौतमलाई प्रसन्न तुल्याउन कसरी प्रयत्न गर्नुभयो ? त्यसरी रिसाएका ऋषिले पनि मेरा लागि कसरी परम मन्त्रको उपदेश गर्नुभयो ? ती कुरा सुन्न चाहन्छु मलाई बताउनुहोस् ।।१९-२०।।

**देवताहरूले भने** – देवर्षि नारद र देवगुरु बृहस्पतिलाई अघि लगाएर हामी गौतम ऋषिको आश्रममा गयौं। उहाँलाई श्रद्धापूर्वक प्रणाम गरेर अमृतमय वचनद्वारा प्रसन्न तुल्यायौं । इन्द्र महाराजको रक्षा र उद्धारका लागि याचना गर्‍यौं र उहाँले हाम्रो याचना स्वीकार गरी मन्त्र प्रदान गर्नुभयो ।।२१।। जुन मन्त्रको श्रवणबाट हजुर आज हामी सबैको सुख-समृद्धिका

यस्योपदेशेन सहस्त्रनेत्रो
जातो भवान् सर्वसुखाय देव।
प्रयाहि देव त्वमरावतीं स्वां
प्रशाधि सर्वान् विबुधाँश्च लोकान्।।२२।।

इन्द्र उवाच

नाहं प्रयास्ये स्वपुरीं प्रसादं
विना गणेशस्य सुरर्षिवर्याः।
व्रजन्तु यूयं कृतसाधुकृत्या
धामानि दिव्यानि मुदा रमन्तः।।२३।।
एतावताऽलं प्रकटीकृतोऽहं
लज्जाविलीनो बहुदुर्गतिश्च।
प्रसादितो यन्मुनिरुग्रतेजा
भवत्प्रसादाद् बहुनेत्रता मे।।२४।।

लागि सहस्त्रनयन बन्नुभएको छ । हे देवराज इन्द्र ! अब हजुर अमरावती जानुहोस् र सुशासनद्वारा सम्पूर्ण देवता र लोकहरूको रक्षा गर्नुहोस् ।।२२।।

**इन्द्रले भने** - हे देवगण! म भगवान् श्रीगणेशलाई प्रसन्न नबनाईकन अमरावती फर्किन्नँ । उत्तम कर्म गर्ने तपाइँहरू हर्षपूर्वक आ-आफ्ना दिव्य धाममा जानुहोस् ।।२३।। दुर्गतिमा प्राप्त हुँदा अपराधबोधका कारण साह्रै लज्जित भई लुकेर बस्ने मलाई तपाईँहरूले दुनियाँका सामु मुख देखाउन सक्ने बनाइदिनुभएको छ । मेरो कल्याणका लागि प्रचण्ड तेज भएका गौतम ऋषिलाई प्रसन्न तुल्याउनु सामान्य कुरा होइन । आज म तपाइँहरूको कृपाबाट सहस्त्रनयन बन्न पाएको छु ।।२४।।

ॐ

**इति श्रीगणेशपुराणे उपासनाखण्डे दिव्यदेहप्राप्तिवर्णनं नाम त्रयस्त्रिंशोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'अभिशप्त इन्द्रको स्वरूपपरिवर्तन र दिव्य देहप्राप्ति' शीर्षकान्वित तेत्तीसौं अध्याय पूर्ण भयो ।।३३।।

ॐ

# चतुस्त्रिंशोऽध्यायः { ३४ अध्याय }

नारद उवाच

कदम्बवृक्षस्य तले निधाय
नासाग्रदृष्टिं परमासने सः।
मनो निरुध्याऽथ जजाप मन्त्रं
षडक्षरं जम्भरिपुर्नरेन्द्र ।।१।।
सहस्त्रवर्षाणि गतानि तस्य
मरुत्पतेर्मारुतभक्षणस्य।
वल्मीकगुल्मानि शरीरदेशे
जातानि वै भूधरवत् स्थिरस्य ।।२।।
ततः प्रसन्नो भगवान् गणेशो
यः सर्वगः सर्वविदुग्रतेजाः।
स्वतेजसा वह्निशशीनतेजां-
स्याच्छादयन् सर्वविलोचनानि ।।३।।
चतुर्भुजो रत्नकिरीटमाली
चार्वङ्गदः कुण्डलमण्डिगण्डः।
मुक्तामयं दाम च नूपुरे च
बिभ्रन्महार्घे कटिसूत्रमुच्चैः।।४।।
यः पुष्कराक्षः पृथुपुष्करोऽपि
बृहत्करः पुष्करशालिमालः।
आविर्बभूवाखिलदेवमूर्तिः
सिन्दूरशाली पुरतो मघोनः।।५।।
तं दृष्ट्वा भयभीतोऽभूत् किमिदं किमिवागतम् ।
कथञ्च जीवितं मे स्यादस्थिप्राणमयस्य च ।।६।।
विघ्नोऽयं किं महानद्य न जाने केन निर्मितः ।
स्वेदस्त्रावि शरीरं मे कम्पते बोधिपत्रवत् ।।७।।
इत्थं विक्लवितं तस्य बुबुधेऽखिलदृग्विभुः ।
विनायको महेन्द्रं तमुवाच मञ्जुलं वचः ।।८।।

विनायक उवाच

मा भयं कुरु देवेश ! मां न वेत्सि कथं सुर !
यन्निर्गुणं निर्विकारं चिदानन्दं सनातनम् ।।९।।

**नारदजीले भन्नुभयो -** हे रुक्माङ्गद ! देवराज इन्द्रले कदम्बवृक्षको फेंदमा परमासनमा बसी नाकको टुप्पोमा दृष्टि बाँधेर मनलाई संयमित गरी श्रीगणेश भगवान्को षडक्षरी मन्त्रको जप गरे ।।१।। यसरी मन्त्र जप गर्दा वायुपान गरेर पर्वतझैं अचल इन्द्रका एक हजार वर्ष बिते । शरीरमा धमिराले माटाको गोलो उठायो ।।२।। सर्वत्र व्याप्त, सर्ववेत्ता, उग्र तेजबाट जाज्वल्यमान, संसारकै आँखा समान मानिएका चन्द्रमा, अग्नि र सूर्यको तेजलाई पनि आफ्नो तेजबाट मन्द तुल्याउने, चतुर्भुज, रत्नमय किरीट धारण गर्नुहुने, सुन्दर केयूरले सुहाउनुभएका, कुण्डलहरूले गालामा स्पर्श गर्दा अत्यन्त आकर्षक देखिनुहुने, बहुमूल्य मोतीको हार र नूपुर धारण गर्नुहुने, गरिमामय कन्धनीले सुहाउनुभएका, कमलजस्ता आँखाले हेर्नुहुने, ठूलो सूँढ धारण गर्नुहुने, कमलको मालाबाट सुहाउनुभएका, सबै देवताका पुञ्जीभूत स्वरूप र सिन्दूररञ्जित भगवान् श्रीगणेश प्रसन्न भएर इन्द्रका साामु प्रकट हुनुभयो ।।३-५।। श्रीगणेशको दिव्य र भव्य स्वरूप देखेर इन्द्र भयभीत भए। यो के हो ? किन मेरा सामु आएको छ ? हाड र प्राणका भरमा म बाँचिरहेको छु । अब मेरो के गति हुने हो ? ।।६।। मेरा सामु कसले यो विघ्न उत्पन्न गर्‍यो? मैले केही जानेको छैन। पसिनै पसिनाले नुहाएको यो मेरो शरीर पीपलको पातझैं काँपिरहेको छ ।।७।। सर्वद्रष्टा अन्तर्यामी श्रीगणेशले विह्वल इन्द्रको विलाप थाहा पाउनुभयो र मीठो स्वरमा इन्द्रलाई सम्बोधन गर्नुभयो ।।८।।

**श्रीगणेशले भन्नुभयो -** हे देवराज इन्द्र ! तिमीले डर नमान । के तिमीले मलाई चिनेका छैनौ ? निर्गुण, निराकार, चिदानन्द, सनातन, कारणातीत, अव्यक्त र जगत्का विधाताको

कारणातीतमव्यक्तं जगत्कारणकारणम् ।
यं ध्यायसि सदा देवं मन्त्रेणाऽनेन निश्चलः ।।१०।।

श्रान्तोऽसि बहुकालं त्वमिति प्रत्यक्षतां गतः ।
तपसाऽनेन तुष्टोऽहं वरं दातुमिहागतः ।।११।।

ब्रह्माण्डानामनन्तानामुत्पत्तिप्रलयावनम् ।
मत्त एवेति विद्धि त्वं वृणु यद् वाञ्छसेऽनघ ।।१२।।

नारद उवाच

श्रुत्वा तस्य वचो रम्यं बुबुधे बलभेदनः ।
भगवन्तं महाकायं देवदेवं विनायकम् ।।१३।।

ननाम परया भक्त्या तत उत्थाय सत्वरः ।
अवीवदच्छचीकान्तः प्रत्यक्षं ब्रह्मरूपिणम् ।।१४।।

इन्द्र उवाच

ब्रह्मादयोऽपि नो देवा विदुस्त्वां सदिगीश्वराः ।
गुणाँस्तव महाबाहो सृष्टिस्थित्यन्तकारिणः ।।१५।।

पदं तु कृत्रिमं मह्यं शतयज्ञसमुद्भवम् ।
दत्तं तत्राप्यन्तराया भवन्ति बहुधा मम ।।१६।।

मया कथं तु विज्ञेयो महिमा ते गजानन ।
यस्य तेऽनुग्रहः पूर्णो भविष्यति महेश्वर ।।१७।।

स एव महिमानं ते जानीयाद् विघ्नकारण ।
तस्य ते गुणरूपाणि वक्तुं शक्तिर्भविष्यति ।।१८।।

निराधारोऽखिलाधारो नित्यज्ञानोऽजरोऽमरः ।
नित्यानन्देन सम्पूर्णो मायावी क्षर एव च ।।१९।।

अक्षरः परमात्मा च विश्वरूपोऽखिलेश्वरः ।
उग्रैस्तपोभिस्त्वां ज्ञात्वा निवृत्ताः सनकादयः ।।२०।।

षडक्षरप्रभावेन दृष्टोऽसि परमेश्वर ।
पुराऽयं ब्रह्मणाऽऽदिष्टो मन्त्रो मेऽनुग्रहेण वै ।।२१।।

उक्तवाँश्चैव मां ब्रह्मा यदाऽमुं विस्मरिष्यसि ।
तदैव भ्रश्यसे स्थानाद् दुर्दशां चैव यास्यसि ।।२२।।

पनि सृष्टि गर्ने जुन देवताको ध्यान गर्दै षडक्षरी मन्त्रको जप गरिरहेका छौ त्यो देवता म नै हुँ ।।९-१०।। तिमीलाई दीर्घकालिक तपस्याबाट थाकेको जानेर म तिम्रा सामु प्रकट भएको छु । हे निष्पाप ! तिम्रो तपस्याबाट म प्रसन्न छु र म तिमीलाई वर दिन यहाँ आएको छु ।।११।। अनन्त ब्रह्माण्डको उत्पत्ति, रक्षा र संहार मबाट नै हुन्छ भन्ने कुरा तिमीले बुझ्नुपर्दछ र विश्वास गर्नुपर्दछ । तिमीले जे चाहन्छौ त्यो माग, म दिन तयार छु ।।१२।!

**नारदजीले भन्नुभयो** - अज्ञात दिव्य तत्त्वका यस्ता मीठा कुरा सुनेर इन्द्रले देवताका देवता र विशाल कायद्वारा शोभायमान भगवान् श्रीगणेशलाई चिने । त्यसपछि हस्याङ-फस्याङ गर्दै उभिएर परमभक्तिपूर्वक प्रणाम गरी उहाँसँग बिन्ती गरे ।।१३-१४।।

**इन्द्रले भने** - हे महाबाहु श्रीगणेश ! दिक्पालसहित ब्रह्मा आदि देवताले पनि सृष्टि, स्थिति र संहारका कारण हजुरको महिमा र गुणलाई राम्ररी बताउन सक्दैनन् । मैले त सय यज्ञ गरेका कारण कृत्रिम इन्द्रपद पाएको छु, त्यसमा पनि धेरैजसो विघ्नहरू आइलाग्ने गर्दछन् । हे परमेश्वर गजानन! म हजुरको महिमा कसरी जान्न सकूँ ? हे प्रभु ! जुन प्राणीमाथि हजुरको पूर्ण अनुग्रह हुन्छ, त्यसले मात्र हजुरको महिमा जानेको हुन्छ र बताउन सक्छ । हे विघ्नेश्वर ! त्यसले नै हजुरका गुण, रूप, यावत्ता, इयत्ता र महिमा बताउन सक्छ ।।१५-१८।। हजुर निराधार र सर्वाधार हुनुहुन्छ । हजुर नित्यज्ञानस्वरूप, अजर र अमर पनि हुनुहुन्छ । हजुर नित्यानन्द-सम्पूर्ण, क्षर, मायावी, अक्षर, परमात्मा, विश्वरूप र सर्वेश्वर पनि हुनुहुन्छ । सनक आदि मुनिहरू उग्र तपस्या गरेपछि हजुरको दर्शन पाएर संसारबाट निवृत्त भएका थिए ।।१९-२०।। षडक्षरी मन्त्रको प्रभावबाट हजुर मेरासामु प्रत्यक्ष हुनुभएको छ । पहिले ममाथि कृपा गरेर ब्रह्माजीले मलाई यस मन्त्रको उपदेश गर्नुभएको थियो । त्यस बेला ब्रह्माजीले मलाई भन्नुभएको थियो - 'जुन बेला तिमीले कुनै कारणवश यो मन्त्र बिर्सिनेछौ त्यस बेला तिमी आफ्नो पदबाट च्युत भएर दुर्दशामा पर्नेछौ ।' त्यसपछि मैले त्यो मन्त्र बिर्सें । म अति लुब्ध भएँ र दुर्भाग्यको वशमा परी मुनिपत्नी अहल्याको धर्मनाश गर्न

ततो मयाऽतिलुब्धेन दुर्भाग्यवशगेन तु ।
धर्षिता मुनिपत्नी सा ततो दुर्गतिमाप्तवान् ।।२३।।
पुनश्च धिषणोक्तेन तेन मन्त्रेण दृष्टवान् ।
स्वरूपं तव देवेश ! सहस्रनयनोऽधुना ।।२४।।
अन्यमेकं वरं याचे यतस्त्वं चिन्तितार्थदः ।
इदं कदम्बनगरं चिन्तामणिपुरं त्विति ।।२५।।
अनुष्ठानफलं प्राप्तं यत् ते दृढपदाम्बुजम् ।
इदानीं तु वरं याचे यं तं मे देहि विघ्नप ।।२६।।
तव विस्मरणं देव न भवेन्मे तथा कुरु ।
मनो मे रमतां नित्यं तव पादाम्बुजे विभो ।।२७।।
अद्य प्रभृति लोकेऽस्मिन् ख्यातिं यातु गजानन ।
चिन्तामणीति तीर्थं तु सरश्च प्रथतामिदम् ।।२८।।
अस्मिन् स्नानेन दानेन धर्मकामार्थमुक्तयः ।
जनानां सिद्धयः सन्तु प्रसादात् ते जगद्गुरो ।।२९।।

मुनिरुवाच

आकर्ण्य वचनं शाक्रं मेघगम्भीरनिस्वनः ।
उवाच श्लक्ष्णया वाचा विघ्नेशो जगतां पतिः ।।३०।।

विनायक उवाच

इदं सम्पत्स्यते सर्वं यत् त्वया प्रार्थितं विभो ।
अन्य एको वरस्तेऽस्तु स्वपदे त्वं स्थिरो भव ।।३१।।
अविस्मृतिश्च सततं मम तेऽस्तु सुरेश्वर ।
यदा च सङ्कटं ते स्यात् तदा मां स्मर वासव ।।३२।।
आविर्भावेन ते कार्यं सर्वं सम्पादयेऽनिशम् ।
इदं चिन्तामणिपुरं ख्यातं भुवि भविष्यति ।।३३।।
कदम्बपुरमित्येतत् तीर्थं चिन्तामणीति च ।
अत्र स्नानेन सर्वेषां सिद्धयोऽपि करे स्थिताः ।।३४।।
चिन्तितञ्च प्रदास्यामि चिन्तामणिविनायकः ।

नारद उवाच

एवं वरं ततो लब्ध्वा स्वःसिन्धुमानयद् हरिः ।।३५।।

तत्पर भएँ । त्यस कारण मैले आज यो दुर्गति भोग्नुपर्‍यो । हे देवेश ! आज मैले बृहस्पतिबाट त्यसै षडक्षरी मन्त्रको उपदेश पाएँ । त्यसको जपका प्रभावबाट हजार आँखाद्वारा हजुरको दर्शन गर्ने सौभाग्य पाएको छु ।।२१-२४।। हे प्रभु ! हजुरले चिताएको कुरा पुऱ्याउनु हुन्छ, तसर्थ मैले हजुरसँग एउटा अर्को वर माग्दछु - यो कदम्बनगर अब उप्रान्त चिन्तामणिपुरका नामबाट संसारमा प्रख्यात होस् । यहाँ अनुष्ठान गरेर मैले हजुरका चरणकमलको दर्शन गर्ने सौभाग्य प्राप्त गरेको छु । हे विघ्नेश्वर ! अहिले म फेरि अर्को वर माग्दैछु, त्यो हजुरले पूरा गराउनुहोस् - मेरो मनमा हजुरको विस्मृति कहिल्यै नहोस्, यस्तो कृपा गर्नुहोस्। हे विभो! मेरो मन सधैं हजुरको चरणकमलमा रमाओस् ।।२५-२७।। हे गजानन! अब उप्रान्त यो संसारमा श्रीगणेशकुण्ड पनि चिन्तामणि तीर्थका नामबाट प्रसिद्ध होस्। हे जगद्गुरु! हजुरको कृपाबाट यस कुण्डमा स्नान र दान गर्नाले धर्म, अर्थ, काम र मोक्षका साथै मानिसहरूले सबै प्रकारका सिद्धि पनि प्राप्त गरून् ।।२८-२९।।

**मुनिले भने** - इन्द्र महाराजको प्रार्थनावचन सुनिसकेपछि मेघजस्तो गम्भीर स्वर उच्चारण गर्नुहुने जगदीश्वर भगवान् श्रीगणेशले कोमल वाणीद्वारा भन्नुभयो ।।३०।।

**श्रीगणेशले भन्नुभयो** - हे इन्द्र ! तिमीले जे-जस्ता प्रार्थना गर्‍यौ, ती सबै पूर्ण हुनेछन् । म तिमीलाई अर्को यो वर पनि दिन्छु - तिमी अब आफ्नो इन्द्रपदमा स्थिर भएर रहनेछौ। तिमीलाई मेरो विस्मृति कहिले पनि हुने छैन । जुन बेला तिमीमाथि सङ्कट आइलाग्छ त्यस बेला मेरो संझना गर्नेछौ ।।३१-३२।। मैले अहिले तिम्रा सामु प्रकट भएर सबै कामना पूरा गराएको छु । यो कदम्बपुर अबदेखि संसारमा चिन्तामणिपुरका नामबाट विख्यात हुनेछ ।।३३।। यहाँ रहेको कुण्डलाई चिन्तामणितीर्थका रूपमा सबैले चिन्नेछन् । यहाँ स्नान गर्नाले भक्तहरू सबै प्रकारका सिद्धिका स्वामी बन्न पाउनेछन् ।।३४।। मैले चिन्तामणि विनायकका नामबाट यहाँ रही भक्तहरूले चिताएका कामना परिपूर्ण तुल्याउने छु ।

**नारदजीले भन्नुभयो** - श्रीगणेशबाट यस्ता वर प्राप्त गरेपछि इन्द्रले आकाशगङ्गालाई झिकाएर त्यसबाट श्रीगणेशको अभिषेक गरे । त्यसपछि श्रद्धापूर्वक परिवारसहित

कृत्वाऽभिषेकं तद्द्वारा पूजयामास तं विभुम् ।
गजाननं महाभागं परिवारसमन्वितम् ।।३६।।

पूजितः सुरनाथेन तत्रैवाऽन्तर्दधे विभुः ।
स्थापयामास शक्रोऽपि स्फाटिकां मूर्तिमादरात् ।।३७।।

वैनायकीं शुभां दिव्यां सर्वावयवसुन्दराम् ।
कारयामास विपुलं प्रासादं रत्नकाञ्चनैः ।।३८।।

नत्वा प्रदक्षिणीकृत्य शक्रः स्वं पदमभ्यगात् ।
तदेतद् भुवि विख्यातं चिन्तामणिसरो महत् ।।३९।।

अद्यापि सा शुभजला गङ्गा शक्रस्य शासनात् ।
कृत्वाऽभिषेकं तन्मूर्तौ याति स्वं धाम सर्वदा ।।४०।।

एवं ते क्षेत्रमहिमा कथितोऽद्भुतदर्शनः ।
सर्वदोषहरः श्रीमान् सर्वकामप्रदः शुभः ।।४१।।

तत्र गत्वा महीपाल ! स्नानं कुरु यथाविधि ।
सर्वदोषविनिर्मुक्तो भविष्यसि न संशयः ।।४२।।

**ब्रह्मोवाच**

ततो ययौ मुनिः शीघ्रमनुपृच्छ्य च तं नृपम् ।
आशीर्भिरभिनन्द्यैव स रुक्माङ्गदमादरात् ।।४३।।

भाग्यका मूल केन्द्र र सर्वव्यापक गजानन प्रभुको आराधना गरे ।।३५-३६।। यसरी इन्द्रले आराधना गरेपछि भगवान् श्रीगणेश त्यहीं अन्तर्धान हुनुभयो । त्यस ठाउँमा इन्द्रले रत्न र स्वर्णजडित मन्दिर तयार गरी त्यहाँ स्फटिकबाट तयार गरिएको सर्वाङ्गसुन्दर भगवान् श्रीगणेशको दिव्य प्रतिमाको प्रतिष्ठा गरे ।।३७-३८।। श्रीगणेशप्रतिमाको प्रतिष्ठापछि देवराज इन्द्र श्रीगणेशमन्दिरको परिक्रमा गरेर आफ्नो धाममा गए । त्यसपछि यो चिन्तामणि-सरोवर संसारमा विख्यात भएको छ ।।३९।। आज पनि पवित्र जल भएकी गङ्गा नदी इन्द्रको आज्ञाअनुसार श्रीगणेशमूर्तिमा पवित्र जलले अभिषेक गर्दै आफ्नो गन्तव्यतर्फ जाने गर्दछिन् ।।४०।। यसरी मैले तपाईँलाई त्यस क्षेत्रको अद्भुत, सर्वपापनाशक, सर्वकामनादायक र मङ्गलमय महिमा बताएँ ।।४१।। हे राजन् ! त्यहाँ गएर तपाईँले पनि विधिपूर्वक स्नान गर्नुहोस्, त्यसबाट तपाईँ सबै दोषबाट मुक्त हुनुहुनेछ।।४२।।

**ब्रह्माजीले भन्नुभयो** – यसरी उपदेश गरी नारदमुनि रुक्माङ्गदलाई आशीर्वाद दिएर त्यहाँबाट प्रस्थान गर्नुभयो ।।४३।।

ॐ

**इति श्रीगणेशपुराणे उपासनाखण्डे चिन्तामणितीर्थवर्णनं नाम चतुस्त्रिंशोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'इन्द्रद्वारा श्रीगणेशको आराधना, श्रीगणेशदर्शन, वरप्राप्ति र चिन्तामणि तीर्थको वर्णन' शीर्षकान्वित चौँतीसौँ अध्याय पूर्ण भयो ।।३४।।

ॐ

## पञ्चत्रिंशोऽध्यायः { ३५ अध्याय }

व्यास उवाच

देवर्षौ तु गते तस्मिन् नृपः किमकरोत् तदा ।
रुक्माङ्गदो मे कथय कथामेतां मनोरमाम् ।।१।।

ब्रह्मोवाच

कृत्वोपदेशं सुमहान्तमेवं गते मुनौ नारदनाम्नि पुत्र !
रुक्माङ्गदो हर्षयुतो ददर्श सेनां स्वकीयां चतुरङ्गिणीं ताम्।।२।।

तथापि दृष्टो नृपतिर्विरूपो यः स्वर्णकान्ती रतिभर्तृरूपः।
आसीत् पुरेत्थं कथमेष जातः संशय्य पप्रच्छ नृपं निमित्तम्।।३।।

सेनान्य ऊचुः

गिरीन् वनानि सरितो भ्रान्त्वा च वयमागताः ।
क्षुत्तृट्परीता राजेन्द्र! त्वद्दर्शनसमुत्सुकाः ।।४।।

पदे पदे प्रपश्यन्तः सम्प्राप्तास्ते पदाम्बुजम् ।
इमामवस्थां दृष्ट्वा ते दुःखाद् दुःखतरं गताः ।।५।।

किं निमित्तमभूत् तन्नः कथयस्व नृपोत्तम ।

नृप उवाच

अहमग्रे समायातस्तृषितः क्षुधितश्च ह ।।६।।

अपश्यं पुरतः शीघ्रं वाचक्नविगृहाश्रमम् ।
तत्र गत्वा मया दृष्टा तस्य पत्नी शुभानना ।।७।।

नाम्ना मुकुन्देति शुभा याचिता सा जलं मया ।
सा तु दुष्टा स्वैरिणी च मामुवाचाऽशुभं वचः ।।८।।

रतिं कुरु मया सार्द्धं नो चेच्छापं ददामि ते ।
निराकृता मया सा तु बलाच्छुद्धेन चेतसा ।।९।।

तद्भर्तरि गते स्नातुं सा मां दुष्टाऽशपद् रुषा ।
ततस्तु वृक्षमूलेऽहमुपविष्टो हि दुःखितः ।।१०।।

प्रभावात् पूर्वपुण्यस्य दृष्टवान् नारदं मुनिम् ।
तेन मे कथितोऽरिष्टनाशको विधिरुत्तमः ।।११।।

**व्यासले भन्नुभयो -** देवर्षि नारदजी जानुभएपछि रुक्माङ्गदले के गरे? त्यो रुचिकर कथा मलाई सुनाउनुहोस्।।१।।

**ब्रह्माजीले भन्नुभयो-** हे वेदव्यास ! यसरी महामन्त्रको उपदेश प्रदान गरी नारदजी जानुभएपछि हर्षित भएका राजा रुक्माङ्गदले हराइरहेको चतुरङ्गिणी सेनालाई तुरुन्तै देखे । ती सैनिकहरूले पनि सुनौलो कान्ति भएका सुन्दर आफ्ना राजालाई विरूप अवस्थामा देखे । पहिलेको त्यो सुन्दर देह कसरी विरूप भयो भन्ने संशय गर्दै ती सैनिकहरूले राजासँग कुरूपताको कारणबारे सोधनी गरे ।।२-३।।

**सैनिकहरूले भने -** हे राजेन्द्र ! हामी हजुरको दर्शनका लागि उत्सुक भएर पर्वत, वन र नदीहरूमा घुम्दाघुम्दै भोक र प्यासले व्याकुल अवस्थामा यहाँ आइपुगेका छौं । पाइला-पाइलामा हजुरको खोजी गर्दै अहिले हजुरका चरणकमल सामु उपस्थित छौं । हजुरको यो विरूप अवस्था देखेर दुःखभन्दा पनि महादुःखमा परेका छौं ।।४-५।। के कारणले हजुरलाई यो कष्ट बेहोर्नुपर्‍यो ? त्यो हामीलाई सुनाउनुहोस् ।

**राजाले भने-** हे सैनिकहरू ! म त्यो दिन तिमीहरूभन्दा पहिले अगाडि बढें । मलाई भोक र प्यासले सताएको थियो। बाटामा मेरा सामु वाचक्नवि ऋषिको आश्रम देखापर्‍यो । त्यहाँ मैले सुन्दर अनुहार भएकी ऋषिपत्नी मुकुन्दालाई देखें। तिनीसँग मैले पानी मागें। ती नारी चञ्चल प्रकृतिकी, दुष्ट स्वभावकी र स्वैराचारिणी रहिछन् । तिनले 'मसँग रतिक्रीडा गर अन्यथा सराप दिनेछु' भनी मलाई अमङ्गल वचन सुनाइन् ।।६-८।। मेरो मन उद्विग्न भयो र मैले आफ्नो शक्ति लगाएर तिनको त्यस्तो याचनाको निषेध गरें, विरोध गरें। त्यस बेला तिनका पति वाचक्नवि आश्रममा थिएनन् । ती नभएको बेला यो घटना घट्यो र मुकुन्दाले मलाई रोषपूर्वक सराप दिइन्। त्यसपछि म बाहिर निस्किएँ र दुःखी भएर रूखको फेदमा बसें ।।९-१०।। पूर्वपुण्यका प्रभावबाट मैले नारदमुनिको दर्शन पाएँ । उहाँले मलाई अरिष्टनाश गर्ने उत्तम अनुष्ठानविधिको उपदेश गर्नुभएको छ ।।११।। उहाँले चिन्तामणि

चिन्तामणिक्षेत्रगतो गणेशतीर्थसंश्रित: ।
महिमा कथितस्तेन तस्य तीर्थस्य विस्तरात् ।।१२।।

तत्र स्नानं समाख्यातं मुनिना दिव्यचक्षुषा ।
अत: स्नातुं गमिष्यामि स्वदोषस्याऽपनुत्तये ।।१३।।

यान्तु सर्वे मया सार्द्धं तत्र स्नातुं यदीच्छत ।
स्नात्वा दत्त्वा यथाशक्ति सम्पूज्य च विनायकम् ।।१४।।

पूतास्तयो: प्रभावेण यास्याम: स्वपुरं तत: ।

क उवाच

इति ते निश्चयं बुद्ध्वा जग्मू राजपुर:सरा: ।
दृष्ट्वा तीर्थं गणेशाख्यं दिव्यदेहो बभौ नृप: ।।१५।।

तप्तकाञ्चनवर्णाभो यथापूर्वं मुनीश्वर !
ततो रुक्माङ्गदो मेने नारदोक्तमृतं वच: ।।१६।।

तत्र स्नात्वा ददौ दानान्यनेकानि नृपस्तदा ।
रुक्माङ्गदो ब्राह्मणेभ्यो मुदा परमया युत: ।।१७।।

विनायकं पूजयित्वा तेजोराशिं ददर्श स: ।
विमानमर्कप्रतिमं ब्राह्मणा: सेवकाश्च ते ।।१८।।

विनायकगणैर्जुष्टमप्सर:किन्नरैर्युतम् ।
नत्वा नृपस्तान् पप्रच्छ के यूयं कुत आगता: ।।१९।।

दूता: कस्य किमत्रास्ति कार्यं तद् ब्रूत सादरम् ।

ब्रह्मोवाच

श्रुत्वा नृपतिवाक्यानि मञ्जुलानि विमानगा: ।।२०।।

दूता विनायकस्योचुर्धन्योऽसि नृपसत्तम ।
येन ते सर्वभावेन ध्यातश्चिन्तामणि: प्रभु: ।।२१।।

तीर्थयात्रा कृता सम्यग् दानं दत्त्वा यथाविधि ।
चिन्तामणि: पूजितश्च कृतकृत्योऽसि साम्प्रतम् ।।२२।।

चिन्तितस्य प्रदानाद् हि चिन्तामणिरयं स्मृत: ।
वयञ्च कृतकृत्या: स्मो दर्शनात् तव सुव्रत ।।२३।।

क्षेत्र र श्रीगणेशतीर्थको महिमा मलाई बताउनुभयो । दिव्यदृष्टि भएका नारदजीले विस्तारपूर्वक त्यहाँ स्नान गर्नुपर्ने विषयमा पनि प्रकाश पार्नुभयो। त्यो सुनेर म छिट्टै आफ्नो दोषको निवृत्तिका लागि त्यहाँ नुहाउन जाने विचार गरेको छु । इच्छा छ भने तिमीहरू पनि मेरा साथमा त्यस तीर्थमा नुहाउन हिंड। त्यहाँ गई स्नान र दानका साथै शक्तिअनुसार भगवान् श्रीगणेशको पूजा गरेर चिन्तामणिपुर र श्रीगणेश कुण्डका प्रभावबाट पवित्र भई हामी सबै राजधानी फर्किने छौं ।

**ब्रह्माजीले भन्नुभयो** - यसरी ती सबैले राजाको निश्चय सुनेर उनलाई अगाडि लगाई चिन्तामणिपुर जान प्रस्थान गरे । श्रीगणेशतीर्थको दर्शन गरेपछि राजाको शरीर दिव्य भयो र राजा शोभायमान भए ।।१२-१५।। हे मुनीश्वर ! ती राजा पहिलेजस्तै, तपाएको सुनको जस्तो भास्वर आभाले चम्किरहेका थिए । त्यसपछि नारदजीले बताएका कुरा सत्य रहेछन् भनेर रुक्माङ्गदले विश्वास गरे।।१६।। त्यहाँ स्नान गरेर राजा रुक्माङ्गदले प्रसन्नतापूर्वक ब्राह्मणहरूलाई अनेक किसिमका दान दिए । विनायकको पूजा गरेपछि राजा रुक्माङ्गद र उनीसँग रहेका उनका सेवक र ब्राह्मणहरूले तेजोमय र सूर्यसमान प्रकाशमान विमानको दर्शन गरे ।।१७-१८।। त्यो विमान विनायकका गणहरूद्वारा सेवित र अप्सराहरूद्वारा शोभायमान थियो । राजा रुक्माङ्गदले विनायकगणलाई प्रणाम गर्दै आदरपूर्वक भने - तपाईंहरू को हुनुहुन्छ ? कहाँबाट आउनुभएको हो ? कसका दूत हुनुहुन्छ ? के कामले आउनुभएको छ ? यी सबै प्रश्नहरूको उत्तर दिनुहोस् ।

**ब्रह्माजीले भन्नुभयो** - राजाका ती मधुर वचनले परिपूर्ण प्रश्न सुनेर विमानमा रहेका दूतहरूले भने - हे राजन्! तपाइँ धन्य हुनुहुन्छ किनकि तपाईंले सर्वात्मना चिन्तामणिरूप श्रीगणेश प्रभुको ध्यान गर्नुभएको छ ।।१९-२१।। तपाईंले श्रद्धापूर्वक तीर्थयात्रा गर्नुभयो, विधिपूर्वक राम्ररी स्नान-दान गर्नुभयो र चिन्तामणि भगवान्को पूजा पनि गर्नुभयो । यस कारण तपाइँ अहिले कृतकृत्य हुनुभएको छ ।।२२।। चिन्तित पदार्थहरूलाई प्रदान गर्नाले प्रभु श्रीगणेशको नाम चिन्तामणि पनि हो । हे सुव्रत! तपाईंको दर्शन पाएर हामी पनि कृतकृत्य भएका छौं।।२३।। हे उत्तम राजा ! तपाईंले श्रीगणेशमा

महिमानं न जानीमस्तव भक्तेर्नृपोत्तम ।
कायेन वचसा बुद्ध्या जीवस्याप्यर्पणेन च ।।२४।।

आराधितस्त्वया देवः सर्वब्रह्माण्डनायकः ।
विनायकस्तस्य दूतास्तेन च प्रेषिता नृप ।।२५।।

उत्सुकः स उवाचाऽस्मान् मद्भक्तं शीघ्रयायिनः ।
रुक्माङ्गदं विमानेन ह्यानयन्तु ममान्तिकम् ।।२६।।

इति श्रुत्वा वयं याता आरोहस्व नभोगमम् ।
याहि शीघ्रतरं देवं सहाऽस्माभिर्विनायकम् ।।२७।।

ब्रह्मोवाच

इति श्रुत्वा वचस्तेषामाह रुक्माङ्गदो नृपः ।
क्वाऽहं मन्दमतिर्दूताः! क्व चाखण्डितविग्रहः ।।२८।।

अप्रमेयोऽप्रतर्क्यश्च चिन्मात्रो विभुरव्ययः ।
सर्गस्थित्यप्ययानां यः कारणं कारणातिगः ।।२९।।

तस्यादरो मयि कथं न जाने तीर्थजं फलम् ।
जन्मान्तरगतं किं मे फलितं पुण्यमुत्तमम् ।।३०।।

तेन वो दर्शनं जातमग्रेऽतिफलदं शुभम् ।
यूयं धन्यतरा येषां प्रत्यक्षोऽहर्निशं विभुः ।।३१।।

इत्युक्त्वा पूजयामास नत्वा चरणपङ्कजम् ।
प्रार्थयामास सर्वास्तान् पिता मम नृपोत्तमः ।
ब्रह्मण्यः सत्यवादी च भीमो भीमपराक्रमः ।।३२।।

विना तं कथमायामि मातरं चारुहासिनीम् ।
तयाऽप्याराधितो देवो देवदेवो विनायकः ।।३३।।

जन्मावधि न चान्यं सा मनुते देवतान्तरम् ।।३४।।

दूत उवाच

एवं चेत् तर्हि तीर्थेऽस्मिन् कुरु स्नानं तयोरपि ।
श्रेयस्तस्मै च तस्यै च पित्रे मात्रे प्रदीयताम् ।।३५।।

ततस्तावपि नेष्यामो विमानवरमास्थितौ ।।३६।।

गर्नुभएको भक्तिको महिमा हामी बताउन सक्दैनौं । तपाईँले शरीर, मन, बुद्धि र जीवतत्त्वको अर्पण गरेर सबै ब्रह्माण्डका नायक श्रीगणेश प्रभुको आराधना गर्नुभएको छ ।।२४-२५।। हामी श्रीगणेश प्रभुले पठाएका उहाँका दूत हौं । हामी त्यहाँबाट प्रस्थान गर्दा भगवान् श्रीगणेशले उत्सुकतापूर्वक हामीहरूलाई अह्राउनुभएको थियो - 'तिमीहरू छिटो गएर मेरा भक्त रुक्माङ्गदलाई विमानद्वारा मेरा सामु लिएर आओ' ।।२६।। उहाँको आज्ञा सुनेर हामी आएका छौं । तपाईँ विमानमा आरोहण गर्नुहोस् र हामीहरूका साथ भगवान् विनायकको समीपमा जानका लागि छिटो प्रस्थान गर्नुहोस्।।२७।।

**ब्रह्माजीले भन्नुभयो-** ती दूतहरूका कुरा सुनेर रुक्माङ्गदले भने - हे विनायकका दूतहरू ! म मूढ बुद्धि भएको मानिस कहाँ ? अखण्ड विग्रह, अप्रमेय, अतर्क्य, चिन्मात्र, सर्वव्यापक, अव्यय, सृष्टि, स्थिति र संहारका कारण, कारणद्वारा पनि अगम्य विनायक प्रभु कहाँ ? उहाँले कसरी मलाई यत्रो आदर दिनुभयो ? मलाई थाहा छैन । यसको एउटा कारण श्रीगणेशतीर्थमा स्नान गरेको फल हुनसक्छ अथवा अर्को कारण जन्मान्तरमा मैले गरेको पुण्यको फल नै मलाई प्राप्त भएको हुनसक्छ । तीमध्ये जुनसुकै कारणबाट भए पनि आज मैले आफ्नै सामु तपाईँहरूको दर्शन पाएँ । तपाईँहरू धन्यतम हुनुहुन्छ जसले दिनदिनै अन्तर्यामी भगवान् श्रीगणेशको दर्शन पाउनुहुन्छ ।।२८-३१।। यसरी आफ्ना मनका कुरा खोलेर राजा रुक्माङ्गदले ती दूतहरूका चरण-कमलको पूजा गरे । त्यसपछि फेरि निवेदन गरे - हे दूतहरू! मेरा पिता भीम ब्राह्मणहरूका सेवक, सत्यवादी र अतुलनीय पराक्रमी उत्तम राजा हुनुहुन्छ । उहाँ र मेरी माता चारुहासिनीविना म एक्लै कसरी तपाईँहरूसँग जान सक्छु ? मेरी आमाले पनि देवताका पनि देवता विनायक भगवान्‌को आराधना गर्नुभएको छ । उहाँले आफ्नो पूरा जीवन श्रीगणेशबाहेक अरू कुनै देवताको आराधना गर्नुभएको छैन ।।३२-३४।।

**एउटा दूतले भने-** यदि त्यसो हो भने यस श्रीगणेशतीर्थमा तपाईँका माता-पिताका लागि पनि स्नान गरी तपाईँले त्यसको पुण्य उहाँहरूका निमित्त सुम्पनुहोस् । त्यसो भयो भने हामीले तपाईँका माता-पितालाई पनि तपाईँका साथै विमानमा राखेर श्रीगणेश प्रभुका समीपमा पुर्‍याउनेछौं ।।३५-३६।।

ब्रह्मोवाच

इति तद्वचनं श्रुत्वा कृत्वा प्रतिकृतिं कुशैः ।
कुशोऽसि कुशपुत्रोऽसि ब्रह्मणा निर्मितः पुरा ।।३७।।

त्वयि स्नाते तु स स्नातो यस्येदं ग्रन्थिबन्धनम् ।''
एवं मन्त्रं समुच्चार्य सर्वेषामानुपूर्वशः ।।३८।।

ग्राम्याणां सर्वलोकानां चक्रे स्नानविधिं नृपः ।
चिन्तामणिक्षेत्रगते तीर्थे गणेशसंज्ञके ।।३९।।

ततो रुक्माङ्गदो राजा सबलो दूतवाक्यतः ।
विमानवरमारुह्य कौण्डिन्यं पुरमाययौ ।।४०।।

वाद्यघोषैर्ब्रह्मघोषैर्गन्धर्वाप्सरसां रवैः ।
नादितं गगनं तेन विमानेन दिशो दश ।।४१।।

मातापितृभ्यां प्रददौ श्रेयो रुक्माङ्गदो नृपः ।
सर्वेषामेव लोकानां स्नानश्रेयो विनायके ।।४२।।

दत्तमात्रे तु कौशेयस्नानजे श्रेयसि ध्रुवम् ।
विनायकाज्ञयाऽन्यानि विमानानि समाययुः ।।४३।।

प्रत्येकं ते समारूढा एकैकं गगनेचरम् ।
एवं रुक्माङ्गदो भीमस्तन्माता चारुहासिनी ।।४४।।

सर्वे लोका ययुस्तत्र यत्र देवो विनायकः ।
एवं तन्नगरं सर्वमाबालश्वपचावधि ।।४५।।

पुण्याद् गणेशतीर्थस्य स्नानजात् स्वर्गतिं गतम् ।

क उवाच

इति ते कथितं सर्वं यद् यत् पृष्टं त्वया मुने ।।४६।।

चिन्तामणिक्षेत्रगतं माहात्म्यं तीर्थसम्भवम् ।
यः शृणोति नरो भक्त्या सोऽपि तद्गतिमाप्नुयात् ।।४७।।

**ब्रह्माजीले भन्नुभयो** - दूतका वचन सुनेर रुक्माङ्गदले कुशको प्रतिमा बनाएर 'तिमी कुश हौ र कुशपुत्र पनि हौ। तिमीलाई पूर्वकालमा ब्रह्माजीले बनाएका हुन् । तिमीले नुहाउँदा जसको स्नानका लागि तिम्रो प्रतिमा निर्माण गरिएको छ त्यसले नुहाउँछ' यो अर्थ लाग्ने मन्त्रको उच्चारण गरेर क्रमैले पिता, माता र पुरवासी सबैका कुशको पुत्तला बनाएर चिन्तामणिक्षेत्रअन्तर्गत श्रीगणेशतीर्थमा स्नान गराउने कार्य सम्पन्न गरियो।।३७-३९।। त्यसपछि राजा रुक्माङ्गद सैनिकसहित दूतहरूको वाक्यअनुसार उत्तम विमानमा आरोहण गरेर कौण्डिन्यपुरमा पुगे । राजा आउँदा वेदघोष, वाद्यध्वनि, गन्धर्व र अप्सराको सङ्गीतमय कलरवबाट त्यहाँका आकाश र दिशाहरू निनादित भए । राजा रुक्माङ्गदले आफूले स्नान गरेको पुण्य माता-पितालाई प्रदान गरी बाँकी रहेको पुण्य त्यहाँका मानिसहरूका निमित्त समर्पण गरे। यसरी राजा रुक्माङ्गदले कुशका प्रतिकृति बनाई स्नान गराएर आफ्नो पुण्य बाबु-आमा र जनताका लागि समर्पण गर्नासाथ भगवान् श्रीगणेशको आज्ञाबाट अरू धेरै विमानहरू त्यहाँ आइपुगे ।।४०-४३।। राजा रुक्माङ्गदले ती विमानहरूमा आफ्ना माता-पिता, परिवार र सबै जनतालाई बसेको देखे । राजा रुक्माङ्गदको पुण्यप्रदानका कारण सबै मानिसहरू भगवान् विनायक विराजमान हुनुभएको धाममा प्राप्त भए । श्रीगणेशतीर्थमा गरिएको पुण्यप्रद स्नानका कारण बालकदेखि चाण्डाल जातिसम्मका नर-नारीले भरिभराउ त्यो नगर नै स्वर्गमा प्राप्त भयो ।

**ब्रह्माजीले भन्नुभयो** - हे वेदव्यास ! तपाईंले जुन कुरा सोध्नुभएको थियो, तिनको उत्तर मैले दिएँ । जसले भक्तिपूर्वक चिन्तामणि तीर्थको महिमा श्रवण गर्दछ त्यो मानिस पनि चिन्तामणि तीर्थको प्रतापबाट श्रीगणेशलोकमा प्राप्त हुनेछ ।।४४-४७।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे चिन्तामणितीर्थवर्णनं नाम पञ्चत्रिंशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'रुक्माङ्गदको राजधानी प्रवेश र चिन्तामणि तीर्थको महिमा' शीर्षकान्वित पैंतीसौं अध्याय पूर्ण भयो ।।३५।।

ॐ

## षट्त्रिंशोऽध्यायः　{ ३६ अध्याय }

व्यास उवाच

श्रुतं गणेशतीर्थस्य माहात्म्यं कमलासन ! ।
रुक्माङ्गदस्य चरितं कौण्डिन्यपुरवासिनाम् ।।१।।

तथापि ब्रूहि मे ब्रह्मन् ! मुकुन्दाचरितं शुभम् ।

ब्रह्मोवाच

गते रुक्माङ्गदे सा तु जज्वाल मदनाग्निना ।।२।।

दावाग्निना यथा ग्रीष्मे महावनस्थली सुत ! ।
मुकुन्दा नालभच्छर्म वने शीतलमारुते ।।३।।

लतापुष्पमये स्थाने चन्द्रचन्दनतोऽपि च ।
तस्या न रोचते हास्यं गीतं नृत्यं कथान्तरम् ।।४।।

अन्नं जलं विह्वलायास्तच्चित्ताया मुनीश्वर ! ।
क्षुत्तृट्श्रमेण तस्यास्तु क्षणं निद्रा समाययौ ।।५।।

तामिन्द्रो बुबुधे कान्तां प्रसुप्तां विजने वने ।
कामातुरां विह्वलाञ्च रुक्माङ्गदकृते सुत ।।६।।

धृत्वा रौक्माङ्गदं रूपं बुभुजे कामुकान्तु ताम् ।
आलिलिङ्ग मुदा शक्रो मुकुन्दा जहृषे भृशम् ।।७।।

साऽपि रुक्माङ्गदं तं तु चुचुम्बे सुभृशं सुत ! ।
सोऽपि तस्याः कुचौ पीनौ ममर्द दृढमुष्टिना ।।८।।

व्यंशुकां व्यंशुको रेमे निःशङ्कं स तया सह ।
ततः सा लज्जमानेव स्वगृहं प्रत्यपद्यत ।।९।।

इन्द्रो रुक्माङ्गदो भूतस्तत्रैवाऽन्तर्दधे सुत ।
मेने रुक्माङ्गदो भुक्तस्ततो गर्भं दधौ तु सा ।।१०।।

सुषुवे नवमे मासि सुवेलायां सुतं शुभम् ।
चारुसर्वानवद्याङ्गं रूपेण मदनातिगम् ।।११।।

**व्यासले भन्नुभयो** – हे कमलासन ! श्रीगणेशतीर्थको महिमा, रुक्माङ्गदको चरित्र र कौण्डिन्यपुरका निवासीहरूको श्रीगणेश लोकप्राप्तिसम्बन्धी कथा मैले सुनें ।।१।। अब मलाई वाचक्नवि ऋषिकी पत्नी मुकुन्दाको चरित्रको विषयमा सुनाउनुहोस् ।

**ब्रह्माजीले भन्नुभयो** – रुक्माङ्गद रिसाएर आश्रमबाट बाहिर गएपछि ती मुकुन्दा ग्रीष्म ऋतुमा डढेलोले महावन डढेझैं कामदेवको आगोमा डढ्न थालिन् ।।२।। वनको शीतल हावाको सेवन गर्दा, कोमल लता एवं सुन्दर पुष्पद्वारा शोभायमान सुन्दर स्थानहरूमा भ्रमण र चन्द्रमाको जुनेली र चन्दनको सेवन गर्दा पनि तिनले शान्ति पाइनन् । कामविह्वल भई रुक्माङ्गदको चिन्तामा लीन मुकुन्दालाई हास्य, गीत, नृत्य, कथा, अन्न र जल केही पनि रुचेन । भोक, प्यास र ग्लानिका कारण ती एकछिन निदाइन् ।।३-५।। निर्जन वनमा रुक्माङ्गदप्रति कामासक्त भएर व्याकुल भएकी र विचेत अवस्थामा रहेकी ती सुन्दरी मुकुन्दालाई देखेर देवराज इन्द्र रुक्माङ्गदको रूप धारण गरी त्यहाँ आए र तिनले कामपीडाले व्याकुल मुकुन्दासँग रतिक्रीडा गरे । इन्द्रले रुक्माङ्गदको रूप लिएर गाढ आलिङ्गन गर्दा ती मुकुन्दा आनन्दप्राप्तिका कारण अत्यन्त हर्षित भइन् ।।६-७।। मुकुन्दाले पनि स्नेहातिरेकले रुक्माङ्गदका अङ्ग – अङ्गमा चुम्बन गरिन् । रुक्माङ्गदरूप इन्द्रले पनि आफ्ना हातले मुकुन्दाका कठोर र ठूला स्तनहरूको मर्दन गरे । निर्वस्त्र भएका रुक्माङ्गदले कामपीडाका कारण निर्लज्ज र निर्वस्त्र हुनपुगेकी मुकुन्दासँग पटक-पटक यौन क्रीडा गरे । भरपूर यौनसुख प्राप्त गरेपछि ती मुकुन्दा लजाउँदै आफ्नो आश्रमतर्फ लागिन् ।।८-९।। रुक्माङ्गदको रूप लिएर वनमा आई मुकुन्दासँग कामक्रीडा गर्ने इन्द्र पनि त्यहीं अन्तर्धान भए । इन्द्रको छल नबुझेकी मुकुन्दाले मनमा मैले रुक्माङ्गदसँग भोग गरें भन्ने विश्वास गरिन् । त्यसपछि मुकुन्दाले गर्भधारण गरिन् । नौ महिना पूरा भएपछि उत्तम समयमा तिनले सर्वाङ्गसुन्दर र सौन्दर्यबाट कामदेवलाई पनि निस्तेज तुल्याउने मङ्गलमय बालकलाई जन्म दिएकी थिइन् ।।१०-११।।

तस्य शब्देन महता धरण्यां पतितस्य तु ।
सनादं दशदिग्वृन्दमभूत् खं भूरसातलम् ।।१२।।

पक्षिणो बभ्रमुः सर्वे उड्डीयोड्डीय सर्वतः ।
वाचक्नविः समायातस्त्यक्त्वा स्वं नित्यकर्म च ।।१३।।

मुकुन्दाचरितं तेन नैव बुद्धं कदाचन ।
जातकर्मादिकं सर्वं चकार भृशहर्षितः ।।१४।।

ददौ दानं यथाशक्ति ब्राह्मणेभ्यो यथार्हतः ।
दशाहे तु व्यतीते स नामकर्माऽकरोन्मुनिः ।।१५।।

गृत्समदेत्यनुज्ञातो ज्योतिःशास्त्रपरैर्द्विजैः ।
ततस्तु पञ्चमेऽब्देऽस्य व्रतबन्धं चकार ह ।।१६।।

वेदव्रतानि चत्वारि चकार बटुकस्य सः ।
सकृत्त्रिगदमात्रेण गृह्णाति ब्रह्मतेजसा ।।१७।।

वेदशास्त्रनिधिर्जातः स्वकर्मकुशलोऽपि च ।
कदाचित् सुमुहूर्ते तु पिता वाचक्नविः सुतम् ।।१८।।

गणानान्त्वेति ऋङ्मन्त्रं महान्तमुपदिष्टवान् ।
उवाच च महामन्त्रो वैदिकोऽखिलसिद्धिदः ।।१९।।

आगमोक्तेषु मन्त्रेषु सर्वेषु श्रेष्ठ एव च ।
ध्यात्वा गजाननं देवं जपैनं स्थिरमानसः ।।२०।।

परां सिद्धिं समाप्यैव ख्यातिं लोके गमिष्यसि ।
ततो गृत्समदो विप्रो मन्त्रं प्राप्य पितुर्मुखात् ।।२१।।

अनुष्ठानरतो भूत्वा जपध्यानपरोऽभवत् ।
गते बहुतिथे काले महतस्तपसो मुनेः ।
तस्मिन् मगधदेशे यो राजा मगधसंज्ञितः ।।२२।।

चारुरूपो महामानी दानशूरोऽरिमर्दनः ।
नानालङ्कारशोभाढ्यो महार्हासनसंश्रितः ।।२३।।

सुधर्मासनगो धीरः पुरुहूत इवापरः ।
चतुरङ्गबलोपेतो ज्ञानी पण्डितमानदः ।।२४।।

बालकले धर्ती टेक्ने बेला चिच्याएको ठूलो स्वरबाट दसै दिशा, आकाश, पृथिवी र पाताल शब्दायमान भए । ।।१२।। त्यो स्वर सुनेर चराहरू पनि उड्दै आकाशमा यत्र-तत्र घुम्न थाले। त्यस बेला आफ्नो नित्य कर्म त्यत्तिकै छाडेर वाचक्नवि ऋषि पनि आश्रममा आइपुगे।।१३।। ती ऋषिलाई आफ्नी धर्मपत्नी मुकुन्दाको त्यो स्वच्छन्द आचरणबारे केही पनि थाहा थिएन । छोरा जन्मेको थाहा पाउँदा अत्यन्त खुसी भएका तिनले जातकर्म आदि संस्कार सम्पन्न गरी ब्राह्मणहरूलाई यथाशक्ति र योग्यताअनुसार दान दिए । बालक जन्मेको १० दिन पूरा भएपछि तिनले बालकको नामकरण संस्कार सम्पन्न गरे ।।१४-१५।। ज्योतिषशास्त्रका विद्वान्हरूको भनाइअनुसार बालकको नाम गृत्समद राखियो । बालकले पाँचौं वर्षमा प्रवेश गरेपछि तिनको व्रतबन्ध संस्कार गरियो । व्रतबन्धपछि चार वेदको अध्ययन आरम्भ गराइयो । एक पटक सुनाउँदामात्र तिनले सबै वेद र शास्त्र कण्ठस्थ गरे ।।१६-१७।। यसरी ती बालक गृत्समद वेद र शास्त्रका ठूला विद्वान् र कर्मकाण्डका कुशल ज्ञाता पनि बने । कुनै दिन उत्तम मुहूर्तमा ऋषि वाचक्नविले आफ्ना छोरालाई **गणानान्त्वा गणपतिं हवामहे०** इत्यादि ऋग्वेदमन्त्रको उपदेश गर्दै भने- यो श्रीगणेशको वैदिकमन्त्र सबै प्रकारका सिद्धि प्रदान गर्न समर्थ छ । यो मन्त्र वेदमा बताइएका धेरै मन्त्रहरूमा सर्वश्रेष्ठ पनि छ । हे पुत्र ! तिमीले आफ्नो चित्त स्थिर गराएर यो मन्त्र जप।।१८-२०।। यस मन्त्रको जपबाट परम सिद्धि प्राप्त गरेपछि तिमी लोकमा विख्यात हुनेछौ । यो कुरा सुनेर ब्रह्मकुमार गृत्समदले आफ्ना पिताबाट मन्त्रोपदेश ग्रहण गरे। त्यसपछि ती बालक अनुष्ठान, मन्त्रजप र ध्यानमा तत्पर भए । यसरी गृत्समदको साधनाका धेरै दिन बितेपछि मगध देशका मगध नामक राजासँग सम्बद्ध एउटा घटना भयो ।।२१-२२।। राजा मगध सुन्दर, स्वाभिमानी, दानशूर, शत्रुसंहारक र अलङ्कारको शोभाद्वारा शोभायमान पनि थिए । ती राजा सिंहासनमा आसीन हुँदा राजकीय ऐश्वर्यका कारण सुधर्मा नामक देवसभामा विराजमान इन्द्रसमान देखिन्थे। चतुरङ्गिणी सेनाद्वारा सुरक्षित तिनले ज्ञानी र विद्वानहरूको सम्मान गर्न कत्ति पनि छुच्याईं गरेनन् । मगध राजाका गुणनिधि र वाचस्पति नामक दुई अमात्यहरू आफ्ना

अमात्यौ द्वौ ज्ञाननिधी वाचस्पत्यधिकौ गुणैः ।
अम्बिका नाम भार्याऽस्य चारुरूपा गुणाधिका ।।२५।।

पतिव्रता महाभागा शापानुग्रहणे क्षमा ।
तस्य राज्ञः पितुः श्राद्धे समाजग्मुर्महर्षयः ।।२६।।

राज्ञाहूता वसिष्ठात्रिप्रमुखाः श्रुतिपारगाः ।
आकारितो गृत्समदस्तपस्वी शुचिमानसः ।।२७।।

ततः शास्त्रप्रसङ्गेन प्रौढिं गृत्समदोऽवदत् ।
तमत्रिर्धिग्धिगित्येवमब्रवीन्मुनिसन्निधौ ।।२८।।

तपस्वीति भवान्मान्यो न मुनिस्त्वं यतस्तव ।
जन्म रुक्माङ्गदाज्जातं राजपुत्राद् विचारय ।।२९।।

नास्मत्समक्षं पूजार्ह इतो गच्छ स्वमाश्रमम् ।
इत्यत्रिवचनं श्रुत्वा क्रोधदीप्त इव ज्वलन् ।।३०।।

दहन्निव त्रिलोकीं स भक्षयन्निव तान् मुनीन् ।
अपरे त्वपलायन्त सिंहं दृष्ट्वा यथा मृगाः ।।३१।।

उवाच तत्र सदसि वसिष्ठादीन् मुनीन् प्रति ।

गृत्समद उवाच

यर्हि रुक्माङ्गदस्याहं न भवेयं मुनीश्वराः ।
तदा शापाग्निना युष्मान् कुर्यां भस्मावशेषितान् ।।३२।।

ब्रह्मोवाच

इत्युक्त्वा तान् मुनीन् सर्वान् प्रययौ मातरं प्रति ।
पप्रच्छ तां गृत्समदो वद दुष्टेति कामुके ।।३३।।

मुकुन्दे ! वद मे तातं नो चेद् भस्म भविष्यसि ।
आकर्ण्यैवं वचस्तस्य चकम्पे भृशविह्वला ।।३४।।

मुकुन्दा मारुतेनेव कदली कुड्मलान्विता ।
उवाच दीनया वाचा बद्धाञ्जलिपुटा सती ।।३५।।

मुकुन्दोवाच

मृगयासक्तचित्तोऽभूद् भ्रष्टसार्थो नृपोत्तमः ।
त्रैलोक्यसुभगो दृष्टो मया रुक्माङ्गदः शुभः ।।३६।।

गुणविशेषले गर्दा बृहस्पतिभन्दा पनि उत्तम र ज्ञानसागर थिए। राजा मगधकी रानी अम्बिका पनि अत्यन्त रूपमती, गुणवती र पतिव्रताहरूमा श्रेष्ठ नारीरत्न थिइन्। ती भाग्यशाली नारी सराप एवं अनुग्रहमा कुशल विदुषी पनि थिइन् । ती मगध राजाद्वारा आफ्ना दिवङ्गत पिताको निमित्त गरिने एकोद्दिष्टश्राद्धका लागि आमन्त्रित वसिष्ठ, अत्रि आदि वेदमा पारङ्गत महर्षिहरू भेला भएका थिए । त्यसैगरी पवित्र ज्ञान भएका गृत्समद पनि त्यहाँ निमन्त्रित थिए । शास्त्रचर्चाको प्रसङ्गमा गृत्समदले अत्रि र वसिष्ठ आदि ऋषिहरूका सामु आफ्नो पाण्डित्य देखाए। तिनलाई शास्त्रीय पाण्डित्य देखाउन लागेको देखेर मुनिहरूकै माझमा अत्रि ऋषिले रोषपूर्वक धिक्कार गर्दै भने - हे गृत्समद! तिमी तपस्वीका रूपमा मान्य छौ तापनि हामी तिमीलाई मुनिका रूपमा मान्दैनौं, किनकि तिमी राजा रुक्माङ्गदबाट जन्मेका राजकुमार हौ । यो कुरा विचार गर ।।२३-२९।। तिमी हामीजस्ता ऋषिहरूको पंक्तिमा पूजनीय छैनौ । तसर्थ अविलम्ब यहाँबाट आफ्नो आश्रमतर्फ फर्क । अत्रि ऋषिका यी कुरा सुनेर आफ्नो उग्र क्रोधद्वारा चम्कँदै - स्वर्ग, मर्त्य एवं पातालालाई पनि डढाउन खोज्दै र ती मुनिहरूलाई पनि खान खोज्दै उभिएका गृत्समदको क्रोध देखेर त्यस सभामा भेला भएका केही मानिसहरू सिंहलाई देख्दा मृगहरू भागे झैं भाग्न थाले । त्यसबेला गृत्समदले ती ऋषिहरूलाई लक्षित गर्दै भन्नथाल्यो ।

**गृत्समदले भन्यो** - यदि म रुक्माङ्गदबाट जन्मेको रहेन छु भने त्यस बेला मैले तपाईंहरूलाई सरापको आगोले खरानी तुल्याउने छु।।३०-३२।।

**ब्रह्माजीले भन्नुभयो** - गृत्समद अत्रि आदि ऋषिहरूलाई यसरी आफ्ना खरा कुरा सुनाएर आफ्नी आमा मुकुन्दा सामु पुगे र आमालाई भने - अत्यन्त दुष्ट स्वभाव भएकी कामुकी, हे मुकुन्दा ! तिमीले नढाँटिर भन - मेरा बाबु को हुन् ? ढाँट्यौ भने मैले तिमीलाई भर्खरै खरानी बनाउने छु। आफ्ना छोरा गृत्समदको कुरा सुनेर अत्यन्त डराएकी मुकुन्दा हावाद्वारा ढल्न लागेको बोंगासमेतको केरा झैं काँप्दै दीन वचनले हात जोडेर भन्न लागिन् ।।३३-३५।।

**मुकुन्दाले भनिन्** - हे पुत्र ! शिकार खेलिरहेका राजा रुक्माङ्गद सेनासँग बिछोड भएपछि वाचक्नवि ऋषिको

अनुष्ठानरते वाचक्नवौ मे भर्तरि प्रिये ।
अनिवार्या: स्त्रिय इति स्मृत्वा वाक्यं विधीरितम् ।।३७।।

तस्मिन् नृपे सक्तमना जाताऽस्मि स पिता तव ।
श्रुत्वेत्थं वचनं तस्या मौनवान् स ययौ मुनि: ।।३८।।

लज्जयाऽधोमुख: शापमभ्यधाज्जननीं प्रति ।

पुत्र उवाच

दुष्टे मूढे पापरते कानने कण्टकी भव ।।३९।।

असङ्ख्येयफला सर्वै: प्राणिभि: परिवर्जिता ।
साऽपि शापं ददौ तस्मै क्रोधाविष्टा सुताय हि ।।४०।।

जननीत्वमनादृत्य यत: शप्ता खलु त्वया ।
अत: शपामि त्वां पुत्र! त्वत्त: पुत्रोऽतिदारुण: ।।४१।।

त्रैलोक्यभयदो दैत्यो भविष्यति महाबल: ।
एवं शशपतुस्तौ तु मातापुत्रौ परस्परम् ।।४२।।

क उवाच

सा नदैव शरीरं तत् त्यक्त्वाऽभूद् बदरी वने ।
वर्जिता पक्षिसङ्घातैर्जारजैरण्डजैरपि ।।४३।।

ततोऽन्तरिक्षे वागासीदिन्द्राद् गृत्समदो ह्यभूत् ।
स तु गृत्समदो ब्रह्मन्ननुष्ठानाय जग्मिवान् ।।४४।।

इदं गृत्समदाख्यानं य: शृणोति नरोत्तम: ।
न स सङ्कटमाप्नोति वाञ्छितं लभतेऽखिलम् ।।४५।।

आश्रममा आए । त्यस बेला मैले रुक्माङ्गदलाई स्वर्ग, मर्त्य र पातालमा भएका युवकहरूभन्दा राम्रा, लक्का जवान देखें। मेरा पति वाचक्नवि अनुष्ठानमा संलग्न हुनुहुन्थ्यो । त्यस बेला 'स्त्री स्वतन्त्र हुन्छन्' भन्ने ब्रह्माजीको वचन मैले सम्झें। यो स्मरणले मेरो उत्साह बढ्यो र म ती राजामा कामासक्त भएँ । बाबु ! तिम्रा पिता ती रुक्माङ्गद राजा नै हुन् । आमाका यी कुरा सुनेर गृत्समद मौन भए र लाजले मुख निहुराए । त्यसपछि तिनले आफ्नी आमा मुकुन्दालाई सराप दिए ।

**गृत्समदले** भने- दुष्ट, मूढ र पापिनी हे मुकुन्दा! तिमी जङ्गलमा काँडादार रूखको रूपमा परिणत होऊ।।३६-४०।। हे आमा ! तिमी असङ्ख्य फलले युक्त र प्राणीहरूको पहुँचबाट टाढा हुनेछौ । त्यसपछि मुकुन्दाले पनि आफूलाई सराप दिने छोरासँग रिसाएर सराप दिँदै भनिन्- हे गृत्समद! जन्म दिने आमा हुन् भन्ने ख्याल नगरी तिमीले मलाई सराप दियौ तसर्थ म पनि तिमीलाई सराप दिन्छु- तिमीबाट तीन लोकलाई सन्त्रास दिने, महाबली र भयङ्कर दैत्य पैदा हुनेछ । यसरी ती आमा-छोराले एकले अर्कालाई सराप दिए ।।४१-४२।।

**ब्रह्माजीले भन्नुभयो** - ती मुकुन्दा तत्काल शरीर त्याग गरी चरा-चुरुङ्गी, जरायुज र अण्डज कुनै प्राणी पनि नजिकमा जान डराउने वनमा काँडादार बयरको रूख भएर रहिन् ।।४३।। त्यस बेला आकाशवाणी भयो -'इन्द्रबाट गृत्समद पैदा भएका हुन् ।' यो आकाशवाणी सुनेपछि गृत्समद अनुष्ठान गर्न प्रस्थान गरे । जसले यो गृत्समदको उपाख्यान सुन्दछ त्यो मानिस सङ्कटमा पर्दैन र चिताएका कुरा पनि प्राप्त गर्दछ ।।४४-४५।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे गृत्समदोपाख्यानं नाम षट्त्रिंशोऽध्याय:

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'वाचक्नवि ऋषिकी पत्नी मुकुन्दालाई इन्द्रसहवासबाट गृत्समदनामक पुत्रजन्म र गृत्समदको उपाख्यान' शीर्षकान्वित छत्तीसौं अध्याय पूर्ण भयो ।।३६।।

ॐ

## सप्तत्रिंशोऽध्यायः { ३७ अध्याय }

**ब्रह्मोवाच**

भ्रमन् मुनिर्ददर्शाग्रे वनं पुष्पकसंज्ञितम् ।
नानाद्रुमलताकीर्णं पुष्पप्रकरशोभितम् ।।१।।

शोभितं निर्झरजलैर्निर्जरैर्मुनिसत्तमैः ।
ननाम तान् गृत्समदो न्यवसच्च तदाज्ञया ।।२।।

तत्र स्नात्वा जपं चक्रे पादाङ्गुष्ठाग्रनिर्भरः ।
स्थिरेण मनसा ध्यायन् देवं विघ्नेश्वरं विभुम् ।।३।।

नासाग्रन्यस्तदृष्टिः सन् निरीक्षन् स दिशो दश ।
जितेन्द्रियो जितश्वासो जितात्मा मारुताशनः ।।४।।

दिव्यवर्षसहस्रं स तपस्तेपे सुदारुणम् ।
उन्मील्य नयनेऽपश्यद् यदा गृत्समदो मुनिः ।।५।।

तदा नेत्रोद्भवो वह्निस्त्रिदशान् पर्यतापयत् ।
शशङ्किरे तदा देवाः कस्याऽयं पदभाग् भवेत् ।।६।।

अपरं गलितं पत्रं भक्षयन्नेकमेव च ।
यत्नमास्थाय परमं स्थाणुभूतोऽतिनिश्चलः ।।७।।

दशपञ्चसहस्राणि तेपे निश्चलमानसः ।
ततो विनायको दृष्ट्वा तपनं तस्य दुर्घटम् ।।८।।

अनुग्रहाय तस्याऽथ प्रादुरासीत् सुदीप्तिमान् ।
यथा धेनुर्वत्सरवं श्रुत्वा धावति सत्वरम् ।।९।।

तथा विनायको देवः शीघ्रं गृत्समदं ययौ ।
भासयँस्तेजसा विश्वं सहस्ररविसन्निभः ।।१०।।

चलत्कर्णतालो बृहद्दन्तिलीलो
मुदा चारुखेलो लसच्चन्द्रभालः ।
बृहत्पद्ममालो जगत्कार्यमूलः
करे कञ्जनालो नमत्सेविमेलः ।।११।।

**ब्रह्माजीले भन्नुभयो-** मुनि गृत्समदले घरबाट अनुष्ठानका लागि प्रस्थान गरेपछि घुम्दै जाँदा पुष्पकनामक वन देखे । त्यो वन अनेक थरि वृक्ष र लहराले गहन थियो । अनेक प्रकारका फूलहरूका कारण रमणीय पनि थियो । त्यो वन झरनाको जलप्रवाह, देवताहरूको चहल-पहल र मुनिहरूका आश्रमले सुहाएको थियो । गृत्समदले मुनिहरूलाई प्रणाम गरे र तिनको आज्ञा पाएर त्यहीं बसे ।।१-२।। गृत्समद झरनाको जलमा नुहाई पाउको बूढी औंलाले भुइँमा टेकेर स्थिर मनले विश्वका स्वामी विघ्नेश्वर प्रभुको ध्यान गर्दै जपानुष्ठान गर्न लागे ।।३।। त्यस बेला तिनले आफ्नो दृष्टि दसै दिशाबाट हटाएर नाकको टुप्पोमा बाँधेका थिए । जितेन्द्रिय, जितप्राण र वायुभक्षी भएर तिनले दिव्य एकहजार वर्षसम्म कठोर तपस्या गरे । जुन बेला गृत्समद ऋषिले आँखा खोलेर बाहिरको दृश्य हेरे - त्यस बेला तिनको आँखाबाट प्रकट भएको आगोले देवताहरूलाई सन्तप्त तुल्यायो । ती गृत्समद ऋषि हामी देवताहरूमध्ये कुनै देवताको खास पद हस्तगत गर्न तप गरिरहेका छन् भन्ने बारे देवताहरूलाई शङ्का भयो।।४-६।। त्यसपछि गृत्समदले भुइँमा खसेको एउटा पात खाँदै बढो यत्नपूर्वक ठूटो झैं स्थिर भएर पन्ध्रहजार वर्षसम्म निश्चल मनबाट तपस्या गरे । त्यसपछि भगवान् श्रीगणेश तिनको कठोर तपस्या देखेर बाच्छो कराएको शब्द सुनेपछि तीव्र वेगले त्यसका सामु दौडिएर जाने गाईझैं गृत्समदमाथि कृपा गर्न तेजोमयरूपमा प्रकट हुनुभयो । त्यस बेला श्रीगणेशले आफ्नो तेजबाट संसारलाई आलोकित गर्नुभएको थियो र उहाँ हजार सूर्यसमान तेजस्वी देखिनुहुन्थ्यो ।।७-१०।। श्रीगणेशका कानहरू ताडी वृक्षका पातझैं कम्पायमान थिए। उहाँ विशाल आकारको हात्तीसमान लीला गर्दै हुनुहुन्थ्यो । उहाँ प्रसन्नतापूर्वक सूँढ नचाएर क्रीडा गर्दै हुनुहुन्थ्यो । उहाँको निधारमा चन्द्रमा टल्किरहेका थिए र घाँटीमा कमलको विशाल माला सुहाएको थियो । संसारका सम्पूर्ण क्रियाकलापका मूलस्रोत श्रीगणेश सूँढमा कमलको डाँठ लिएर खेलाउँदै हुनुहुन्थ्यो र वन्दना गरिरहेका आफ्ना भक्तसँग मिलनको इच्छा गर्दै हुनुहुन्थ्यो ।।११।। सिंहमा सवार हुनुभएका, सर्पलाई

सिंहारूढो दशभुजो व्यालयज्ञोपवीतवान् ।
कुङ्कुमागरुकस्तूरीचारुचन्दनचर्चित: ।।१२।।
सिद्धिबुद्धियुत: श्रीमान् कोटिसूर्याधिकद्युति: ।
अनिर्वाच्यस्वरूपोऽपि लीलयाऽऽसीत् पुरो मुने: ।।१३।।
तत्तेजसा हृतं तेजो मुनेस्तस्य महात्मन: ।
ब्रध्नस्य तेजसा यद्वन् नाक्षत्रं चान्द्रजं मह: ।।१४।।
निर्माल्य नयने सोऽथ चकम्पे भृशविह्वल: ।
पपात मूर्च्छितो भूमौ विस्मृतध्यानमङ्गल: ।।१५।।
पुनश्च मनसा ध्यायन् गजाननमनामयम् ।
मनसा तर्कयन् विघ्ननिमित्तं व्याकुलो मुनि: ।।१६।।
किमेतत् क्षोभजननं सहसा समुपस्थितम् ।
अद्य प्रभृति यत् तप्तं तत् कथं मे वृथा गतम् ।।१७।।
पाहि देवेश ! सर्वात्मन् विघ्नादस्माद् भयानकात् ।
त्वामृते शरणं यामि कमन्यं जगदीश्वरम् ।।१८।।
महद् दु:खं मया देव ! प्राप्तं केन च हेतुना ।
नास्यन्पङ्क्तौ पूजनीय इति यद् दहते मन: ।।१९।।

ब्रह्मोवाच

इति तद्गदितं श्रुत्वा जगाद स विनायक: ।

गणेश उवाच

अनुग्रहाय सम्प्राप्तं विद्धि मां गणनायकम् ।।२०।।
सनकादिभिरप्राप्यं चिरं नियममास्थितै: ।
त्यक्त्वा भयं ब्रूहि यत् ते वाञ्छितं मुनिसत्तम ।।२१।।
एकाङ्गुष्ठेन तपसा तोषितोऽहं त्वयाऽनिशम् ।

ब्रह्मोवाच

निशम्येत्थं वचस्तस्य देवदेवस्य शोभनम् ।।२२।।
दण्डवत् प्रणनामैनं निजानन्दपरिप्लुत: ।
उवाच परमप्रीतो वरदं तं विनायकम् ।।२३।।

गृत्समद उवाच

अद्य मे सफलं जन्म तपसो नियमस्य च ।
अखण्डानन्दरूपो यो ब्रह्मभूयो निराकृति: ।।२४।।

यज्ञोपवीतका रूपमा छातीमा बेर्नु हुने, कुंकुम, अगर एवं कस्तूरी मिश्रित सुन्दर चन्दन शरीरमा लेपन गर्नुहुने, सिद्धि र बुद्धिसाथ लिएर सुहाउनुभएका अनिर्वचनीय शोभासम्पन्न र कोटि-कोटि सूर्यभन्दा पनि तेजस्वी भगवान् श्रीगणेश अनिर्वाच्य हुनुभएता पनि लीलापूर्वक गृत्समद मुनिका सामु उभिनुभयो ।।१२-१३।। परम तेजस्वी भगवान् श्रीगणेश नजिकै आउनुहुँदा सूर्यको तेजका सामु चन्द्रमा र नक्षत्रको तेज मन्द भएझैं गृत्समदको तपस्याको तेज पनि मन्द भयो।।१४।। गृत्समद अत्यन्त व्याकुल भई आँखा चिम्लेर ,काँप्न थाले अनि मङ्गलमय ध्यान बिर्सेर भुइँमा लर्खराउन थाले ।।१५।। फेरि तिनले आफ्नो मनमा निरामय भगवान् श्रीगणेशलाई चिताए । तेजको पुञ्ज देखेर व्याकुल ती मुनि मनद्वारा विघ्नको कारणको विषयमा तर्क गर्दै भन्न लागे- मनमा विक्षोभ जगाउने यो तत्त्व कहाँबाट समाधि आइलाग्यो? आजसम्म मैले जुन तपस्या गरें त्यो कसरी खेर गयो ? हे सर्वात्मन् गणनाथ ! यस भयानक विघ्नबाट मेरो रक्षा गर्नुहोस्। म तपाईँलाई छाडेर कुन जगदीश्वरको शरणमा जाऊँ ? ।।१६-१८।। मैले यतिका धेरै दु:ख किन पाइरहेको छु ? वसिष्ठ, अत्रि आदि ऋषिहरूले - 'हे गृत्समद ! तिमी हामीजस्ता मुनिहरूको पङ्क्तिमा बसी पूजा ग्रहण गर्न योग्य छैनौं' भनेको कुराले मेरो मन डढिरहेको छ।।१९।।

**ब्रह्माजीले भन्नुभयो** - यसरी गृत्समद ऋषिले भनेको सुनेर भगवान् श्रीगणेशले उनलाई भन्नुभयो ।

**श्रीगणेशले भन्नुभयो** - हे गृत्समद ! मलाई तिमीले आफूमाथि दया गर्न आएका आराध्य श्रीगणेशका रूपमा जान। नियमपूर्वक तपमा लागिरहने सनक आदि ऋषिले पनि सजिलै मेरो दर्शन पाउँदैनन् । हे उत्तम मुनि ! अहिले तिमी के चाहन्छौ त्यो कुरा नडराईकन भन।।२०-२१।। तिमीले खुट्टाको बूढी औंलामा टेकेर रात-दिन तपस्या गरौ मलाई सन्तुष्ट गराएका छौ ।

**ब्रह्माजीले भन्नुभयो**- देवाधिदेव श्रीगणेशका मङ्गलमय वचन सुनेर आत्माको आनन्दमा मग्न भई गृत्समदले उहाँलाई दण्डवत् प्रणाम गरे । त्यसपछि परमहर्षका साथ वरद विनायक भगवान्सँग विनम्र भावले बिन्ती गरे ।।२२-२३।।

**गृत्समदले भने** - हे भगवन् ! आज मेरो जन्म सफल भएको छ । तपस्या र नियमको अनुष्ठान पनि सफल भएको छ। अहिले अखण्ड आनन्दमय निराकारब्रह्मरूप हजुर मेरा

मुञ्चन्नश्रूणि नेत्राभ्यामानन्देन ननर्त च ।
चिदानन्दघनो वेदशास्त्राणामप्यगोचरः ।।२५।।
सद्यो दृष्टो मया साक्षादतः किं प्रार्थये विभो ।
तवाज्ञया तथाप्येकं प्रार्थये द्विरदानन ।।२६।।
चतुरशीतिलक्षासु योनिषु श्रेष्ठतासु च ।
मनुष्याणां महाभाग वर्णास्तत्र महत्तराः ।।२७।।
तत्रापि ब्राह्मणाः श्रेष्ठास्तत्रापि ज्ञानिनः पराः ।
ज्ञानिष्वनुष्ठानपरास्तेषु च ब्रह्मवेदिनः ।।२८।।
ब्रह्मज्ञानं तथा ज्ञानं देहि मे जगदीश्वर ।
त्वयि भक्तिञ्च सुदृढामविस्मरणमेव च ।।२९।।
तव भक्तेषु सर्वेषु श्रेष्ठतां च गजानन ।
अन्यं चैकं वरं याचे तञ्च मे देहि शङ्कर ।।३०।।
तव भक्त्यैकनिलयं त्रैलोक्याकर्षणक्षमम् ।
विख्यातं त्रिषु लोकेषु नमस्यं सुरमानुषैः ।।३१।।
एवं मां कुरु विघ्नेश ! यदि तुष्टोऽखिलार्थकृत् ।
वनञ्च पुष्पकं नाम्ना ख्यातिं यातु सुरेश्वर ।।३२।।
अस्मिन् स्थित्वा च भक्तानां कामान् पूरय नित्यदा ।
इदञ्च पुष्पकपुरं चतुर्दिक्षु विशेषतः ।।३३।।
गणेशपुरमित्येवं प्रथां यातु गजानन ।

ब्रह्मोवाच

इति तद्वचनं श्रुत्वा जगाद द्विरदाननः ।।३४।।

गणेश उवाच

साधु साधु महाबाहो ! प्रसन्ने मयि दुर्लभम् ।
भक्तानां त्रिषु लोकेषु न किञ्चिन् मुनिपुङ्गव ।।३५।।
त्वया यत् प्रार्थितं विप्र ! तत्ते सर्वं भविष्यति ।
विप्रत्वं दुर्लभतरं प्रसन्नेन मयाऽर्पितम् ।।३६।।
गणानान्त्वेति मन्त्रस्य वैदिकस्य यतस्त्वया ।
जपः कृतो मुनेऽतस्त्वमृषिरस्य भविष्यसि ।।३७।।

सामु हुनुहुन्छ। यो रूप देखेर म आँखाबाट हर्षका आँसु बगाउँदै आनन्दले नाचिरहेको छु। वास्तवमा हजुर सच्चिदानन्दघन स्वरूप हुनुहुन्छ र वेद एवं शास्त्रद्वारा पनि अलभ्य हुनुहुन्छ।।२४-२५।। हे प्रभु! भर्खरै मैले हजुरलाई यस रूपमा दर्शन गर्न पाएँ। यो भन्दा ठूलो उपलब्धि मेरा लागि केही हुनसक्दैन। हे प्रभो! मैले हजुरसँग के याचना गरूँ? तापनि हजुरको आज्ञा पाएका कारण एउटा कुरा माग्दछु ।।२६।। हे महाभाग! चौरासी लाख योनिहरूमा उत्तम मानिएको मानवयोनिमा जन्म लिने प्राणीहरू अरूभन्दा उत्तम मानिएका छन् । मानिसहरूमा पनि ब्राह्मण वर्णका मानिस उत्तम मानिन्छन् र ब्राह्मणहरूमा पनि ज्ञानी ब्राह्मण उत्तम मानिन्छन्। ज्ञानीहरूमा पनि भगवान्‌को आराधना र अनुष्ठानमा संलग्न हुने ज्ञानी ब्राह्मण उत्तम मानिएका छन् । अनुष्ठानमा नित्य लागिरहने ज्ञानी ब्राह्मणहरूमध्ये पनि ब्रह्मज्ञानी ब्राह्मण उत्तमोत्तम मानिएका छन् ।।२७-२८।। हे जगदीश्वर ! मलाई हजुरले ब्रह्मज्ञान र विद्याज्ञान दुबै कुरा दिनुहोस्। हजुरमा स्थिर भक्ति, हजुरको अविस्मृति र हजुरका भक्तहरूमध्ये उत्तम भक्तका रूपमा स्थानप्राप्ति यी तीन कुरा पनि मलाई प्रदान गर्नुहोस् । यी अतिरिक्त अर्को एउटा वर पनि म माग्न चाहन्छु। त्यो के भने-हजुरले मलाई हजुरकै भक्तिको आधार स्वर्ग, मर्त्य, पाताललाई आकर्षण गर्न समर्थ, त्रिलोकीमा विख्यात, देवता र मानिसहरूद्वारा वन्दनीय बनाउनुहोस् ।।२९-३१।। हे कल्याणमय देव ! यदि हजुर प्रसन्न हुनुहुन्छ भने यो मेरा कामना परिपूर्ण होऊन् । यो पुष्पक वन पनि हजुरकै नामबाट संसारमा प्रख्यात होस् ।।३२।। हजुरले यहाँ रहेर सबै भक्तहरूका कामना परिपूर्ण तुल्याउनुहोस् । यो पुष्पकपुर चारै दिशामा श्रीगणेशपुरका नामबाट प्रख्यात होस् ।।३३।।

**ब्रह्माजीले भन्नुभयो** - गृत्समदको प्रार्थना सुनेर श्रीगणेशले भन्नुभयो ।

**श्रीगणेशले भन्नुभयो** - हे महाबाहु ! तिमीले राम्रो भन्यौ, अति राम्रो भन्यौ । म प्रसन्न भएमा त्रिलोकीमा मेरा भक्तका लागि कुनै कुरा पनि दुर्लभ हुँदैन । हे विप्र ! तिमीले प्रार्थना गरेका सबै कामना पूर्ण हुनेछन् । म प्रसन्न छु । त्यस कारण तिमीलाई दुर्लभ मानिएको ब्राह्मणत्व प्रदान गर्दछु । **गणानान्त्वा गणपतिं हवामहे०** इत्यादि वैदिक मन्त्रको तिमीले जप गरेका कारण तिमी उक्त मन्त्रका ऋषि हुनेछौ ।।३४-३७।।

ब्रह्मादिषु च देवेषु वसिष्ठादिमुनिष्वपि ।
ख्यातिं यास्यसि सर्वत्र परं श्रैष्ठ्यमुपागतः ।।३८।।
सर्वेष्वारब्धकार्येषु पूर्वन्ते मम चापरम् ।
स्मरणं ये करिष्यन्ति तेषां सिद्धिर्भविष्यति ।।३९।।
ऋते ज्ञानाद् दैवतर्षिछन्दसां कर्म निष्फलम् ।
पुत्रश्च बलवान् सर्वदेवानां सुभयङ्करः ।।४०।।
भविष्यति महाख्यातिं त्रिषु लोकेषु यास्यति ।
अजेयः सर्वदेवानां विना रुद्रं भविष्यति ।।४१।।
मद्भक्तो मद्व्रतप्राणो मन्निष्ठो मत्परायणः ।
इदञ्च नगरं देवयुगे पुष्पकसंज्ञितम् ।।४२।।
त्रेतायां मणिपूरञ्च भानकं द्वापरेऽपि च ।
कलौ तु भद्रकं नाम ख्यातं लोके भविष्यति ।।४३।।
अत्र स्नानेन दानेन सर्वान् कामानवाप्नुयात् ।

**ब्रह्मोवाच**

एवं दत्त्वा वराँस्तस्मै तत्रैवाऽन्तर्दधे विभुः ।।४४।।
तस्मिन्नन्तर्हिते तत्र स्थापयामास वै मुनिः ।
गणेशमूर्तिं प्रासादं कारयामास सुन्दरम् ।।४५।।
वरदेति च तन्नाम स्थापयामास शाश्वतम् ।
सिद्धिस्थानञ्च तत्रासीद् गणेशस्य प्रसादतः ।।४६।।
कामान् पुष्णाति सर्वेषां पुष्पकं क्षेत्रमित्यपि ।
पूजयामास तां मूर्तिं भक्तिभावसमन्वितः ।।४७।।
इमां कथां यः शृणुयान्मुनीन्द्र
श्रीविघ्नराजस्य वरप्रकाशम् ।
लभेत कामानखिलान् गणेश-
भक्तिं दृढां संसृतिमोचनीञ्च ।।४८।।

ब्रह्मा आदि देवता र वसिष्ठ आदि ऋषिहरूका माझमा तिमी विख्यात हुनेछौ र सर्वत्र सर्वोत्तम ऋषिका रूपमा वन्दनीय हुनेछौ।।३८।। सबै कार्यहरूको आरम्भमा सर्वप्रथम तिम्रो नाम र त्यसपछि मेरो नाम लिने भक्तहरूले सिद्धि प्राप्त गर्नेछन्। वेदका मन्त्रहरूको देवता, छन्द र ऋषिको ज्ञान हुँदैन भने ती मन्त्रबाट गरिने कार्य विफल हुन्छन् । हे गृत्समद ! तिमीले सबै देवताहरूलाई भयभीत तुल्याउने एउटा पुत्र पैदा गर्नेछौ। त्यो पुत्र त्रिलोकीमा विख्यात हुनेछ । भगवान् शङ्करबाहेक अरू कुनै देवताले तिम्रो छोरालाई जित्न सक्ने छैनन् ।।३९-४१।। त्यो तिम्रो छोरा म(श्रीगणेश)मा निष्ठा राख्ने, मलाई नै प्राण सुम्पने र ममा नै आत्मसमर्पण गर्ने मेरो महान् भक्त हुनेछ । यो पुष्पकवन त्रेतायुगमा मणिपूर, द्वापरमा भानक र कलिमा भद्रकनामबाट संसारमा प्रख्यात हुनेछ । यहाँ आएर स्नान, दान गर्ने भक्तका सबै कामना पूर्ण हुनेछन्।

**ब्रह्माजीले भन्नुभयो-** श्रीगणेश गृत्समद ऋषिलाई यसरी वर प्रदान गरी त्यहीं नै अन्तर्धान हुनुभयो ।।४२-४४।। भगवान् श्रीगणेश अन्तर्धान हुनुभएपछि मुनि गृत्समदले त्यहाँ विशाल श्रीगणेशमन्दिर तयार गरी श्रीगणेशमूर्तिको प्रतिष्ठा गरे । प्रतिष्ठापित श्रीगणेशमूर्तिलाई वरदगणेश भनी भगवान् श्रीगणेशको शाश्वत नामबाट नामकरण गरे। त्यसपछि त्यो स्थान श्रीगणेशको कृपाबाट लोकमा सिद्धस्थानका रूपमा प्रसिद्ध भयो ।।४५-४६।। भक्तहरूको इच्छा पूर्ति गर्ने हुँदा त्यो स्थान पुष्पकक्षेत्रका नामबाट पनि प्रसिद्ध भयो । गृत्समदले त्यहाँ रहेर श्रीगणेशमूर्तिको दीर्घकालसम्म आराधना गरे । हे मुनीन्द्र ! विघ्नराज श्रीगणेशले गृत्समदलाई दुर्लभ वर प्रदान गर्नुभएको विषयमा आधारित यो कथा जसले सुन्दछ त्यसका सबै कामना परिपूर्ण हुन्छन् र त्यसको मनमा संसारबाट पार लगाउने स्थिर श्रीगणेशभक्तिको उदय हुन्छ ।।४७-४८।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे वरदाख्यानं नाम सप्तत्रिंशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'गृत्समदद्वारा वरदगणेशको प्रतिष्ठा' शीर्षकान्वित सैंतीसौं अध्याय पूर्ण भयो ।।३७।।

ॐ

## अष्टत्रिंशोऽध्यायः { ३८ अध्याय }

व्यास उवाच

ततो गृत्समदस्यासीत् कथं वृत्तिः सुरेश्वर ।
तन्ममाचक्ष्व यत्नेन श्रद्दधानस्य पद्मज ।।१।।

ब्रह्मोवाच

ततः सर्वे मुनिगणा मानयामासुरादरात् ।
ब्रह्मन् ! मुनिवरश्रेष्ठं नेमुर्गृत्समदञ्च तम् ।।२।।
वरदानाद् गणेशस्य वव्रुस्तं यज्ञकर्मणि ।
सर्वारम्भे गणेशस्य पूजनादौ च सस्मरुः ।।३।।
एवं विख्यातिमगमत् स मुनिर्गणनायके ।
भक्तिं परमिकां चक्रे जपन् मन्त्रं सुनिश्चलः ।।४।।
कदाचित् स मुनिर्व्यास ! चुक्षुवे बलवत्तरम् ।
दिशो नभश्च पृथिवीं नादयन् गिरिगह्वरान् ।।५।।
अपश्यत् पुरतो यावत् तावद् बालं भयङ्करम् ।
रक्तवर्णं महानादं जपाकुसुमसन्निभम् ।।६।।
तेजोराशिं च मुष्णन्तं नेत्रालोकपथं मुहुः ।
दृष्ट्वा स तादृशं बालं चकम्पे भयविह्वलः ।।७।।
तर्कयामास मनसा विघ्नः कोऽयमिहागतः ।
न जाने गणनाथेन दत्तः पुत्रो ममाद्भुतः ।।८।।
पश्यति स्म पुनः सोऽमुं चारुवक्त्रं सुलोचनम् ।
चारुरुक्माङ्गदं चारुमुकुटं चारुनूपुरम् ।।९।।
चारुणा कटिसूत्रेण राजत्कटितटं सुतम् ।
प्रपच्छ तं मुनिः कोऽसि कस्यासि किञ्चिकीर्षसि ।।१०।।
क्व च ते पितरौ स्थानं वद तेजोनिधेऽर्भक !।

क उवाच

श्रुत्वेत्थं वचनं तस्य जगाद बालको मुनिम् ।।११।।

बालक उवाच

भूतभाविभवज्ज्ञानी किं मां त्वं परिपृच्छसि ।
तथाप्याज्ञावशो वच्मि क्षुतात् तव जनिर्मम ।।१२।।

**व्यासले भन्नुभयो -** हे उत्तम देवता ! त्यसपछि गृत्समदको जीवनवृत्ति कस्तो रह्यो ? म श्रद्धापूर्वक त्यो सुन्न चाहन्छु, हजुरले प्रयत्नपूर्वक मलाई बताउनुहोस् ।।१।।

**ब्रह्माजीले भन्नुभयो -** श्रीगणेशबाट वरदान पाएपछि सबै मुनिहरूले गृत्समदको सम्मान गरे र मुनिश्रेष्ठका रूपमा वन्दना गरे ।।२।। भगवान् श्रीगणेशबाट ब्राह्मणत्व प्राप्त गरेका कारण सबैले तिनलाई यज्ञकर्ममा वरण गरे । सबै माङ्गलिक कार्यका आरम्भमा श्रीगणेशको पूजाभन्दा पहिले गृत्समदको संस्मरण गर्न थाले ।।३।। यसरी लोकमा अत्यन्त विख्यात भएका गृत्समद ऋषिले नित्य अचल रही भगवान् श्रीगणेशको मन्त्रानुष्ठान गर्दै उहाँको परम भक्ति गरे ।।४।। हे व्यास ! कुनै दिन गृत्समद ऋषिले अत्यन्त जोडले हाच्छ्यूँ गरे । त्यसको आवाजबाट सबै दिशा, पृथिवी र पर्वतका गुफाहरूसमेत प्रतिध्वनित भए । त्यस बेला उनले आफ्ना सामु हेर्दा एउटा डरलाग्दो बच्चा देखे। बाह्रमासे फूलझैं रातो वर्णले सुहाएको, ठूलो स्वरले चिच्याइरहेको र दृष्टिपथलाई चकमन्न तुल्याउने तेजोमय रूपले सम्पन्न विचित्र बालकलाई देखेर ती गृत्समद ऋषि डरले काँपे।।५-७।। तिनले मनमा कुन विघ्न आइलाग्यो भनी तर्क गर्न लागे - म केही जान्दिनँ, हुनसक्छ मलाई भगवान् श्रीगणेशले अद्भुत छोरा दिनुभएको हो कि ? यसरी तर्क गर्दै तिनले पाउमा नूपुर धारण गर्ने अत्यन्त आकर्षक कन्दनीले सुहाएको बालक देखे । तत्काल गृत्समदले - हे तेजोमय बालक ! तिमी को हौ ? कसका छोरा हौ ? के गर्न चाहन्छौ ? तिम्रा माता-पिता को हुन् ? र तिम्रो घर कहाँ हो ? मलाई जवाफ देऊ भनी सोधे ।

**ब्रह्माजीले भन्नुभयो -** यस्ता वचन सुनेपछि त्यस बालकले गृत्समदलाई उत्तर दियो ।।८-११।।

**बालकले भन्यो -** भूत, भविष्य र वर्तमानका ज्ञाता भएर पनि हजुरले मलाई किन सोध्नुहुन्छ ? तापनि म हजुरको आज्ञापालन गर्ने हिसाबले भन्दैछु ।।१२।। हजुरकै हाच्छ्यूँबाट

त्वमेव जनको माता कृपां कुरु ममोपरि ।
पालयस्व पितर्मां त्वं दिनानि कतिचिन् मुने ।।१३।।

त्रैलोक्याक्रमणे शक्तो देवेन्द्रं वशवर्तिनम् ।
करिष्यामि न सन्देहो वीक्ष्यसे पौरुषं मम ।।१४।।

ब्रह्मोवाच

इत्याकर्ण्य वचस्तस्य भयहर्षसमन्वितः।
उवाच श्लक्ष्णया वाचा मुनिर्गृत्समदो वचः ।।१५।।

यद्ययं जातमात्रोऽपि शक्तस्त्रैलोक्यकर्षणे ।
तस्मादस्य प्रदास्यामि स्वं मन्त्रं स्वात्मजस्य हि ।।१६।।

येनास्य वाञ्छितं देवः परितुष्टो विनायकः ।
प्रदास्यति जगन्नाथो मम कीर्तिर्भविष्यति ।।१७।।

एवं सञ्चिन्त्य मनसा तस्मै स्वं मन्त्रमादिशत् ।
गणानान्त्वेति तं चाह कुर्वनुष्ठानमादरात् ।।१८।।

जपस्व वैदिकं मन्त्रं चित्तं स्थाप्य गजानने ।
सन्तुष्टस्ते यदा पुत्र! सर्वान् कामान् प्रदास्यति ।।१९।।

एवं प्राप्तमहामन्त्रो जगाम तपसे वनम् ।
एकाङ्गुष्ठेनाऽवतस्थे निराहारो जितेन्द्रियः ।।२०।।

ध्यायन् गजाननं देवं मनसा निश्चलेन सः ।
जपतस्तस्य वर्षाणि सार्द्धायुतमितानि च ।।२१।।

गतानि तस्य मुखतो बभूवाग्निर्दिशो ज्वलन् ।
भयं बभूव देवानां दैत्यानां तलवासिनाम् ।।२२।।

ततस्तत्तपसा तुष्ट आविरासीद् गजाननः ।
दिशो वितिमिराः कुर्वश्छादयन् भानुमण्डलम् ।।२३।।

भ्रामयन् पुष्करं चारु सुविषाणं मुदायुतः ।
तद्बृंहितरवं श्रुत्वा बालको विह्वलन्निव ।।२४।।

उन्मील्य नेत्रे सोऽपश्यद् देवन्तं पुरतः स्थितम् ।
चतुर्भुजं महाकायं नानाभूषाविभूषितम् ।।२५।।

मेरो उत्पत्ति भएको छ । मेरा बाबु-आमा हजुरमात्र हुनुहुन्छ। हे ऋषिवर ! हजुरले ममाथि कृपा गरी केही दिन मेरो लालन पालन गर्नुहोस् ।।१३।। त्यसपछि म त्रिलोकीमाथि नै आक्रमण गर्न समर्थ हुनेछु र देवराज इन्द्रलाई पनि वशवर्ती तुल्याउनेछु। यसमा कुनै सन्देह छैन । त्यस बेला हजुरले मेरो वास्तविक पुरुषार्थ देख्नुहुनेछ ।।१४।।

**ब्रह्माजीले भन्नुभयो** - बालकका ती कुरा सुनेर भय र हर्षले सम्पन्न मुनि गृत्समदले मीठो स्वरले बालकसँग कुरा गरे । त्यसपछि तिनले मनमनै भने- 'यो बालक जन्मनासाथ त्रिलोकीलाई आकर्षण गर्न समर्थ छ भने यसलाई प्रेमपूर्वक मन्त्रप्रदान गर्दछु । त्यस मन्त्रको जपबाट यस बालकमाथि जगदीश भगवान् श्रीगणेश सन्तुष्ट हुनुहुँदा यसले चिताएको पाउने छ र मेरो पनि ठूलो कीर्ति हुनेछ' ।।१५-१७।। यसरी मनले विचार गरेर तिनले बालकलाई भगवान् श्रीगणेशको गणानान्त्वा० मन्त्रको उपदेश गर्दै भने - 'बाबु ! तिमीले यस मन्त्रको श्रद्धापूर्वक जपानुष्ठान गर । यो वैदिक मन्त्र हो । भगवान् गजाननमा चित्त लगाएर यस मन्त्रको राम्ररी जप गर। हे छोरा ! भगवान् श्रीगणेश प्रसन्न हुनुहुँदा उहाँको कृपाबाट तिम्रा सबै कामना परिपूर्ण हुनेछन्' ।।१८-१९।। यसरी मन्त्र प्राप्त गरेपछि त्यो बालक तप गर्न वनमा गयो । निराहार र जितेन्द्रिय भई खुट्टाको बूढी औँलाले भुइँमा टेकेर उभियो । त्यसले निश्चल मनबाट गजानन भगवान्को ध्यान गर्दै मन्त्रजप गर्दा डेढ करोड वर्ष बिते । त्यस बेला त्यसका मुखबाट दिशा र विदिशालाई नै तेजोमय बनाउने आगो बल्न थाल्यो । देवता र पातालवासी दैत्यहरू साह्रै भयभीत भए ।।२०-२२।। त्यस बेला त्यस बालकको तपस्याबाट प्रसन्न हुनुभएका भगवान् श्रीगणेश प्रकट हुनुभयो । उहाँ प्रकट हुनुहुँदा दिशाहरूमा व्याप्त अन्धकार समाप्त भएको थियो र सूर्यमण्डल उहाँका तेजले ढाकिएको थियो ।।२३।। भगवान् श्रीगणेश सूँढ घुमाएर नाच्दै हुनुहुन्थ्यो । उहाँको सिङ्को आकारको एउटा दाँत पनि फनफनी घुमिरहेको थियो । श्रीगणेशको अवतरणसमयमा एउटा डरलाग्दो महानाद चारैतिर व्याप्त भयो । महानाद सुनेर व्याकुल भएको तपस्वी बालकले आफ्ना दुबै आँखा खोल्दा आफ्ना सामु चतुर्भुज, महाबाहु, विशालकाय, अलङ्कार-

परशुं कमलं मालां मोदकान् बिभ्रतङ्करैः ।
तेजसा धर्षितस्तस्य धैर्यं कृत्वा ननाम सः ।।२६।।

बद्धाञ्जलिपुटो भूत्वा प्रार्थयामास तं विभुम् ।

बालक उवाच

किं मान्धर्षयसे देव! भक्तं त्वां शरणागतम् ।।२७।।
भव सौम्यतरो देव ! देहि मेऽखिलवाञ्छितम् ।

ब्रह्मोवाच

इत्याकर्ण्य वचस्तस्य संजहार स्वकं महः ।।२८।।

उवाच परमप्रीतो सावधानो भवार्भक ! ।
यं ध्यायसि दिवारात्रौ सोऽहं ते वरदोऽधुना ।।२९।।

ममेदं परमं रूपं स्वप्रकाशं जगन्मयम् ।
नविदुर्ब्रह्मरुद्राद्याः कुतो वेत्स्यन्ति मानवाः ।।३०।।

देवाश्च मुनयः सर्वे न च राजर्षयोऽपरे ।
नासुराः सिद्धगन्धर्वा न नागा न च दानवाः ।।३१।।

सोऽहं तव तपोबद्धो वरं दातुमिहागतः ।
वरयस्व वरान् मत्तो यान्याँस्त्वं मनसेच्छसि ।।३२।।

स उवाच ततो बालो धन्योऽहं तव दर्शनात् ।
पिता धन्यतरो मेऽद्य सार्थकं जन्म मे तपः ।।३३।।

स्तुतिं कर्त्तुं न जानामि बालभावात्सुरेश्वर ।
यतस्त्वं सर्वजगतां कर्ता पाताऽपहारकः ।।३४।।

त्वद्भासा भासयत्येष रविरग्निश्च चन्द्रमाः ।
चराचरं चेतयसे स्वमाहात्म्यान् महामते ।।३५।।

महिमानं महान्तं ते केशा अपि न वै विदुः ।
यदि मे वरदोऽसि त्वं तन्मे देहि गजानन ।।३६।।

त्रैलोक्याकर्षणे शक्तिं विशिष्टां देहि मे विभो ।
देवदानवगन्धर्वमनुष्योरगराक्षसाः ।।३७।।

विभूषित, हातहरूमा परशु, कमल, माला र लड्डू धारण गर्नुहुने भगवान् श्रीगणेशको दर्शन पायो । श्रीगणेशको तेजबाट हतप्रभ भएको त्यस बालकले धैर्यपूर्वक भगवान्लाई प्रणाम गऱ्यो अनि हात जोडेर अन्तर्यामी प्रभुसँग बिन्ती गऱ्यो ।

**तपस्वी बालकले भने** – हे देव ! म हजुरको शरणागत भक्त हुँ । मलाई किन आफ्नो प्रचण्ड तेजबाट हतप्रभ बनाउँदै हुनुहुन्छ ।।२४-२७।। हजुर सौम्य रूपका हुनुहोस् र मेरा सबै कामना पूर्ण तुल्याउनुहोस् ।

**ब्रह्माजीले भन्नुभयो** - हे वेदव्यास ! बालकको प्रार्थना सुनेर श्रीगणेशले आफ्नो प्रचण्ड तेजलाई शान्त गराउनुभयो ।।२८।। त्यसपछि प्रसन्न हुनुभएका श्रीगणेशले भन्नुभयो – हे बालक ! तिमी सावधान होऊ । तिमी जुन देवताको अहोरात्र ध्यान गरिरहेका छौ त्यो देवता म नै हुँ । म वरद भएर अहिले तिम्रा सामु आएको छु । मेरो स्वयंप्रकाश र जगन्मय परम स्वरूपलाई ब्रह्मा, शिव आदि देवताले पनि जान्दैनन् भने बिचरा मानिसहरूले कसरी जान्न सक्छन् ? देवता, मुनि, राजर्षि, असुर, सिद्ध, गन्धर्व, नाग, दानव कसैले पनि मेरो त्यस रूपको वास्तविकता जान्न सक्दैनन् । आज म तिम्रो तपस्याबाट बाँधिएर वरदान दिन तिम्रा सामु आएको छु । तिमीले जुन जुन कामना मनमा राखेका छौ, ती बताऊ । वर दिएर म ती कामनालाई पूर्ण तुल्याउँछु ।।२९-३२।। त्यसपछि त्यस बालकले भन्यो - हे देव ! म हजुरको दर्शन पाएर धन्य भएको छु । आज मेरा पिता धन्य हुनुभएको छ, मेरो जन्म धन्य भएको छ र मेरो तपस्या सार्थक भएको छ ।।३३।। हे देवेश ! म बालक हुनाले स्तुति गर्ने तरिका जानेको छैन । हजुर सबै संसारका कर्ता, पाता र हर्ता पनि हुनुहुन्छ ।।३४।। हजुरकै प्रकाशबाट अग्नि, सूर्य र चन्द्रमा प्रकाशमय बनेका छन् । हे महामति ! हजुरले आफ्नो महिमाबाट चराचरलाई नै चैतन्यपूर्ण तुल्याउनुहुन्छ ।।३५।। हजुरको यस महिमालाई ब्रह्मा, विष्णु र महेश पनि राम्ररी जान्न सक्नु हुन्न । हे गजानन ! यदि हजुर मलाई वर दिन आउनुभएको छ भने त्यो दिनुहोस् ।।३६।। हे सर्वव्यापक भगवान् ! स्वर्ग, मर्त्य र पाताललाई वशमा तुल्याउने विशिष्ट शक्ति मलाई प्रदान गर्नुहोस् । देव, दानव,

वश्या मम सदा सन्तु मुनिकिन्नरचारणाः ।
मनसा चिन्तितं यन्मे तत्तत् सिध्यतु सर्वदा ।।३८।।

इन्द्रादयो लोकपालाः सेवां कुर्वन्तु मे सदा ।
इह भोगाननेकान्मे मुक्तिं चान्ते प्रयच्छ च ।।३९।।

अन्यञ्च ते वरं याचे पुरमेतत् तवाज्ञया ।
प्रथां यातु यतश्चात्र तप्तमुग्रं तपो मया ।।४०।।

गणेशपुरमिति च ख्यातिं यातु जनेष्टदम् ।

गणेश उवाच

त्रयाणामपि लोकानामाक्रमं त्वं करिष्यसि ।।४१।।

सर्वेभ्यो न भयं तेऽस्ति सर्वे वश्याश्च ते सदा ।
आयसं काञ्चनं रौप्यं मया दत्तं पुरत्रयम् ।।४२।।

अभेद्यं सर्वदेवानां कामगं शङ्करं विना ।
त्रिपुरेति च ते नाम ख्यातिं लोके गमिष्यति ।।४३।।

यदैकेन च बाणेन शिवो भेत्स्यति ते पुरम् ।
तदैव यास्यसे मुक्तिं नात्र कार्या विचारणा ।।४४।।

अन्यत् ते वाञ्छितं सर्वं मत्प्रसादाद् भविष्यति ।

ब्रह्मोवाच

दत्त्वेत्थं स वरान् देवस्तत्रैवाऽन्तर्दधे विभुः ।
विषादमगमद् देववियोगात् त्रिपुरासुरः ।।४५।।

हर्षञ्च विपुलं लेभे वरान् प्राप्य यथेप्सितान् ।
त्रैलोक्यविजयं कर्तुं यतते स्म ततो बलात् ।।४६।।

गन्धर्व, मनुष्य, सर्प, राक्षस, मुनि, किन्नर र चारण यी सबै सधैं मेरो वशमा रहून्। मैले मनले जे जे चिताउँछु त्यो त्यो पूरा होस् ।।३७-३८।। इन्द्र आदि लोकपालहरूले सधैं मेरो सेवा गरून् । मलाई यस लोकका सम्पूर्ण भोग प्रदान गर्दै अन्तमा मुक्ति पनि प्रदान गर्नुहोस् ।।३९।। अर्को वर मैले माग्दछु त्यो के भने – यो पुष्पकपुर जहाँ मैले हजुरको उग्र तपस्या गरें, हजुरको आज्ञाबाट संसारमा प्रसिद्ध होस् । यो पुर मानिसहरूले चिताएको पुऱ्याउने तीर्थ बनेर श्रीगणेशपुरका नामबाट लोकमा प्रख्यात होस् ।

**श्रीगणेशले भन्नुभयो** – हे बालक ! तिमीले तीनै लोकमा आक्रमण गर्नेछौ । कसैसँग तिमीले डर मान्नुपर्ने छैन र सबै तिम्रा वशमा हुनेछन् । फलामले बनेको आयसपुर, सुनले बनेको स्वर्णपुर र चाँदीले बनेको रौप्यपुर गरी तीन पुर मैले तिमीलाई दिएँ ।।४०-४२।। यी तीनै पुर सर्वतन्त्रस्वतन्त्र भगवान् शिवजीबाहेक अरू सबै देवताद्वारा अभेद्य छन् । यी पुरहरू त्रिपुरका नामबाट संसारमा विख्यात हुनेछन् । जुन बेला एउटै बाणको प्रहारबाट शिवजीले यी तीनवटै पुरलाई एकैचोटि भेदन गर्नुहुनेछ, त्यस बेला तिमीले मुक्ति प्राप्त गर्नेछौ । यसमा कुनै शङ्का छैन ।।४३-४४।। अरू तिमीले जे जे कुरा चिताएका छौ ती सबै मेरो कृपाबाट परिपूर्ण हुनेछन्।

**ब्रह्माजीले भन्नुभयो** – यसरी बालकलाई वर प्रदान गरेर सर्वव्यापक परमात्मा श्रीगणेश त्यहीं अन्तर्धान हुनुभयो। भगवान् अन्तर्धान हुनुहुँदा त्यो त्रिपुरासुर नामक बालक खिन्न भयो ।।४५।। तर श्रीगणेशबाट आफूले चाहेका वर प्राप्त गरेर त्यो मनमनै खुसी पनि थियो । त्यसपछि त्रिपुरासुरले भगवान् श्रीगणेशबाट शक्ति पाएका कारण स्वर्ग, मर्त्य र पातालमाथि विजयका लागि प्रयत्न आरम्भ गऱ्यो ।।४६।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे वरप्रदानं नामाष्टत्रिंशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'गृत्समदको पुत्र त्रिपुरद्वारा श्रीगणेशको आराधना र वरप्राप्ति' शीर्षकान्वित अठतीसौं अध्याय पूर्ण भयो ।।३८।।

ॐ

## ऊनचत्वारिंशोऽध्यायः { ३९ अध्याय }

व्यास उवाच

ततः किमकरोद् ब्रह्मन् ! त्रिपुरो वरदर्पितः ।
तत्सर्वं कौतुकं मह्यं वक्तुमर्हस्यशेषतः ।।१।।

ब्रह्मोवाच

ततः काश्मीरपाषाणभवां मूर्तिं गजाननीम् ।
स्थापयामास विधिवद् ब्राह्मणैर्मन्त्रकोविदैः ।।२।।

महान्तं काञ्चनं दिव्यं मणिमुक्ताविभूषितम् ।
गणेशपुरमध्ये स प्रासादं कृतवान् शुभम् ।।३।।

उपचारैः षोडशभिः पूजयामास तं विभुम् ।
नमस्कारैरसङ्ख्यातैः स्तुतिभिः प्रार्थनैरपि ।।४।।

क्षमाप्य देवदेवेशमनुज्ञाप्य ययौ बहिः ।
ददौ दानान्यनेकानि ब्राह्मणेभ्यो यथार्हतः ।।५।।

ततस्तदभवत् स्थानं बङ्गाले त्रिपुरस्य ह ।
गणेशपुरमित्येवं सर्वेषां सर्वसिद्धिदम् ।।६।।

ततः स त्रिपुरो दैत्यो गजाननवरोद्धतः ।
नृलोकान् पालयामास देवानामाक्रमे रतः ।।७।।

पदातयस्तुरङ्गाश्च गजाश्च रथिनस्तथा ।
दशदिग्भ्यो ययुस्तन्तु सेवार्थं बलवत्तराः ।।८।।

राजानः सेवका जाता आनुकूल्येन तस्य ह ।
प्रतिकूला गता मृत्युं युद्धं कर्तुमनीश्वराः ।।९।।

एवमाक्रम्य भूखण्डं ततोऽगादमरावतीम् ।
तत इन्द्रो देवगणैर्नानायुद्धकरैर्वृतः ।।१०।।

ऐरावतसमारूढो ययौ युद्धाय दंशितः ।
सोऽपि सेनां त्रिधा चक्रे चतुरङ्गां महाबलः ।।११।।

भीमकायं महादैत्यं वज्रदंष्ट्रञ्च दानवम् ।
धनुर्युद्धे गदायुद्धे शस्त्रयुद्धे च कोविदम् ।।१२।।

**व्यासले भन्नुभयो** - हे भगवन् ! त्यसपछि वरदान प्राप्त गरेका कारण गर्वित त्रिपुरासुरले के गऱ्यो ? त्यो सुन्न मलाई उत्कण्ठा छ । सबै कुरा राम्ररी सुनाउनुहोस् ।।१।।

**ब्रह्माजीले भन्नुभयो**- त्यसपछि त्रिपुरासुरले काश्मीरका पहाडमा पाइने पत्थरबाट गजाननको प्रतिमा बनाएर मन्त्रका ज्ञाता पण्डित ब्राह्मणहरूबाट त्यसको विधिवत् प्रतिष्ठा गरायो । श्रीगणेशपुरको मध्यभागमा विशाल स्वर्णमय र दिव्य मणि एवं मोतीद्वारा अलङ्कृत श्रीगणेशमन्दिर तयार गरिएको थियो। श्रीगणेशमूर्तिको प्रतिष्ठापछि त्रिपुरासुरले षोडशोपचारद्वारा श्रीगणेशप्रतिमामा श्रीगणेश प्रभुको विधिवत् पूजन गऱ्यो । त्यसले असङ्ख्य नमस्कार, स्तुति र प्रार्थना गरी देव-देव श्रीगणेशसँग क्षमायाचना गऱ्यो। त्यसपछि भगवान् श्रीगणेशसँग आज्ञा लिएर त्यो मन्दिरबाट बाहिर आयो । तदनन्तर त्यसले ब्राह्मणहरूलाई योग्यताअनुसार अनेक थरि दान दियो।।२-५।। बंगाल देशअन्तर्गत रहेको त्यो स्थान श्रीगणेशपुरका नामबाट प्रसिद्ध सर्वसिद्धिदायक क्षेत्र मानियो । श्रीगणेशबाट वरदान पाएका कारण अत्यन्त गर्वित त्रिपुरासुरले देवताहरूमाथि पटक-पटक आक्रमण गर्दै पृथिवीनिवासी प्रजाहरूको पालन गऱ्यो ।।६-७।। त्रिपुरासुर दैत्यको सेवाका लागि दश दिशाबाट शक्तिशाली पदसेना, रथसेना, अश्वसेना र गजसेना आउन थाले ।।८।। राजाहरू दैत्यराज त्रिपुरासुरका अनुकूल र सेवक बने। जुन राजाहरू त्रिपुरासुरका प्रतिकूल र युद्ध गर्न असमर्थ थिए तिनले मृत्युवरण गर्नुपऱ्यो ।।९।। यसरी पृथिवीमण्डलमा आक्रमण गरी आफ्नो सत्ता कायम गरेर त्रिपुरासुर अमरावती पुग्यो । दैत्यराजलाई अमरावतीमा आएको थाहा पाएर इन्द्र पनि सिपालु देवताहरूलाई साथ लिएर ऐरावत हात्तीमा सवार भई अत्यन्त रोषका साथ युद्ध गर्न अगाडि बढे । उता त्रिपुरासुरले पनि आफ्नो चतुरङ्गिणी सेनालाई तीन वर्गमा विभाजित गऱ्यो।।१०-११।। धनुयुद्ध, गदायुद्ध र शस्त्रयुद्धमा सिपालु भीमकाय एवं वज्रदंष्ट्र नामक दुई दानव थिए । अस्त्रयुद्ध र मल्लयुद्धमा निष्णात दैत्यवीर भीमकायलाई त्रिपुरासुरले

अस्त्रयुद्धे मल्लयुद्धे निष्णातं दैत्यपुङ्गवम् ।
भीमकायमवोचत् स नृलोकस्याधिपो भव ।।१३।।

कालकूटं वज्रदंष्ट्रं जगाद त्रिपुरो बली ।
त्रिभागयाऽनया याहि सेनया त्वं रसातलम् ।।१४।।

शेषमुख्यान् सर्वनागान् वशान् कुरु ममाज्ञया ।
अहं त्रिभागया शक्रमाक्रमिष्येऽखिलान् सुरान्।।१५।।

भीमकायो वज्रदंष्ट्रो यथाऽऽज्ञप्तौ प्रतस्थतुः ।
चतुरङ्गबलैर्युक्तः स्वयं नन्दनमाययौ ।।१६।।

दिव्यान् वृक्षान् बभञ्जुस्ते वार्यमाणास्तु सैनिकाः ।
तत्र स्थित्वा दैत्यराजो दूतान् शक्राय प्राहिणोत्।।१७।।

अत्रानयन्तु तं शक्रं दर्शनाय त्वरान्विताः ।
वदन्तु मम वाक्यं वा मृत्युलोकं व्रजाऽधुना ।।१८।।

तत्र त्वां पालयिष्यामि साम्ना देह्यमरावतीम् ।
यदि युद्धे च ते बुद्धिस्तदा शीघ्रं प्रयाहि माम् ।।१९।।

ते गत्वा शक्रमाचख्युस्त्रिपुरासुरचेष्टितम् ।
श्रुत्वेत्थं वचनं तेषां वज्राहत इवाचलः ।।२०।।

चकम्पे चाचलरिपुर्वायुनेव यथा तरुः ।
चिन्तया व्याकुलीभूतः किमेतदिति चिन्तयन् ।।२१।।

क्रोधानलेन जज्ज्वाल संरक्ताखिललोचनः ।
कुर्वन् भस्मेव लोकानां शोषयन्निव वारिधीन् ।।२२।।

उवाच दूतान् गच्छन्तु यान्तु युद्धाय सत्वराः ।
स्वयमैरावतारूढो जगर्ज सुरशत्रुहा ।।२३।।

तेन नादेन महता क्षोभयन् भुवनत्रयम् ।
श्रुत्वा तद्वचनं ते तु गता दूता यथागतम् ।।२४।।

विबुधाश्चापि सन्नद्धा नानाशस्त्राऽसिपाणयः ।
भिण्डिपालकराः केचित् केचिच्छक्त्यृष्टिपाणयः ।।२५।।

भन्यो- तिमी मर्त्यलोकमा गएर त्यहाँका अधिपति भई शासन सञ्चालन गर।।१२-१३।। त्यसले फेरि कालकूट र वज्रदंष्ट्रलाई आज्ञा दियो - 'तीन वर्गमा विभाजित सेनाको एउटा टुकडी लिएर तिमीहरू पातालतर्फ लाग । मेरो आज्ञाअनुसार शेषनाग र दानवहरूलाई वश गरी शासन गर । म आफैं तीन भागमध्ये एक भाग सेनाका साथ इन्द्र र देवताहरूमाथि आक्रमण गर्नेछु।' कालकूट र वज्रदंष्ट्र त्यसपछि पातालतर्फ प्रस्थान गरे। त्रिपुरासुर पनि चतुरङ्गिणी सेनाका साथ रथमा आरोहण गरी देवतासँग युद्ध गर्न नन्दनवनमा पुग्यो ।।१४-१६।। त्रिपुरासुरका सैनिकहरूले युद्धोन्मादमा आएर-देवलोकका वृक्षहरू भाँच्न थाले । त्यहाँ रहेर त्रिपुरासुरले आफ्ना दूतहरूलाई इन्द्रको समीपमा पठायो। त्यसले भन्यो - तिमीहरू इन्द्रका समीपमा छिटो गएर उनलाई यहाँ लिएर आओ अथवा इन्द्रलाई मेरो यो आदेश सुनाओ- 'हे इन्द्र ! तिमी मृत्युलोक जाऊ, त्यहाँ म तिम्रो सुरक्षा गर्नेछु । तिमीले खुसीराजी मलाई अमरावती सुम्प। यदि तिम्रो बुद्धिमा युद्ध गर्ने विचार आउँछ भने तिमीले अविलम्ब मसँग युद्ध गर' ।।१७-१९।। दूतहरूले इन्द्रसामु गएर त्रिपुरासुरको यो भनाइका साथै सम्पूर्ण क्रियाकलापका विषयमा बताए । दूतहरूका कुरा सुनेर वज्रप्रहार गर्दा पर्वत र हावा लाग्दा रूखहरू हल्लिएझैं पर्वतभेदी इन्द्र पनि कम्पायमान भए। अनि यो के आइलाग्यो ? भन्दै चिन्ताले व्याकुल भए ।।२०-२१।। त्रिपुरासुरको सन्देश सुनेपछि इन्द्रले रीसको आगोले आँखा राता गराएर संसारलाई भस्म गराउन खोजेझैं र समुद्रहरूलाई सुकाउन चाहेझैं बम्कदै दूतहरूलाई भने - 'हे दूतहरू ! तिमीहरू त्रिपुरासुरसँग इन्द्रले युद्ध गर्ने सन्देश लिएर जाओ ।' इन्द्रको सन्देश पाएर दूतहरू गएपछि असुरहन्ता इन्द्र पनि ऐरावतमा सवार भएर गर्जन गर्न लागे । इन्द्रको गर्जनबाट तीनै लोक क्षुब्ध भएका थिए । उता ती दूत पनि इन्द्रका कुरा सुनेर जहाँबाट आएका थिए त्यतै गए ।।२२-२४।। अनेक शस्त्र, अस्त्र र तलबार हातमा धारण गर्ने देवताहरू पनि युद्धका लागि तयार भए । ती देवताहरूमध्ये कसैले घुँयत्रा, केहीले शक्ति र केहीले ऋष्टि धारण गरेका थिए । कसैका हातमा मुग्रा थिए भने कसैले धनु र बाण धारण गरेका थिए । कसैले

मुद्गरासिधराः केचिद् धनुर्बाणकराः परे ।
गदाखेटकराः केचित् केचित्तु दण्डपाणयः ॥२६॥

एवं देवगणैर्युक्तो वज्रभृन्निर्ययौ बहिः ।
कृतस्वस्त्ययनो विप्रैर्नानावादित्रनिस्वनैः ॥२७॥

त्रिपुरो दूतवाक्येन ज्ञात्वा युद्धोद्यमन्तु तम् ।
सन्नद्धामकरोत् सेनां प्रहृष्टां चतुरङ्गिणीम् ॥२८॥

असङ्ख्यातां समादाय हयारूढोऽभिनिर्ययौ ।
परस्परं ददृशतुस्ते सेने वीरभूषणे ॥२९॥

कोलाहलो महानासीत् बृंहितैर्हेषितैरपि ।
क्ष्वेडितै रथघोषैश्च वाद्यघोषैरनेकधा ॥३०॥

ततो हुङ्कारमात्रेण नोदितास्त्रिपुरेण ते ।
वीरा युयुधिरे देवैः स सम्मर्दो महानभूत् ॥३१॥

नाभूत् स्वपरबोधोऽपि जघ्नुरेव परस्परम् ।
एवं सुतुमुले जन्ये मृतास्ते दानवा बहु ॥३२॥

सुमनसोऽपि पतिता दैत्यशस्त्रप्रपीडिताः ।
बभुस्ते सैनिकास्तत्र पुष्पिता इव किंशुकाः ॥३३॥

अशय्याः शयिताः केचिदङ्घ्रिहीनास्तथापरे ।
क्रमेलका गजाध्यक्षा रथाश्वाश्च पदातिनः ॥३४॥

ततः पलायनपरा दैत्या याता दिशो दश ।
सिंहं दृष्ट्वेव सहसा मृगा जीवनकाङ्क्षिणः ॥३५॥

ततो निवार्य तत्सैन्यं वृन्दारकरिपुः स्वयम् ।
क्रोधानलमहाज्वालो गर्जन्मेघ इवापरः ॥३६॥

शक्रसान्निध्यमगमद् भक्षयन्निव रोदसी ।
स्वखड्गेनाहनत् तीव्रं हस्तं वज्रधरं हरेः ॥३७॥

वज्रं पपात तद्धस्तात् तदद्भुतमिवाभवत् ।
तदादायाऽहनद् दैत्यस्तेनैवैरावतं गजम् ॥३८॥

ऐरावतः प्रहारेण पलायनपरो ययौ ।
ततो जघान स हरिर्मुष्टिना दैत्यपुङ्गवम् ॥३९॥

हातमा गदा र ढाल लिएका थिए । कुनै देवताको हातमा दण्ड थियो । यस्ता विभिन्न शस्त्र-अस्त्र धारण गर्ने युद्धवीर देवगणलाई अगाडि लगाई ब्राह्मणहरूद्वारा स्वस्तिवाचन र वाद्यवादकहरूद्वारा माङ्गलिक वाद्यवादन गराएर देवराज इन्द्र युद्धका लागि बाहिर आए ।।२५-२७।। त्रिपुरासुरले दूतहरूद्वारा इन्द्रको युद्ध गर्ने अठोट थाहा पाएर युद्धका लागि उन्मत्त असङ्ख्य चतुरङ्गिणी सेनाका जवानलाई युद्ध मैदानमा उतान्यो। दुबैतर्फका वीरहरूद्वारा शोभायमान युद्धभूमिमा दुबै पक्षका सेनाले एकले आर्कालाई हेर्ने मौका पाए । त्यस युद्ध मैदानमा दुबै सेनाका हात्ती, घोडा, रथ र वीरहरूको वीरघोष, घोडाहरूको हिनहिनाहट, हात्तीहरूको चिंघाड र वाद्यघोषका कारण ठूलो कोलाहल भयो ।।२८-३०।। त्रिपुरासुर दैत्यद्वारा हुँकार गर्दै लड्नका लागि शूयाइएका दैत्यवीरहरूले देवताहरूसँग संग्राम गरे । ठूलो संघर्ष भयो । त्यस युद्धमा कुन आफ्नो पक्षको वीर हो र कुन शत्रुपक्षको वीर हो भन्ने समेत युद्ध गर्नेलाई थाहा भएन । वीरहरू आपसमा जुधिरहेका थिए । यस्तो भयानक युद्धमा दानवहरू धेरै मरे र दैत्यहरूको शस्त्रप्रहारबाट देवताहरू पनि भुइँमा लडे । फुलेका पलाशका रूखझैं रगताम्मे भएका सैनिकहरू सुहाए । केही सैनिक भुइँमा लडे, कुनै सैनिकका खुट्टा भाँचिए, ऊँट, हात्ती, रथ र घोडामा सवार वीर र पैदल सेनामा रहेका वीरहरू पनि घाइते भएर चारैतिर भागिरहेका थिए। जसरी मृगहरू बाघलाई देखेर जीवनको आशामा आश्रयका लागि दौडिरहेका हुन्छन्, त्यस्तै ती सैनिकहरूको अवस्था भयो। त्यसपछि त्रिपुरासुर आफ्नो सेनालाई भाग्नबाट रोकेर क्रोधको ज्वाला दन्काउँदै, मेघझैं गर्जन गर्दै र पृथिवी एवं अन्तरिक्षलाई नै निल्न खोज्दै इन्द्रका सामु गयो। त्यस बेला त्यसले तरबारद्वारा वज्रधारी इन्द्रको हातमा कठोर प्रहार गन्यो ।।३१-३७।। त्यस प्रहारबाट इन्द्रको हातबाट वज्र भुइँमा खस्यो । यो अद्भुत घटना थियो । त्रिपुरासुरले त्यही वज्र उठाएर ऐरावतमाथि प्रहार गन्यो । ऐरावत हात्ती वज्रप्रहारका कारण टाढा भाग्यो । त्यसपछि इन्द्रले मुड्कीले त्रिपुरासुरमाथि प्रहार गरे ।।३८-३९।। इन्द्रको मुड्की

स क्षणं पतितो भूमौ तत उत्थाय वेगवान् ।
जघान मुष्टिना शक्रन्धरण्यां तमपातयत् ।।४०।।
तत उत्थाय मघवा दैत्यं प्राह रुषान्वितः ।
इदानीं मल्लयुद्धाय सज्जीभवाऽसुरेश्वर ।।४१।।
ततः स विस्मयाविष्ट उवाच बलगर्वितः ।
किमर्थं त्वं निजप्राणे निर्दयोऽसि सुरेश्वर ।।४२।।
कृमिकीटपतङ्गानां प्राणोऽतीव प्रियो मतः ।
गच्छ देव ! धरण्यां ते स्थानं दत्तं मया शुभम् ।।४३।।

ब्रह्मोवाच

इति तद्वचनं श्रुत्वा जगाद बलवृत्रहा ।
यद्यहं जीवितात् त्वां हि मोचयामि न चेद्रिपो ।।४४।।
तदाहं धरणीं यामि त्वदाज्ञावशगोऽधम ! ।
त्वमेव हतमूर्धाऽद्य धरणीं यास्यसे खल ।।४५।।
वदत्येवन्तु देवेन्द्रे दैत्येन्द्रो निजघान तम् ।
मुष्टिना हृदये दुष्टस्ततो युद्धमभूत् तयोः ।।४६।।
चाणूरकृष्णयोर्यद्वत् परस्परजयैषिणोः ।
हृदयं हृदयेनैव हस्तं हस्तेन जघ्नतुः ।।४७।।
जानुभ्यां जानुनी चोरू ताभ्यां तौ च निजघ्नतुः ।
मस्तकं मस्तकेनैव कूर्परं कूर्परेण तु ।।४८।।
पृष्ठं पृष्ठेन पादाभ्यां पादौ तावभिजघ्नतुः ।
पादौ गृहीत्वा दैत्योऽस्य भ्रामयित्वा मुहुर्मुहुः ।।४९।।
तत्याज दूरतः शक्रं यथा न ज्ञायते क्वचित् ।
आरुरोह स्वयं तन्नु चतुर्दन्तं गजेश्वरम् ।।५०।।
ततो देवगणाः सर्वे हिमवद्गिरिगह्वरम् ।
ययुः शक्रं विचिन्वन्तो दैत्यसन्त्रासतापिताः ।।५१।।
कुत्र वा पतितो देवो द्रक्ष्यामो वा कथं विभुम् ।
एवं सञ्चिन्तयन्तस्ते भ्रमन्तो ददृशुश्च तम् ।।५२।।
अधोमुखं समायान्तं देवेन्द्रं तं तदैव ह ।
प्रणेमुर्देवसङ्घास्तमालिलिङ्गुस्तथा परे ।।५३।।
पूजयामासुरपरे वीजयामास कश्चन ।
पादसंवाहनं चास्य चक्रुः केचन भक्तितः ।।५४।।

खाएर त्रिपुरासुर केही बेर भुइँमा लडेपछि वेगपूर्वक उठेर आफ्नो मुड्कीले इन्द्रमाथि प्रहार गरी तिनलाई भुइँमा लडायो ।।४०।। त्यसपछि केही बेरमा नै उठेर इन्द्रले रोषपूर्वक त्रिपुरलाई भने– हे असुरशिरोमणि ! तँ मसँग मल्लयुद्ध गर्न तयार हो । इन्द्रको त्यो आह्वान सुनेर आश्चर्यचकित भई बलको घमण्डले चूर हुँदै त्रिपुरासुरले भन्यो – किन तिमी आफ्नो ज्यानमाथि र आफ्नो प्राणमाथि निर्दयी बनेका छौ? तिमीजस्ता कृमि, कीट र पतङ्गहरूलाई प्राण निकै प्यारो हुने गर्छ । तिमीले आफ्नो प्राणको सुरक्षा गर । धर्तीतर्फ जाऊ । त्यहाँ मैले तिमीलाई बस्ने ठाउँ दिन्छु भनेकै छु ।।४१-४३।।

**ब्रह्माजीले भन्नुभयो** - त्रिपुरासुरका कुरा सुनेपछि इन्द्रले भने – 'हे त्रिपुर ! यदि मैले युद्धमा तेरो जीवन समाप्त पार्न सकिनँ भने म तेरो आज्ञाकारी भएर धर्तीतर्फ लाग्नेछु । मेरो विचारमा तँ दुष्ट नै आज मेरो प्रहारबाट टाउको टुक्रिएपछि खसेर धर्तीमा पुग्नेछस् ।' इन्द्रले त्यसो भनेपछि तुरुन्तै त्रिपुरले मुड्कीले इन्द्रको छातीमा प्रहार गर्‍यो । त्यसपछि परस्पर विजयको इच्छा राख्ने चाणुर र कृष्णको बीचमा भएको युद्ध झैं ती दुईको बीचमा पनि घमासान युद्ध भयो । त्यस युद्धमा दुवैले छातीमा छातीले, हातमा हातले, घुँडामा घुँडाले, तिघ्रामा तिघ्राले, टाउकामा टाउकाले, कुहिनामा कुहिनाले, पिठ्यूँमा पिठ्यूँले र खुट्टामा खुट्टाले प्रहार गर्दै भयङ्कर युद्ध गरे । त्यस बेला त्रिपुरासुरले इन्द्रका दुवै खुट्टा समातेर पूरा ज्यानलाई घुँयत्रो झैं घुमाउँदै तिनलाई धेरै टाढा हुत्त्यायो । टाढै पुर्‍याएका कारण इन्द्र कहाँ गए भन्ने कुरा कसैले पनि थाहा पाउन सकेन। त्यसपछि त्रिपुरासुर दानव चार वटा दाँत भएको विशाल ऐरावत हात्तीमा सवार भयो ।।४४-५०।। यो घटनापछि दैत्यको त्रासबाट त्रस्त देवताहरू हिमालय पर्वतका गुफाहरूमा इन्द्रको खोजी गर्दै पुगे । हाम्रा इन्द्र कहाँ गएर बस्नुभयो ? कसरी उहाँलाई भेट्न सक्छौं ? इत्यादि चिन्ता लिएर भौंतारिएका देवताहरूले आफूतर्फ आइरहेका इन्द्रलाई देखे ।।५१-५२।। शिर झुकाएर ती सबैले इन्द्रलाई हर्षपूर्वक प्रणाम गरे । कसैले आलिङ्गन गरे, कसैले पूजा गरे र कसैले पङ्खा डुलाएर सेवा गरे । कुनैले भक्तिपूर्वक तिनका पाउ दबाए ।।५३-५४।।

तत्रैव न्यवसन् सर्वे गुप्तरूपाः सुरास्तदा ।
दैत्यस्त्वैरावतारूढो ययौताममरावतीम् ।।५५।।

इन्द्रको खोजीमा आएका ती देवताहरू पनि त्यहीं लुकेर रहे । ऐरावतमा सवार भएको त्रिपुरासुर अमरावतीमा पुग्यो ।।५५।।

देवस्थानानि दैत्यानामिन्द्रासनगतः स्वयम् ।
ददौ विभज्य प्रत्येकं मानपूर्वं सुरद्विषाम् ।।५६।।

दिव्यवादित्रनिर्घोषैः शृण्वन् गान्धर्वनिस्वनान् ।
किन्नरैः सेव्यमानस्तु रेमे चाप्सरसां गणैः ।।५७।।

त्यहाँ गई इन्द्रासनमा आसीन त्यस दैत्यले देवताका विभिन्न स्थानहरूमा वीर दैत्यहरूलाई ससम्मान नियुक्त गऱ्यो । गन्धर्वहरूद्वारा दिव्य वाद्यवादनका साथ गाइएका मधुर गीत सुन्दै र किन्नरहरूको सेवा प्राप्त गर्दै इन्द्रको आसनमा आसीन त्रिपुरासुर अप्सराहरूका साथ भोग-विलास गरी रमाइरहेको थियो ।।५६-५७।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे इन्द्रपराजयो नामैकोनचत्वारिंशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'त्रिपुरद्वारा इन्द्र आदि देवतामाथि विजय' शीर्षकान्वित उनान्चालीसौं अध्याय पूर्ण भयो ।।३९।।

ॐ

# चत्वारिंशोऽध्यायः { ४० अध्याय }

ब्रह्मोवाच

आक्रम्य देवधिष्ण्यानि दैत्योऽगात् ब्रह्मणः पदम् ।
पराक्रमं दैत्यकृतं श्रुत्वा देवमुखात् पुरा ।।१।।

ब्रह्मा ययौ नाभिपद्मं विष्णुः क्षीरनिधिं ययौ ।
दैत्यस्य मानसौ पुत्रौ प्रचण्डश्चण्ड एव च ।।२।।

प्रचण्डं स्थापयामास ब्रह्मलोकेऽधिनायकम् ।
ततश्चण्डश्च वैकुण्ठे चकार स्वामिनं स्वयम् ।।३।।

ततः कैलासमगमत् तञ्च दोर्भ्यामचालयत् ।
भयभीता च गिरिजाऽऽलिलिङ्ग शङ्करं भृशम् ।।४।।

ततः कैलासमगमद् युद्धाकाङ्क्षी महासुरः ।
तेन तुष्टो महादेवो दैत्यस्य पौरुषेण च ।।५।।

वहिर्ययौ वरं दातुं निजभक्तसुखप्रदः ।
ददर्श त्रिपुरं दैत्यं वरं वृणिवत्यथाऽब्रवीत् ।।६।।

स वव्रे यदि तुष्टोऽसि देहि कैलासमद्य मे ।
गच्छ मन्दारशिखरं यावन्मम मनोरथः ।।७।।

शङ्करोऽपि ददौ तस्मै कैलासं स्वल्पकालिने ।
स्वयं जगाम गिरिशो मन्दराद्रिं गणैर्वृतः ।।८।।

कैलासशिखरारूढो जहर्ष त्रिपुरासुरः ।
एवं देवान् वशे कृत्वा पुनरायाद् रसातलम् ।।९।।

भीमकायोऽपि बलवान् भूमण्डलगतो बलात् ।
वशे चकार नृपतीनृषीन् सर्वान् बबन्ध च ।।१०।।

अग्निकुण्डानि सर्वाणि देवतृप्तिकराणि च ।
आश्रमांश्च बभञ्जाऽऽशु तीर्थानि च विशेषतः ।।११।।

तापसांस्त्रासयामास कारागारसमाश्रयात् ।
स्वाहास्वधावषट्कारान् वेदस्याभ्यसनानि च ।।१२।।

**ब्रह्माजीले भन्नुभयो -** त्रिपुरासुर देवताहरूका स्थान कब्जा गरेपछि ब्रह्माजीको सत्यलोकमा गयो । देवताहरूका मुखबाट त्रिपुर दैत्यको पराक्रम सुनेर डराएका ब्रह्माजी विष्णुको नाभिकमलमा आश्रय लिन जानुभयो। नारायण भगवान् सुरक्षाका लागि क्षीरसागरतर्फ लाग्नुभयो। त्रिपुर दैत्यका प्रचण्ड र चण्ड नामक दुई मानस पुत्र थिए ।।१-२।। प्रचण्डले ब्रह्मलोकमा कब्जा गरी आफूलाई त्यहाँको अधिनायक बनायो। चण्डले वैकुण्ठमा पुगेर आफूलाई त्यहाँको अधिपति तुल्यायो।।३।। त्यसपछि त्रिपुर दैत्य कैलास पर्वतमा गयो र त्यसले आफ्ना बाहुदण्डबाट कैलास पर्वतको चुचुरो समातेर कँपाउन थाल्यो। त्यस बेला साह्रै भयभीत भएकी पार्वती भगवान् शङ्करको आलिङ्गनपाशमा बाँधिनुभयो ।।४।। त्यसपछि युद्धको चाहना गर्ने त्रिपुरासुर कैलासमा विराजमान शिवजीका सामु पुग्यो । त्रिपुरासुरको पराक्रम देखेर सन्तुष्ट हुनुभएका र भक्तलाई सुख दिने भगवान् शङ्कर वर प्रदान गर्न बाहिर आई त्रिपुर दैत्यलाई भन्नुभयो - म तिम्रो पराक्रमबाट अत्यन्त खुसी छु, वर दिन्छु स्वीकार गर ।।५-६।। त्रिपुरले भन्यो - तपाइँ खुसी हुनुहुन्छ भने मलाई कैलास पर्वत दिनुहोस् । जबसम्म म चाहन्छु तबसम्म तपाइँ मन्दार पर्वतमा गएर बस्नुहोस् ।।७।। त्यसले भनेअनुसार भगवान् शिवजी पनि कैलासधाम केही समयका लागि त्यसको जिम्मा लगाएर आफ्ना गणका साथ मन्दराचलको शिखरमा जानुभयो ।।८।। कैलास शिखरमा अधिकार जमाएपछि त्रिपुरासुर ज्यादै प्रसन्न भयो । सबै देवताहरूलाई वशमा तुल्याएर त्यो पृथिवीतर्फ लाग्यो ।।९।। पृथिवीमण्डलमा खटिएको भीमकाय दानवले पृथिवीका बासिन्दालाई आफ्नो अधीनस्थ बनाएर विरोधीहरूलाई बाँध्ने र थुन्ने काम गरेको थियो । त्यसले देवताहरूलाई तृप्ति प्रदान गर्ने अग्निकुण्ड, आश्रम र विशेष गरेर तीर्थहरूमा विध्वंस मच्चायो।।१०-११।। तपस्वीहरूलाई कारागारमा थुनेर भयभीत बनायो । अत्यन्त घमण्डी त्यस भीमकाय दानवले स्वाहाकार, स्वधाकार, वषट्कार, वेदाध्ययन र सदाचारसँग द्वेषपूर्ण व्यवहार

सदाचारान् सदा द्वेष्टि सर्वगर्वसमन्वितः ।
वज्रदँष्ट्रोऽथ सप्तापि पातालानि वशेऽनयत् ।।१३।।

शेषञ्च वासुकिञ्चैव तक्षकं सर्वभोगिनः ।
निर्विषान् सविषाँश्चैव चकार वशवर्तिनः ।

वज्रदँष्ट्रो रत्नजातं बुभुजेऽप्रेषयच्च तम् ।।१४।।

नागाङ्गनाभिश्च कुतूहलेन
रेमे सदाऽसौ समदोऽतिहर्षात् ।
भोगान् विभुञ्जन् विविधानि रत्ना-
न्यादाय यातस्त्रिपुरान्तिके सः ।।१५।।

पातालवश्यतां शंसन् लेभे मानं ततोऽधिकम् ।।१६।।

वस्त्राणि च महार्हाणि ग्रामान् दासाननेकशः ।
एवं त्रिलोकान् वशगान् कृत्वा दैत्यो ननन्द ह ।।१७।।

देवाः सर्वे गुहावासाश्चिन्तयामासुरन्वहम् ।
कथमस्य वधः कस्मिन् काले वाऽपि भविष्यति ।।१८।।

कस्माद् वेति न जानीमो लब्धोऽनेन वरः कुतः ।
एवं व्याकुलचित्तेषु सुरेषु मुनिसत्तम ।।१९।।

आययौ नारदस्तत्र त्रैलोक्यचर इच्छया ।
ददर्श दीनान् देवाँस्तानुत्ततार नभःपथात् ।।२०।।

दृष्ट्वा सर्वे नारदं तमुत्तस्थुः सहसाऽऽदरात् ।
आलिलिङ्गुश्च नेमुश्च पुपूजुश्च यथाक्रमम् ।।२१।।

विश्रान्तं परिपप्रच्छुस्त्रिपुरस्य वरादिकम् ।

देवा ऊचुः
त्रिपुरेण समाक्रान्तं त्रैलोक्यं सचराचरम् ।।२२।।

स्थानानि नो गृहीतानि केशास्तेनापि निर्जिताः ।
शरणं कं व्रजामोऽद्य कथं तस्य वधो भवेत् ।।२३।।

वराश्च केन दत्ता नो वदाऽस्य त्रिपुरस्य भोः ।

गऱ्यो। पातालमा खटिएको वज्रद्रंष्टले तलका सातै लोकलाई आफ्नो वशवर्ती बनायो ।।१२-१३।। त्यसले शेष, वासुकि, तक्षक र अरू सबै प्रकारका नागहरूका साथै अन्य सविष र निर्विष सर्पहरूमाथि पनि अधिकार जमायो ।।१४।। वज्रद्रंष्टले पातालमा पाइने रत्नहरूको उपयोग गऱ्यो र केही रत्नहरू आफ्ना स्वामी त्रिपुरासुरको दरबारमा पठाउने काम पनि गऱ्यो। त्यस दानवले मदमत्त भएर हर्ष र उत्कण्ठाका साथ नाग कन्याहरूसँग विहार गऱ्यो। पातालका सबै प्रकारका भोगहरूको उपभोग गरेपछि अनेक थरि रत्न लिएर त्रिपुरासुरका समीपमा गयो । मैले पाताललाई वशमा पारेँ भन्ने खबर सुनाएपछि प्रसन्न भएको त्रिपुरासुरबाट त्यसले ठूलो सम्मान पनि पायो।।१५-१६।। बहुमूल्य वस्त्र, गाउँ, दास-दासीहरूका साथ त्रिलोकीका सबै प्राणीहरूलाई विभिन्न माध्यमबाट अनुकूल र अधीन तुल्याएर त्रिपुरासुर आनन्दित भयो ।।१७।। हे मुनि! हिमालयको गुफामा शरण लिएर बसेका देवताहरू दिनदिनै चिन्ता गर्न लागे । यो त्रिपुरासुरको वध कहिले गर्ने ? कुन विधिबाट गर्ने? र कसबाट गराउने ? यस विषयमा हामी अनभिज्ञ छौं । यसले कोबाट वर पाएको छ ? यस्तै तर्क, सन्देह र शङ्काका कारण पनि ती देवता व्याकुल थिए । देवताहरू व्याकुल र चिन्तित भएको समयमा त्रिलोकीको भ्रमण गर्दै देवर्षि नारदजी आकाशमार्गबाट स्वेच्छया त्यतै आइपुगे ।।१८-२०।। नारदजी त्यहाँ बसिरहेका देवताहरूलाई दीन अवस्थामा देखेर आकाशबाट भुइँमा ओर्लिए । नारदजीलाई नजिकै आएको देखेर सबै देवताहरूले आदरपूर्वक स्वागत गरे । कसैले उनलाई प्रणाम गरे भने कसैले आलिङ्गन गरे र कसैले पूजा पनि गरे ।।२१।। विश्राम गरिरहेका नारदजीसँग देवताहरूले त्रिपुरासुरले पाएको वरदानको विषयमा जिज्ञासा प्रकट गरे ।

**देवताहरूले भने -** चराचरसहित त्रिलोकीमा त्रिपुर दैत्यले आक्रमण गरेको छ ।।२२।। त्यसले हामी देवताहरूका स्थानहरू कब्जा गरेको छ । ब्रह्मा, विष्णु र शङ्करलाई पनि परास्त गरेको छ । आज हामी कसका शरणमा जाऔँ ? र त्यसको वध कसरी गरौँ ? ।।२३।। हे देवर्षि नारदजी ! त्रिपुरासुरलाई ब्रह्माण्डमा विजयी बनाउने वर कसले दियो ? यो कुरा बताउनुहोस् ।

नारद उवाच

कथयामि समासेन दैत्यस्य चेष्टितं महत् ।।२४।।
दिव्यवर्षसहस्रं स तताप परमं तप: ।
प्रसादयामास विभुं गणेशं देवनायकम् ।।२५।।
तेनाऽस्मै दुर्धरा दत्ता वरा: सर्वभयङ्करा: ।
देवर्षिपितृभूतेभ्यो यक्षरक्ष:पिशाचत: ।।२६।।
न नागेभ्यो भयं दत्तं विनैकं शङ्करं विभुम् ।
प्रसादयन्तु देवेशं द्विरदाननमादरात् ।।२७।।
आराधयन्तु सर्वेऽपि विघ्नेशं सर्वसिद्धिदम् ।

देवा ऊचु:

कथमाराधनं तस्य देवदेवस्य धीमत: ।।२८।।
कर्तव्यं मुनिशार्दूल ! कृपया तद् वदस्व न: ।

नारद उवाच

अहमेकाक्षरं मन्त्रं कथयाम्यखिलान् प्रति ।।२९।।
तेन मन्त्रेण ते सर्वे मया दत्तेन भक्तित: ।
अनुष्ठानं प्रकुर्वन्तु सर्वेऽपि स्थिरमानसा: ।।३०।।
यावत् प्रत्यक्षतामेति देवोऽसौ गणनायक: ।
स एव तद्वधोपायं वदिष्यत्यखिलान् प्रति ।।३१।।
नान्योपायं प्रपश्यामि तस्मात् कुर्वन्तु मे वच: ।

ब्रह्मोवाच

इत्युक्त्वा नारद: सर्वानुपदिश्य मनुञ्च तम् ।।३२।।
जगाम तत्क्षणादेव वीणागानरतो मुनि: ।
तत: सर्वे सुरवरा गणेशध्यानतत्परा: ।।३३।।
एकपादस्थिता: केचित् केचित् पद्मासनस्थिता: ।
केचिद् वीरासनयुता: केचिन्मीलितलोचना: ।
निराहारा जितश्वासा जेपुर्मन्त्रं मुनीरितम् ।।३४।।
ततो बहुगते काले करुणाब्धिर्गजानन: ।
अनुष्ठानं निरीक्ष्यैषां देवानां चिरकालजम् ।।३५।।

**नारदजीले भन्नुभयो -** हे देवगण ! म सङ्क्षेपमा तपाईंहरूका सामु त्रिपुरासुरको इतिहास सुनाउँछु ।।२४।। त्यसले दिव्य एक हजार वर्षसम्म परम तपस्या गरी सर्वव्यापक, देवाधिदेव भगवान् श्रीगणेशलाई प्रसन्न तुल्याएको छ ।।२५।। भगवान् श्रीगणेशले यसलाई डरलाग्दा र असह्य वर प्रदान गर्नुभएको छ। तदनुसार देवता, ऋषि, पितृ, भूत, यक्ष, राक्षस, पिशाच र नाग कसैबाट पनि त्रिपुर दानवलाई डर छैन । त्यसलाई एउटा भगवान् शङ्करसँगमात्र डर छ । अब तपाईंहरू सबैले भगवान् गजाननलाई प्रसन्न तुल्याउनुहोस् ।।२६-२७।। सबै प्रकारका सिद्धि प्रदान गर्ने भगवान् श्रीगणेशको सबैले आराधना गर्नुहोस् ।

**देवताहरूले भने -** हे मुनिश्रेष्ठ ! बुद्धिमान्, देवताको पनि देवता भगवान् श्रीगणेशको आराधना कसरी गर्नुपर्छ ? कृपया यस विषयमा हामीलाई उपदेश गर्नुहोस् ।

**नारदजीले भन्नुभयो -** म तपाईंहरूलाई भगवान् श्रीगणेशको एकाक्षरी मन्त्र बताउँछु ।।२८-२९।। तपाईंहरूले त्यस मन्त्रबाट स्थिर चित्त भएर भक्तिपूर्वक श्रीगणेशको अनुष्ठान गर्नुहोस् । तपाईंहरूको आराधनाबाट प्रसन्न भई जब भगवान् श्रीगणेश तपाईंहरूका सामु प्रकट हुनुहुनेछ त्यस बेला उहाँले नै तपाईंहरूलाई त्रिपुरासुरको वध गर्ने उपाय बताउनुहुनेछ ।।३०-३१।। अरू उपाय मैले केही पनि देख्दिन। तसर्थ तपाईंहरूले मेरो सल्लाह मान्नुहोस् ।

**ब्रह्माजीले भन्नुभयो -** यसरी मार्गदर्शन गराई मन्त्रको उपदेशसमेत गरेर तत्काल देवर्षि नारदजीले वीणा बजाउँदै प्रस्थान गरे । त्यसपछि सबै देवताहरू भगवान् श्रीगणेशको ध्यानमा तत्पर भए ।।३२-३३।। त्यस बेला कुनै देवता एक पाउले भुईंमा टेकेर तपस्या गर्दै थिए, कुनै पद्मासनमा बसेका थिए, कसैले वीरासन बाँधेका थिए र कसैले आँखा चिम्लेर भगवान् श्रीगणेशको ध्यान गर्दै थिए । यसरी ती सबै देवताहरू निराहार रही प्राणमाथि विजय गरेर नारदजीले बताएका मन्त्रको जप गरिरहेका थिए ।।३४।। धेरै समय बितेपछि करुणासागर, वरदायक भगवान् श्रीगणेश देवताहरूको दीर्घकालिक तपस्या देखेर प्रसन्न भई तिनका सामु प्रकट हुनुभयो । उहाँ त्यतिखेर

आविर्बभूव गणपस्तेषामग्रे वरप्रदः ।
उल्लसत्स्वर्णमुकुटश्चारुकुण्डलमण्डितः ।।३६।।

दन्तन्यस्तकरो राजत्कटिसूत्रवराङ्गदः ।
पाशं सृणिञ्च परशुं कमलञ्च भुजैर्दधत् ।।३७।।

रक्तचन्दनकस्तूरीसिन्दूरशशिभूषणः ।
विद्युत्तेजोलसत्कान्तिः कोटिसूर्यसमप्रभः ।।३८।।

दृष्ट्वैवं सहसा देवं विनायकमनामयम् ।
तेजसा धर्षिताः सर्वे भयमापुश्च केचन ।।३९।।

प्रणेमुः सहसा केचिद् देवास्तं द्विरदाननम् ।
पूजयामासुरपरे हर्षगद्‌गदभाषिणः ।।४०।।

स्वसङ्कष्टविनाशाय तुष्टुवुः केऽपि तं विभुम् ।
प्रसादसुमुखं देवं सुमुखं सङ्कटापहम् ।।४१।।

देवा ऊचुः

नमो नमस्ते परमार्थरूप !
नमो नमस्तेऽखिलकारणाय ।
नमो नमस्तेऽखिलकारकाय
सर्वेन्द्रियाणामधिवासिनेऽपि ।।४२।।

नमो नमो भूतमयाय तेऽस्तु
नमो नमो भूतकृते सुरेश !।
नमो नमः सर्वधियां प्रबोध !
नमो नमो विश्वलयोद्भवाय ।।४३।।

नमो नमो विश्वभृतेऽखिलेश !
नमो नमः कारणकारणाय ।
नमो नमो वेदविदामदृश्य !
नमो नमः सर्ववरप्रदाय ।।४४।।

चम्किलो र सुन्दर स्वर्णमुकुटबाट सुहाउनुभएको थियो । उहाँका कानहरूमा सुन्दर कुण्डल झुलिरहेका थिए ।।३५-३६।। उहाँले स्वच्छ र सुन्दर एकदन्तमाथि आफ्नो सूँढ तेर्स्याउनुभएको थियो । कटिसूत्र र उत्तम केयूरद्वारा शोभा पाइरहनुभएका भगवान्‌ले आफ्ना चार हातहरूमा क्रमशः पाश, अङ्कुश, परशु र कमल धारण गर्नुभएको थियो ।।३७।। उहाँ रातो चन्दन, कस्तूरी, सिन्दूर र चन्द्रमाद्वारा विभूषित हुनुहुन्थ्यो। बिजुलीको झैं तेज भएको चमत्कारजनक कान्तिद्वारा देदीप्यमान र कोटिसूर्यसमान आभाद्वारा आभासित निर्मल स्वरूपका विनायक भगवान्‌को दर्शन पाउने ती सबै देवता उहाँको तेजबाट कान्तिहीन र भयभीत भएका थिए ।।३८-३९।। त्यस बेला कसैले उहाँलाई सहसा प्रणाम गरे, कसैले उहाँको पूजा गरे र अरू देवताहरूले भावविह्वल भई गद्‌गद स्वरले प्रार्थना गरे । सबै देवताहरूले समवेतरूपमा आफ्नो कष्टनाशका लागि प्रसादोन्मुख, सुमुख र सङ्कटनाशक भगवान् श्रीगणेशको यसरी स्तुति गरे ।।४०-४१।।

देवताहरूले भने - हे परमार्थरूप ! हजुरलाई बारबार नमस्कार गर्दछौं । हे अखिलकारणरूप ! हजुरलाई बारबार नमस्कार गर्दछौं । सम्पूर्ण क्रियाकलापका कारणतत्त्व ! हजुरलाई बारबार नमस्कार गर्दछौं । सबै इन्द्रियहरूमा शक्ति बनेर रहनुहुने हजुरलाई बारबार नमस्कार गर्दछौं ।।४२।। पञ्चमहाभूत र प्राणीहरूका रूपमा विश्वमा विराजमान हजुरलाई बारबार नमस्कार गर्दछौं । हे देवेश ! सम्पूर्ण प्राणीहरूको निर्माण गर्नुहुने हजुरलाई बारबार नमस्कार गर्दछौं । सबैका बुद्धिमा बोधका रूपमा विराजमान हे श्रीगणेश! विश्वको संहार र उत्पत्ति गराउनुहुने हजुरलाई बारबार नमस्कार गर्दछौं ।।४३।। विश्वको भरण-पोषण र संहार गर्नुहुने हे भगवन् ! हजुरलाई बारबार नमस्कार गर्दछौं। कारणका पनि कारण बनेर सुहाउनुहुने हजुरलाई बारबार नमस्कार गर्दछौं । वेदवेत्ताहरूद्वारा पनि ज्ञानपथमा ल्याउन नसकिने अगम्य स्वरूपका धनी हे श्रीगणेश! हजुरलाई बारबार नमस्कार गर्दछौं । सबैलाई वर दिएर कृतार्थ गर्नुहुने हजुरलाई बारबार नमस्कार गर्दछौं ।।४४।।

नमो नमो वागविचारभूत !

नमो नमो विघ्ननिवारणाय ।

नमो नमोऽभक्तमनोरथघ्न !

नमो नमो भक्तमनोरथज्ञ ।।४५।।

नमो नमो भक्तमनोरथेश !

नमो नमो विश्वविधानदक्ष ! ।

नमो नमो दैत्यविनाशहेतो !

नमो नमः सङ्कटनाशकाय ।।४६।।

नमो नमः कारुणिकोत्तमाय

नमो नमो ज्ञानमयाय तेऽस्तु ।

नमो नमोऽज्ञानविनाशनाय

नमो नमो भक्तविभूतिदाय ।।४७।।

नमो नमोऽभक्तविभूतिहन्त्रे

नमो नमो भक्तविमोचनाय ।

नमो नमो भक्तविबन्धनाय

नमो नमस्ते प्रविभक्तमूर्ते ।।४८।।

नमो नमस्तत्त्वविबोधकाय

नमो नमस्तत्त्वविदुत्तमाय ।

नमो नमस्तेऽखिलकर्मसाक्षिणे

नमो नमस्ते गुणनायकाय ।।४९।।

ब्रह्मोवाच

एवं स्तुतः सुरैर्देवो द्विरदानन ईश्वरः ।

उवाच परमप्रीतो हर्षयन् सुरसत्तमान् ।।५०।।

वाणीद्वारा अगम्य स्वरूप धारण गर्नुहुने हे श्रीगणेश ! हजुरलाई बारबार नमस्कार गर्दछौं। विघ्नविनाश गर्नुहुने हजुरलाई बारबार नमस्कार गर्दछौं । भक्तिहीन मानिसहरूका मनोरथलाई धुजा-धुजा बनाउनुहुने हे श्रीगणेश! हजुरलाई बारबार नमस्कार गर्दछौं । भक्तहरूका मनोरथलाई बुझेर पूरा गराउनुहुने र दुःख-पीडा मेटाउनु हुने हे भगवन् ! हजुरलाई बारबार नमस्कार गर्दछौं ।।४५।। भक्तहरूका मनोरथका स्वामी हे गजानन ! हजुरलाई बारबार नमस्कार गर्दछौं । विश्वको निर्माणकलामा दक्ष हे श्रीगणेश! हजुरलाई बारबार नमस्कार गर्दछौं । दैत्यहरूको विनाशका प्रमुख कारणका रूपमा रहनुभएका हे गजानन ! हजुरलाई बारबार नमस्कार गर्दछौं । सङ्कट नाश गर्नुहुने हे श्रीगणेश! हजुरलाई बारबार नमस्कार गर्दछौं ।।४६।। दयालुहरूमा पनि उत्तम दयालु श्रीगणेश प्रभुलाई बारबार नमस्कार गर्दछौं। ज्ञानरूप श्रीगणेश प्रभुलाई बारबार नमस्कार गर्दछौं । अज्ञानको नाश गर्नुहुने श्रीगणेश प्रभुलाई बारबार नमस्कार गर्दछौं। भक्तहरूलाई ऐश्वर्य प्रदान गर्नुहुने श्रीगणेश प्रभुलाई बारबार नमस्कार गर्दछौं ।।४७।। भक्तिभाव नभएका दुर्जनहरूको ऐश्वर्यध्वंस गर्नुहुने हे श्रीगणेश! हजुरलाई बारबार नमस्कार गर्दछौं। भक्तहरूको सङ्कटमोचन गर्नुहुने र तिनलाई संसारसागरबाट तार्नुहुने हे श्रीगणेश! हजुरलाई बारबार नमस्कार गर्दछौं । आफ्ना भक्तहरूलाई बन्धनबाट मुक्त बनाउनुहुने हे श्रीगणेश! हजुरलाई बारबार नमस्कार गर्दछौं अथवा प्रेमको डोरीले आफ्ना भक्तहरूलाई बाँध्नु हुने हे भगवन् ! हजुरलाई बारबार नमस्कार गर्दछौं । आफूलाई अनेक रूपमा विभक्त गरी प्रकाशमान हुनुहुने हे श्रीगणेश! हजुरलाई बारबार नमस्कार गर्दछौं ।।४८।। हामी देवताहरूलाई तत्त्वबोध गराएर भक्तहरूको मङ्गल गर्नुहुने हे श्रीगणेश ! हजुरलाई बारबार नमस्कार गर्दछौं। तत्त्ववेत्ताहरूमा उत्तम तत्त्ववेत्ता हे श्रीगणेश ! हजुरलाई बारबार नमस्कार गर्दछौं । सम्पूर्ण कर्मफलका साक्षी भगवान् श्रीगणेशलाई बारबार नमस्कार गर्दछौं । गुणहरूका नायक श्रीगणेश प्रभुलाई हामी बारबार नमस्कार गर्दछौं ।।४९।।

**ब्रह्माजीले भन्नुभयो** - यसरी देवताहरूबाट प्रार्थना गरिएका गजानन परमेश्वरले परम प्रसन्न भएर देवताहरूलाई हर्षित गराउँदै भन्नुभयो ।।५०।।

गणेश उवाच

स्तोत्रेण तपसा चैव सुराः सन्तुष्टिमागतः ।
ददामि सकलाभीष्टं तद् वृणुध्वं सुरेश्वराः ।।५१।।

**श्रीगणेशले भन्नुभयो** - हे देवगण ! तपाईंहरूको तप र स्तुतिबाट म सन्तुष्ट छु । म तपाईंहरूले कामना गरेका वर प्रदान गर्दछु । तपाईंहरू आफ्ना कामनाहरू निर्धक्कसँग बताउनुहोस् र मबाट वरदान लिनुहोस् ।।५१।।

देवा ऊचुः

यदि तुष्टोऽसि देवेश ! त्रिपुरञ्जहि दानवम् ।
सर्वेषामधिकारान् नो गृहीत्वा यस्तु तिष्ठति ।।५२।।

त्वयैवास्याऽभयं दत्तं सर्वामरसमूहतः ।
अतः स्मः सङ्कटं प्राप्ताः सङ्कटान् मोचयाऽऽशु नः ।।५३।।

त्वामेव शरणं प्राप्ता एष एव वरो हि नः ।

**देवताहरूले भने-** हे देवेश ! हजुर यदि प्रसन्न र सन्तुष्ट हुनुहुन्छ भने त्रिपुरासुर दैत्यको वध गर्नुहोस् । त्यो त्रिपुरासुर हाम्रा सबै अधिकारमा कब्जा जमाएर रहेको छ ।।५२।। हजुरले नै त्यस दानवलाई देवताहरूबाट डर नहुने वरदान दिनुभएको छ । त्यस कारण हामी सङ्कटग्रस्त भएका छौं । हजुरले हामीलाई सङ्कटमुक्त तुल्याउनुहोस् ।।५३।। हामी हजुरको शरणमा आएका छौं । यो नै हामीले चाहेको वर हो।

गणेश उवाच

वारयिष्ये भयं सर्वं तस्माद् घोरतराद् हि वः ।।५४।।

भवत्कृतमिदं स्तोत्रमतिप्रीतिकरं मम ।
सङ्कष्टनाशनमिति विख्यातञ्च भविष्यति ।।५५।।

पठतां शृण्वताञ्चैव सर्वकामप्रदं नृणाम् ।
त्रिसन्ध्यं यः पठेदेतत् सङ्कष्टं नाप्नुयात् क्वचित् ।।५६।।

**श्रीगणेशले भन्नुभयो** - त्यस घोर दानवका कारण स्वर्गलोकमा उत्पन्न भएको भय र सङ्कटबाट म तपाईंहरूलाई छुटकारा दिलाउने छु । तपाईंहरूले गर्नुभएको यो स्तुति मलाई अत्यन्त राम्रो लागेको छ। यो स्तोत्र सङ्कष्टनाशन स्तोत्रका रूपमा संसारमा विख्यात हुनेछ । यसलाई पाठ गर्ने र श्रवण गर्ने मानिसहरूका सबै कामना परिपूर्ण हुनेछन् । जसले प्रातः सन्ध्या, मध्याह्न सन्ध्या र सायँ सन्ध्यामा यस स्तोत्रको पाठ गर्नेछ, त्यसले कहिले पनि सङ्कटको सामना गर्नुपर्ने छैन ।।५४-५६।।

ब्रह्मोवाच

इति दत्त्वा वरं तेषां सुराणां जगदीश्वरः ।
पश्यतां मुनिदेवानां तत्रैवाऽन्तर्दधे विभुः ।।५७।।

**ब्रह्माजीले भन्नुभयो** - जगदीश्वर, सर्वव्यापक भगवान् श्रीगणेश ती देवताहरूलाई यसरी वर दिएर त्यहीं नै अन्तर्धान हुनुभयो ।।५७।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे स्तोत्रनिरूपणं नाम चत्वारिंशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'त्रिपुरासुरबाट पीडित देवताहरूद्वारा श्रीगणेशको आराधना र स्तुति' शीर्षकान्वित चालीसौं अध्याय पूर्ण भयो ।।४०।।

ॐ

# एकचत्वारिंशोऽध्याय: { ४१ अध्याय }

**व्यास उवाच**

वरदेन गणेशेन प्रभुणा सर्वकारिणा ।
किं कृतं तन्ममाचक्ष्व पृच्छते चतुरानन ।।१।।

**ब्रह्मोवाच**

ततो गजाननो विप्ररूपेण त्रिपुरं ययौ ।
महार्हासनसंविष्टं ददर्श द्विजसत्तम: ।।२।।

स उत्थाय नमस्कृत्य स्वासने चोपवेशयत् ।
सम्पूज्य परिपप्रच्छ कुत आगम्यते द्विज ।।३।।

का विद्या किञ्च ते नाम पृच्छते ब्रूहि मे द्विज ! ।
प्रयोजनञ्च किं तेऽस्ति शक्तिश्चेत् करवामहे ।।४।।

**द्विज उवाच**

मायङ्गृहा वयं दैत्य सर्वज्ञा: सर्ववेदिन: ।
इच्छाविहारा लोकानां भ्रमामो हितकाम्यया ।।५।।

कलाधरेत्येव नाम्ना विख्याता भुवनत्रये ।
द्रष्टुकामा वैभवं ते सम्प्राप्ता भवनं तव ।।६।।

अखिला: सम्पदस्ते तु दृष्ट्वा तृप्ता: स्म साम्प्रतम् ।
न कैलासे न वैकुण्ठे ब्रह्मलोकेऽपि नेदृशी ।।७।।

पदे शाक्रे न वै सम्पद् यादृशी दृश्यते तव ।

**दैत्य उवाच**

नाममात्रं कलाधार: किं वा जानासि तां द्विज ।।८।।

सम्पद: सर्वलोकेषु याश्च एतां प्रशंससि ।
जानासि चेद् दर्शय मे तासां मध्ये महोत्कटाम् ।।९।।

दृष्ट्वा दास्ये वाञ्छितं ते प्रियान् प्राणानपि द्विज ।
न स्मरे परिहासेऽपि वितथं भाषितं मुने ।।१०।।

**व्यासले भन्नुभयो** -हे भगवन् ! सबै कार्यका कारण, वरदायक श्रीगणेशप्रभुले त्यसपछि के गर्नुभयो ? म त्यो सुन्न चाहन्छु आज्ञा गर्नुहोस् ।।१।।

**ब्रह्माजीले भन्नुभयो** - त्यसपछि भगवान् श्रीगणेश ब्राह्मणको रूप लिएर त्रिपुरासुरको समीपमा जानुभयो र बहुमूल्य सिंहासनमा आसीन त्रिपुरासुरलाई देख्नुभयो ।।२।। घरमा आएका ब्राह्मणलाई देखेर त्रिपुरासुरले उठी नमस्कार गऱ्यो र आफ्नो आसनमा विराजमान गरायो । उहाँको पूजा गरेपछि त्यसले सोध्यो - हे ब्राह्मण ! तपाईं कहाँबाट आउनुभयो ? तपाईंले कुन विद्याको अध्ययन गर्नुभएको छ ? तपाईंको के नाम हो? तपाईं आउनुको प्रयोजन के हो ? मलाई बताउनुहोस्। मेरो शक्तिले भेटेसम्म म तपाईंको काम पूरा गर्नेछु ।।३-४।।

**कलाधररूप श्रीगणेशले भन्नुभयो** - हे दैत्यराज ! कहाँबाट आएँ भनेर कसरी बताऊँ ? हामीजस्ता ब्राह्मणहरूका घरको ठेगान नै हुँदैन । हिंड्दाहिंड्दै जहाँ साँझ पर्दछ त्यो ठाउँ नै हाम्रो घर हो। विद्याको कुरा गर्नुहुन्छ भने हामीले सबै शास्त्र र लोक-व्यवहार जानेका छौं । आफ्नो इच्छाले जहाँसुकै भ्रमण गर्दछौं र प्राणीहरूको हित गर्ने उद्देश्यले हामी इच्छाविहार गर्दछौं ।।५।। लोकमा हामी कलाधर नामबाट प्रसिद्ध छौं, तपाईंका पुरहरूको वैभवदर्शन गर्ने इच्छाले हामी यहाँ आएका छौं ।।६।। तपाईंको समुन्नत वैभव देखेर अहिले हामी तृप्त भएका छौं । तपाईंको जस्तो सम्पत्ति देखिरहेका छौं, त्यो सम्पत्ति कैलास, ब्रह्मलोक, वैकुण्ठ र इन्द्रलोकमा पनि देख्न पाइँदैन।

**त्रिपुरासुरले भन्यो** - तपाईंको नाममात्र कलाधर हो कि ? तपाईं कलाहरू पनि केही जान्नुहुन्छ ? ।।७-८।। सारा संसारका विशिष्ट सम्पत्तिभन्दा त्रिपुरमा रहेको सम्पत्ति विशेष छ भनी तपाईंले प्रशंसा गर्नुभएको छ । तपाईंलाई थाहा भएर भन्नुभएको छ भने मेरो कुन चाहिँ सम्पत्ति विशेष छ ? र अन्यत्र दुर्लभ छ ? त्यो बताउनुहोस् ।।९।। मलाई मेरो विशिष्ट सम्पत्तिको दर्शन गराउनुभएपछि मैले पनि तपाईंले चाहेको विषय प्रदान गर्नेछु । हे ब्राह्मण ! म तपाईंजस्ता सुपात्रलाई प्यारो प्राण पनि दिनसक्छु । परिहास गर्दा पनि आफूले असत्य बोलेको कुरा मलाई संझना छैन ।।१०।।

कलाधर उवाच

परेषां सम्पदं दृष्ट्वा किं स्यात् तव सुरद्विषः ।
विनयात् ते प्रसन्नोऽहं कलया ते ददामि वै ।।११।।

काञ्चनं राजतं लौहं त्रिपुरं शरसंस्थितम् ।
रम तत्र स्थिरो दैत्य ! चिरकालं यथासुखम् ।।१२।।

अभेद्यं देवगन्धर्वैर्मानुषैरुरगैरपि ।
कल्पितार्थप्रदं तत् ते कामगं कामदं शुभम् ।।१३।।

यदैवैकेन बाणेन कस्मिँश्चित् कालपर्यये ।
भेत्स्यते तद् हरो दैत्य ! तदा नाशमुपैष्यति ।।१४।।

ब्रह्मोवाच

इत्युक्त्वा धनुरादाय संस्तभ्य शरमन्तरा ।
पुरत्रयं निर्ममेऽसौ भुवनत्रयसन्निभम् ।।१५।।

विचित्रैर्भवनै रम्यैर्दीर्घिकारामसंयुतैः ।
नानापक्षिगणैर्जुष्टं सर्वकामप्रदं खगम् ।।१६।।

मायया मोहितो दैत्यस्तत्रस्थो जहृषे भृशम् ।
जगर्ज घनवद् दैत्यो लोकत्रयविकम्पनः ।।१७।।

न मत्तः श्रेष्ठ इत्येवं गर्वदर्पसमन्वितः ।
त्रैलोक्यं क्षोभयामास ब्राह्मणं तमथाब्रवीत् ।।१८।।

याचस्व दुर्लभतरं तत् ते दास्ये द्विजोत्तम ।
इत्युक्त्वा स द्विजः प्राह तं दैत्यं निस्पृहोऽपि सन् ।।१९।।

द्विज उवाच

अहं कैलासमगमं दृष्टवान् मूर्तिमुत्तमाम् ।
शिवेन पूजितां सम्यग् गाणेशीं चिन्तितार्थदाम् ।।२०।।

तामानय त्वं मे देहि शक्तिर्यद्यसुरेश्वर ।
नैतादृशी मया मूर्तिस्त्रैलोक्यञ्चरतेक्षिता ।।२१।।

**कलाधररूप श्रीगणेशले भन्नुभयो** – हे दैत्यराज ! अरूको सम्पत्ति देखेर के लाभ छ ? तपाईँको नम्रताबाट म प्रसन्न भएको छु । म तपाईँको त्यो त्रिपुर जुन फलाम, चाँदी र सुनबाट बनेका तीनपुरहरूको संयुक्त रूप हो, त्यसलाई मेरो कलाबाट एउटै बाणमा अड्याएर खडा गरिदिन्छु । तपाईँ त्यसमा स्थिर भएर चिरकालसम्म सुखपूर्वक रमाउनुहोस् । तपाईँको यस त्रिपुरलाई देवता, गन्धर्व, मानिस, सर्प कसैले पनि भेदन गर्न सक्ने छैनन्। तपाईँले चिताएको जुनसुकै सुख पनि यसले प्रदान गर्नेछ । स्वेच्छानुसार यसलाई तपाईँले जहाँ लिएर जान पनि सक्नु हुनेछ । यसले तपाईँका जस्तासुकै कामना पनि पूर्ण तुल्याउने छ ।।११-१३।। जुनबेला भगवान् शङ्करले यस त्रिपुरलाई एउटै बाणले भेदन गर्नुहुनेछ त्यस बेलामात्र यसको विनाश हुनेछ ।।१४।।

**ब्रह्माजीले भन्नुभयो**- कलाधर द्विजले यति कुरा गरेपछि हातमा धनु लिएर त्यसमा बाणको सन्धान गरी प्रहार गर्दा जोडिएका तीनपुरहरूको एउटा रूप त्रिपुर बन्यो । त्यो त्रिपुर स्वर्ग, मर्त्य र पातालसमान विशाल र आकर्षक देखियो ।।१५।। त्यो त्रिपुर विचित्र भवनहरूको उपस्थितिका कारण रमणीय थियो । तलाउ र बगैंचाले घेरिएका भवनले शोभायमान थियो। अनेक थरि सुन्दर पक्षी त्यहाँ आनन्दले कलरव गरिरहेका थिए। सबै प्रकारका कामना परिपूर्ण तुल्याउने त्यो त्रिपुर आकाशगामी विमानसमान आकाशमा नै अडिएको थियो ।।१६।। कलाधरको मायाद्वारा सम्मोहित त्रिपुरासुर त्यसमा विराजमान भएर अत्यन्त हर्षित भयो । खुसियालीमा त्यसले बादलले झैं तीनै लोक कँपाउँदै गर्जन गर्‍यो । यो ब्रह्माण्डमा मभन्दा ठूलो अरू कुनै छैन भन्ने गर्व र दर्पले परिपूर्ण त्रिपुरासुरले आफ्नो गर्जनबाट त्रिलोकीलाई क्षुब्ध तुल्यायो । त्यसपछि ती ब्राह्मणलाई भन्यो - हे ब्राह्मण देव ! तपाईँले दुर्लभ कुरा माग्नुहोस्, म दिन तयार छु। ब्राह्मण स्वभावतः निस्पृह थिए तापनि तिनले भने ।।१७-१९।।

**ब्राह्मणले भने** - म घुम्दै कैलासमा पुगेको थिएँ, त्यहाँ शिवजीद्वारा पूजित र मनले चिताएको पुऱ्याउने भगवान् श्रीगणेशको चिन्तामणि नामक प्रतिमा देखें ।।२०।। हे असुरराज! यदि तपाईँसँग शक्ति छ भने त्यो प्रतिमा ल्याएर मलाई दिनुहोस्। त्यस्तो सुन्दर मूर्ति मैले त्रिलोकीमा भ्रमण गर्दा कहीं पनि देखेको छैन ।।२१।। हे दैत्यराज ! त्यस कारण

अतो मम मनस्तस्यामासक्तं दैत्यसत्तम ! ।
तां प्राप्य कृतकृत्योऽहं भविष्याम्यसुरेश्वर ।।२२।।

कीर्तिं ते प्रथयिष्यामि त्रैलोक्ये सचराचरे ।
न दाता त्रिपुराच्छ्रेष्ठो वाञ्छितं यः प्रयच्छति ।।२३।।

मेरो मन त्यो मूर्तिमा अत्यन्त आसक्त भएको छ। त्यो मूर्ति पाउन सकें भने म कृतकृत्य हुनेछु ।।२२।। मैले तपाईंको कीर्ति त्रिलोकीमा फैलाउने छु र मैले दुनियाँका सामु भन्नेछु- यस संसारमा त्रिपुरासुरभन्दा ठूलो दाता अरू कुनै पनि छैन किनकि उनले चिताएका सबै कुरा प्रदान गर्दछन्।।२३।।

**दैत्य उवाच**

शङ्करं किङ्करं मन्ये गणये न च देवताः ।
आनयित्वा प्रदास्यामि तां मूर्तिं द्विजपुङ्गव ।।२४।।

**त्रिपुरासुरले भन्यो -** हे ब्राह्मणश्रेष्ठ ! मैले शङ्करलाई किङ्कर (सेवक) समान मानेको छु । अरू देवतालाई त भुसुना बराबर पनि गन्दिनँ । तपाईंले भनेको मूर्ति अवश्य ल्याउने छु र तपाईंलाई प्रदान गर्नेछु ।।२४।।

**ब्रह्मोवाच**

इत्युक्त्वा पूजयामास तं कलाधरमादरात् ।
ददौ तस्मै दशग्रामान् गोवस्त्रभूषणानि च ।।२५।।

मुक्ताफलानि भूरीणि महार्हाणीतराणि च ।
रत्नानि च प्रवालानि राङ्कवास्तरणानि च ।।२६।।

दासीदासशतं नानाभूषायुक्तं ददेऽसुरः ।
सदश्वान् सवरूथाँश्च स्वर्णाक्षान् राजतान् रथान् ।।२७।।

प्रगृह्यैतद् बलाद् दत्तं प्रययौ स कलाधरः ।
स्वाश्रमं हर्षयन् पत्नीं सर्वानाश्रमवासिनः ।।२८।।

**ब्रह्माजीले भन्नुभयो -** यस्त कुरा गरेपछि त्यस दैत्यले कलाधर ब्राह्मणका रूपमा रहनुभएका श्रीगणेशको आदरपूर्वक पूजा गर्‍यो । त्यसले उहाँलाई दश गाउँ, गाई, वस्त्र, गहना, मोती, रत्न, मूँगा, कम्वल, सुन्दर वस्त्र र अलङ्कारहरूका साथै दास-दासी, काठीले सजिएका राम्रा घोडा, स्वर्णमुद्रा, रौप्यमुद्रा र अरू धेरै कुरासमेत प्रदान गर्‍यो । कलाधर पनि दैत्यले दिएका वस्तुहरू ग्रहण गरी प्रस्थान गरे । ती आफ्नो आश्रममा पुगेपछि तिनको आगमनबाट उनकी पत्नी र सबै आश्रमवासी जनसमेत प्रसन्न भए ।।२५-२८।।

**ब्रह्मोवाच**

एवञ्च सर्ववृत्तान्तं नारदोऽकथयत् सुरान् ।
तेऽपि कालं प्रतीक्षन्तो दिवसानतिचक्रमुः ।।२९।।

**ब्रह्माजीले भन्नुभयो -** देवर्षि नारदजीले माथि भएका सबै कुरा देवताहरूलाई बताए । देवताहरू पनि उचित समयको प्रतीक्षा गर्दै आफ्ना दिन बिताइरहेका थिए ।।२९।।

ॐ

**इति श्रीगणेशपुराणे उपासनाखण्डे चिन्तामणिप्रतिमामहिमवर्णनं नामैकचत्वारिंशोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'ब्राह्मणरूप श्रीगणेशद्वारा त्रिपुरासुरलाई तीन पुर प्रदान र चिन्तामणि प्रतिमाको प्रशंसा' शीर्षकान्वित एकचालीसौं अध्याय पूर्ण भयो ।।४१।।

ॐ

## द्विचत्वारिंशोऽध्यायः　{ ४२ अध्याय }

**व्यास उवाच**

कृतवान् किमु दैत्यः स गते तस्मिन् कलाधरे ।
कथमानीय दत्ताऽस्मै मूर्तिश्चिन्तामणेः शुभा ।।१।।

एतत् कथय मे सर्वं विस्तार्य चतुरानन ! ।
लीला गजाननीः शृण्वन् न तृप्यामि समासतः ।।२।।

**ब्रह्मोवाच**

तस्मिन् गते यदकरोत् स दैत्यो मुनिसत्तम !
तत् सर्वं कथयिष्यामि शृणुष्वावहितो मुने ।।३।।

दूतौ सम्प्रेषयामास मन्दराद्रिस्थितं शिवम् ।
अशिक्षयच्छिवं गत्वा ब्रूतं मद्वाक्यमादरात् ।।४।।

मूर्तिश्चिन्तामणेस्तेऽस्ति गृहे सर्वार्थदा शुभा ।
देहि तां दैत्यराजाय साम्नैव गिरिजापते ।।५।।

पाताले स्वर्गलोके वा मर्त्ये वा पुनरद्भुतम् ।
तत् सर्वं तेन दैत्येन ह्यानीतं स्वगृहे बलात् ।।६।।

शीघ्रमानीयतां देव ! यावो दैत्यं महाबलम् ।
न दास्यसे यदा साम्ना तदा दैत्यः पराक्रमी ।।७।।

ग्रहीष्यति बलात् तान्तु ततो दुःखमवाप्स्यसि ।
इति दैत्यवचः श्रुत्वा जग्मतुस्तौ शिवं प्रति ।।८।।

आहतुस्तौ महादेवं दैत्यराजेन शिक्षितम् ।
इत्थं दूतवचः श्रुत्वा त्रिनेत्रः क्रोधमूर्च्छितः ।।९।।

उवाच दूतौ दूतौ वामिति कृत्वा क्षमे वचः ।
कामस्येव भवेद् भस्म नो चेद् वां नात्र संशयः ।।१०।।

किं कार्यं तेन दैत्येन तृणीभूतेन मे विभोः ।
आयातु युद्धमेवास्तु मर्तुकामो ममान्तिकम् ।।११।।

नेयं मूर्तिस्तेन शक्या प्राप्तुं जन्मशतैरपि ।
प्रलयाग्निः पतङ्गेन किं शान्तिमधिगच्छति ।।१२।।

**व्यासले भन्नुभयो** - कलाधर बिदा भई फर्केपछि त्रिपुरासुरले के गऱ्यो? फेरि कसरी र कहिले त्यसले कैलासबाट श्रीगणेशमूर्ति ल्याएर कलाधरलाई प्रदान गऱ्यो ? ।।१।। हे भगवन्! यी सबै कुराको बारेमा विस्तारपूर्वक प्रकाश पार्नुहोस्। गजानन भगवान्का लीला सुनेर मेरो मन कहिले पनि तृप्त हुँदैन ।।२।।

**ब्रह्माजीले भन्नुभयो** - हे मुनिवर ! कलाधर प्रस्थान गरेपछि त्रिपुरासुरले जे गऱ्यो, ती सबै कुरा म बताउनेछु, ध्यान दिएर सुन्नुहोस् ।।३।। त्रिपुरासुरले दुई दूतहरू बोलाई तिमीहरू दुबै सदाशिवजी बस्नुभएको धाम मन्दराचलमा गएर उहाँलाई आफ्नो सन्देश सुनाउन भनी मन्दराचलतर्फ पठायो। तिनीहरूलाई जाने बेलामा आज्ञा दियो, तिमीहरूले शिवजीका सामु मेरा वचन आदरपूर्वक सुनाओ – 'हे शिवजी ! तपाईंको कैलासमा भगवान् श्रीगणेशको चिन्तामणि नामक सबै कामना पूरा गर्ने प्रतिमा रहेको छ त्यो दैत्यराज त्रिपुरासुरलाई दिनुहोस्। म अहिले तपाईंसँग मीठा वचनले माग्दैछु ।।४-५।। मैले पाताल, स्वर्ग र मर्त्यमा रहेका राम्रा र अद्भुत पदार्थलाई सङ्कलन गरेको छु । अहिले यी दूतहरूको हातमा त्यो मूर्ति पठाइदिनुहोस्। यदि तपाईंले दिनुहुन्न भने म जबर्जस्ती खोसेर पनि ल्याउनेछु । त्यसो गर्दा तपाईंलाई दुःख लाग्न सक्छ । त्यो स्थिति नआओस्।' ती दूतहरूले दैत्यराज त्रिपुरले दिएको सन्देश मन्दराचलमा गएर शिवजीलाई सुनाए । दैत्यराजको यो सन्देश सुनेर भगवान् त्रिनयन शङ्कर अत्यन्त रिसाउनुभयो ।।६-९।। उहाँले ती दूतहरूलाई भन्नुभयो – तिमीहरू दूत भएका कारण मैले क्षमा गरेको छु । अन्यथा तिमीहरूका शरीरको स्वरूप कामदेवको जस्तै खरानी हुने थियो । यसमा सन्देह छैन ।।१०।। मेरा लागि त्यो तिम्रो त्रिपुरासुर तृणसमान तुच्छ प्राणी हो। त्यससँग मैले केही लिनु-दिनु छैन। त्यो मर्न चाहने दैत्यले युद्ध गर्न चाहन्छ भने मेरा सामु आउनुपर्छ।।११।। त्यसले श्रीगणेशको चिन्तामणि मूर्ति सय जन्ममा पनि पाउन सक्दैन। सानो पतङ्गको प्रयासबाट के प्रलयको आगो निभ्न सक्छ ?

मेरोः पातो मूषकेन शक्यः कर्तुं किमोजसा ।
असङ्ख्यजलनिष्कासाच्छुष्कः स्यात् किं महोदधिः ।।१३।।

ब्रह्मोवाच
श्रुत्वा तु शाङ्करीं वाणीं दैत्यौ यातौ यथागतम् ।
अब्रूतां स्वामिनं वाक्यं शम्भुना यदुदीरितम् ।।१४।।

तदाकर्ण्य प्रजज्वाल दैत्यो वाक्यार्थकोविदः ।
क्रोधानलेन दीप्तोऽसौ त्रैलोक्यं प्रदहन्निव ।।१५।।

आज्ञापयच्च युद्धाय स्वसेनां चतुरङ्गिणीम् ।
निर्गता सहसा सेना मन्दराचलसम्मुखा ।।१६।।

भूतलं छादयामास निर्मर्यादो यथाम्बुधिः ।
अनेकसूर्यसङ्काशा विकोशैः शस्त्रसञ्चयैः ।।१७।।

गर्जन्ती घनवद् घोरं मृत्योर्मानसकम्पिनी ।
दैत्यस्त्रिपुरमारुह्य विमानसदृशं महत् ।।१८।।

मनोवेगं ततः पश्चाज्जिघांसुः शम्भुमाययौ ।
बृहन्मणिमयं चारुकवचं कुण्डलेऽङ्गदे ।।१९।।

मुक्तामालां मुद्रिकाश्च कटिसूत्रञ्च काञ्चनम् ।
मुकुटं रत्नखचितं महार्घं बिभ्रदुल्लसत् ।।२०।।

यस्य शब्देन महता चकम्पे हरमानसम् ।
तद्धनुः सनिषङ्गञ्च कौर्मं खेटमसिं दृढम् ।।२१।।

शुशुभे शक्तिका दिव्याऽवहद् यां दैत्यपुङ्गवः ।
गायमाना नर्तमाना गन्धर्वाप्सरसां गणाः ।।२२।।

वन्दिनश्चारणाश्चापि ययुरस्याग्रतो मुदा ।
शङ्करो दूतवाक्येन श्रुत्वा दैत्यं समागतम् ।।२३।।

असङ्ख्यबलसंयुक्तं युयुत्सुं कालकर्षितम् ।
शूलपाणिरपि तदा सम्पूज्य द्विरदाननम् ।।२४।।

प्रणम्य तं परिक्रम्य पुरस्कृत्य बलं बलात् ।
आययौ क्रोधदीप्ताक्षः स्वस्थलाद् रणमण्डलम् ।।२५।।

ते वीरा वीरशब्देन नादयन्तो दिशो दश ।
अभिजग्मुः प्रहरणैः परस्परवधेप्सवः ।।२६।।

के मूसाले बल देखाएर सुमेरु पर्वतलाई भत्काउन अथवा खसाउन सक्छ ? र के असङ्ख्य पानी निकाल्दाले महासागर सुक्न सक्छ ? ।।१२-१३।।

**ब्रह्माजीले भन्नुभयो** - शङ्कर भगवान्को वाणी सुनेपछि ती दुवै दैत्य जहाँबाट आएका थिए त्यतै फर्के । त्यहाँ गएर आफ्ना स्वामी त्रिपुरासुरसमक्ष शिवजीले भन्नुभएका कुरा जस्ताको तस्तै सुनाए ।।१४।। दूतहरूबाट शङ्करको सन्देश सुनेर शब्दार्थविद्यामा कुशल दैत्यराज त्रिपुरासुर रीसले दन्किएर जाज्वल्यमान हुँदा क्रोधाग्निको ज्वालाबाट तीन लोकलाई नै डढाउन खोजिरहेझैं देखियो ।।१५।। त्यसपछि त्यसले आफ्नो चतुरङ्गिणी सेनालाई शिवजीसँग युद्ध गर्न आदेश दियो । आज्ञा पाएको लगत्तै त्रिपुरासुरको सेना मन्दराचलतर्फ प्रस्थान गर्‍यो ।।१६।। प्रलयकालमा मर्यादा उल्लङ्घन गर्ने महासागरझैं त्यो दैत्य सेनाले पनि पृथिवीतललाई ढाक्यो । म्यानबाट झिकेका चम्किला तलवार धारण गर्ने दैत्य सैनिकहरू सूर्यसमान चम्किला देखिए ।।१७।। मेघझैं घोर गर्जन गर्ने दैत्य सेनाले मृत्युलाई कम्पायमान गराएझैं भान हुन्थ्यो । सेनाका पछि-पछि त्रिपुर दैत्य पनि मनजस्तै तीव्र वेग भएको त्रिपुरमा सवार भई शिवजीलाई मार्ने उद्देश्यले अगाडि बढ्यो । महिमामय मणिद्वारा अलङ्कृत सुन्दरकवच, कुण्डल, गदा, मोतीको हार, मुद्रिका, सुनको कन्धनी एवं रत्नजडित मुकुट धारण गर्ने र अत्यन्त भयङ्कर नादबाट शिवजीको मनसमेत तर्साउने दैत्यराज त्रिपुरले ठोक्रोसहित धनु एवं तलबार, कछुवाको पिठ्यूँबाट बनेको ढाल र शक्तिनामक अस्त्रलाई समेत धारण गरेको थियो। गाइरहेका गन्धर्व, नाचिरहेका अप्सराका गण र स्तुति गरिरहेका बन्दीजन दैत्यराजका अगाडि पङ्क्तिबद्ध भएर हिंडिरहेका थिए। असङ्ख्य सेनासम्पन्न, युद्धपिपासु र कालद्वारा तानेर युद्धको मैदानमा ल्याइएको त्रिपुरासुरलाई मैदानमा आएको देखेर भगवान् शूलपाणि स्वयं संहारका देवता हुनुभएता पनि उहाँले सर्वप्रथम भगवान् श्रीगणेशको पूजा, प्रणाम र परिक्रमा गरेर आफ्नो सेनालाई अगाडि लगाई क्रोधले आँखालाई ज्वालामय तुल्याउँदै आफ्नो आसनबाट उठेर रणस्थलमा आइपुग्नुभयो ।।१८-२५।। दुवै पक्षका वीरहरू वीरघोषले दसै दिशालाई शब्दायमान तुल्याउँदै हातमा शस्त्र-अस्त्र लिएर एकले अर्कालाई मार्ने हिसाबले युद्धको मैदानमा अगाडि बढे ।।२६।। दुवै पक्षका सेना एक-

अभूतां मीलिते सेने रजस्तिमिरसङ्कुले ।
स्वपरज्ञानरहिते जघ्नतू रणमूर्द्धनि ।।२७।।

अभवत् तुमुलं युद्धं न प्राज्ञायत किञ्चन ।
गजाश्वरथवीराणां हतानां शोणितोक्षिते ।।२८।।

शान्ते रजस्ययुद्ध्यन्त वीरा वीरैः पृथक् पृथक् ।
केचित् प्रासैः केऽपि खड्गैः केचिद् बाणैः शिलाशितैः ।।२९।।

ऋष्टिभिर्मुष्टिभिः केचित् केचित् परशुतोमरैः ।
हतानां तत्र वीराणां हयानाञ्च पदातिनाम् ।।३०।।

असृङ्नदी समभवत् केशशैवलवाहिनी ।
खेटकूर्मा खड्गमत्स्या शिरःकमलभूषणा ।।३१।।

छत्रावर्त्ता घोरतरा कबन्धवृक्षवाहिनी ।
वीरसन्तोषजननी गृध्रगोमायुहर्षकृत् ।।३२।।

दृष्ट्वा नदीं तु गिरिशो ययौ दैत्यान्तिकं बली ।
दैत्योऽपि त्रिपुरारूढो ययौ तस्य पुरः पुरः ।।३३।।

नायकौ सङ्गतौ दृष्ट्वा द्वन्द्वशोऽन्ये परस्परम् ।
अव्याकुलं युयुधिरे दैतेयाः शाम्भवास्तदा ।।३४।।

नानाप्रहरणैर्दिव्यैः शस्त्रैरस्त्रैर्द्रुमैरपि ।
तेषां युद्धानि नामानि कथयिष्ये समासतः ।।३५।।

अर्काका सामुन्ने भएर युद्धको जोशमा मैदानमा एकाकार भएका देखिए । त्यस बेला मैदानबाट उडेको धूलोले आकाश ढाकिँदा सैनिकहरूका आँखाका सामु अन्धकार छायो। कुन आफ्नो पक्षको वीर हो र कुन शत्रु पक्षको वीर हो भन्ने समेत चिन्न नसकिने परिस्थिति भएता पनि ती सेनाहरू युद्धभूमिमा जोशका साथ युद्ध गरिरहेका थिए । यस्तो डरलाग्दो युद्ध भयो कि संसारै ढाकियो । कतै केही देख्न सकिएन । हात्ती, घोडा र रथमा रहेका, रणमा घाइते हुने र दिवङ्गत हुने वीरहरूको रगतमा मुछिएको रणभूमिको धूलो र माटोमा वीरहरू एक-आपसमा घमासान युद्ध गरिरहेका थिए ।।२७-२८।। केही प्रास( भाला)द्वारा, केही बाणद्वारा, केही धारिला चुच्चा भएका ढुङ्गाको प्रहारद्वारा, केही कृपाणद्वारा, केही मुड्कीद्वारा, केही बञ्चरोद्वारा, केही मुग्रोद्वारा प्रहार गर्दै त्यहाँ युद्ध गरिरहेका थिए । युद्धको मैदानमा मरेका र घाइते भएका योद्धा वीरहरूका साथै घोडा, हात्ती र पैदल सेनामा रहेका सबै वाहन र वीरहरूको रगतको नदी बग्यो । त्यस रगतको नदीमा कपालका रौंहरू सेवारझैं, ढालहरू कछुवाझैं, तलवारहरू माछाझैं, टाउकाहरू कमलझैं, छाताहरू भुँमरीझैं र मानिसका शरीरहरू रूख-बिरुवाझैं बगिरहेका थिए। वीरहरूलाई सन्तोष प्रदान गर्ने, गिद्ध र स्याललाई खुसी तुल्याउने रगतको नदी बगेको देखेर भगवान् शङ्कर त्रिपुरासुरको नजिकमा जानुभयो । त्रिपुरमा आरूढ भएको त्यो त्रिपुरासुर पनि भगवान् शङ्करका सामुमा आयो ।।२९-३३।। दुबै युद्धका नेता त्रिपुर र शिवजीलाई एक ठाउँमा उभिएको देखेर दुबै पक्षका वीरहरू परस्पर निर्भय भई मल्लयुद्धका साथै शस्त्रप्रहार, दिव्यास्त्रप्रहार र वृक्षप्रहार समेत गरी युद्ध गरिरहेका थिए । त्यहाँ युद्ध गर्ने प्रमुख वीरहरूका नाम र युद्धका नामसमेत सङ्क्षेपमा पछि बताउनेछु ।।३४-३५।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे युद्धवर्णनं नाम द्विचत्वारिंशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'शङ्कर र त्रिपुरासुरको युद्धवर्णन' शीर्षकान्वित बयालीसौं अध्याय पूर्ण भयो ।।४२।।

ॐ

## त्रिचत्वारिंशोऽध्यायः { ४३ अध्याय }

ब्रह्मोवाच

अयुध्येतां द्वन्दशोऽथ गिरिशासुरनायकौ ।
षण्मुखेन प्रचण्डश्च नन्दिना चण्ड एव च ।।१।।
युयुधे पुष्पदन्तोऽपि भीमकायेन वीर्यवान् ।
भ्रुशुण्डी कालकूटेन विषवत् प्राणहारिणा ।।२।।
अयुध्येतां वीरभद्रवज्रदंष्ट्रौ महाबलौ ।
इन्द्रोऽपि युयुधे तत्र दैत्यामात्येन वीर्यवान् ।।३।।
दैत्यपुत्रेण बलिना जयन्तो युद्धदुर्मदः ।
काव्येन युयुधे तत्र सुराचार्योऽस्त्रवित्तमः ।।४।।
देवानाञ्चैव दैत्यानामेवं द्वन्द्वान्यनेकशः ।
वर्णितुं नैव शक्यानि मया वर्षशतैरपि ।।५।।
रथिनो रथिभिः सार्धं गजिनो गजिभिः सह ।
अश्वारोहाः स्वसदृशैः पदाताश्च पदातिभिः ।।६।।
युयुधुः संयुगे घोरे नानावाद्यनिनादिते ।
हेषितैर्बृंहितैः क्ष्वेडैर्नेमिनादैश्च शब्दिते ।।७।।
केचिच्च मल्लयुद्धेन युयुधुर्विविधेन तु ।
जघ्नुरङ्गानि चाङ्गेषु त्यक्त्वा शस्त्राणि संयुगे ।।८।।
ततः प्रचण्डो नवभिस्ताडयामास षण्मुखम् ।
आकर्णाकर्षनिसृतैर्दृढैर्बाणैः शिलाशितैः ।।९।।
अप्राप्तानेव ताँश्छित्त्वा शरैः सन्नतपर्वभिः ।।
कार्त्तिकेयः पञ्चभिस्तु ताडयामास सायकैः ।।१०।।
सम्मूर्च्छितोऽपतद् भूमौ प्रचण्डो भ्रान्तमानसः ।
नन्दिनाऽपि हतश्चण्डः पञ्चभिर्निशितैः शरैः ।।११।।
मूर्च्छामवाप सहसा पतितो धरणीतले ।
भीमकायः पुष्पदन्तमविध्यद् दशभिः शरैः ।।१२।।
छेदयामास समरे स्वशरैर्निशितैः स तान् ।
त्रिभिरेवाहनत् तञ्च सोऽपि भूतलमाश्रितः ।।१३।।
कालकूटं भ्रुशुण्डिस्तु पातयामास पञ्चभिः ।
शरैर्महाबलस्तत्र वीरभद्रो रुषा युतः ।।१४।।

**ब्रह्माजीले भन्नुभयो** - युद्धको मैदानमा त्रिपुरासुर र भगवान् शङ्कर, कार्तिकेय र प्रचण्ड, नन्दीश्वर र चण्ड परस्पर युद्ध गरिरहेका थिए ।।१।। वीर पुष्पदन्त भीमकायका साथ, भ्रुशुण्डी विष झैं प्राण हरण गर्ने कालकूटका साथ, वीरभद्र वज्रदंष्ट्रका साथ, पराक्रमी इन्द्र त्रिपुरासुरको मन्त्रीका साथ, युद्धकुशल जयन्त बलिका साथ र अस्त्रवेत्ता बृहस्पति शुक्राचार्यका साथ लडिरहेका थिए ।।२-४।। देवता र दैत्यहरूका यस्ता असङ्ख्य जोडाहरू लडिरहेका थिए जुन युद्धको समग्र परिचय सय वर्षमा पनि दिन सकिंदैन ।।५।। रथीहरू रथीहरूका साथ, हस्ती सेनाहरू हस्ती सेनाका साथ, अश्वसेना अश्वसेनाका साथ र पदसेना पदसेनाका साथ युद्धको बाजाद्वारा उत्तेजित वातावरणमा युद्ध गरिरहेका थिए। घोडाका शब्द, हात्तीका चिङ्घाड, सिंहका गर्जन र रथका पाङ्ग्राको ध्वनिले शब्दायमान त्यस युद्धमा केही मल्लयुद्ध गरिरहेका थिए भने कसैले शस्त्र बिसाएर अङ्गहरूद्वारा अङ्गमा प्रहार गर्दै युद्ध गरिरहेका थिए ।।६-८।। त्यसपछि प्रचण्डले कानसम्म तानेर प्रहार गरिएका ढुङ्गासमान कठोर तीखा नौवटा बाण कार्तिकेयमाथि प्रहार गऱ्यो । ती बाणहरूले लक्ष्यभेदन गर्न नपाउँदै स्वामी कार्तिकेयले आफ्ना पाँचवटा तीखा चुच्चा भएका बाणहरूले शत्रुका बाण काटेर प्रचण्डमाथि प्रहार गरे । बाणप्रहारबाट चक्कर खाएको प्रचण्ड बिहोश भएर भुइँमा लड्यो । त्यसपछि नन्दीले पनि पाँचवटा तीखा बाण प्रहार गरेर चण्डलाई मूर्च्छित बनाए ।।९-११।। मूर्च्छित त्यो चण्ड भुइँमा अकस्मात् लड्यो। भीमकायले दशवटा बाण प्रहार गरेर पुष्पदन्तलाई घाइते बनायो ।।१२।। भीमकायले आफ्ना तीखा बाणको प्रहारबाट शिवजीका अरू सेनालाई पनि घाइते तुल्यायो । भुइँमा आश्रय लिएका पुष्पदन्तले तीनवटा बाण प्रहार गर्दा भीमकाय घाइते भएर भुइँमा लड्यो ।।१३।। भ्रुशुण्डीले पाँचवटा बाण प्रहार गरेर कालकूटलाई घाइते बनाए । बलवान् वीरभद्रले रिसाएर

वज्रदंष्ट्रं ततो जघ्ने चतुर्भिर्निशितैः शरैः ।
तान् निवार्य स्वयं जघ्ने वीरभद्रं त्रिभिः शरैः ।।१५।।

तानापतत एवाशु वीरभद्रोऽच्छिनत् त्रिभिः ।
पातयामास वेगेन वज्रदंष्ट्रं त्रिभिः शरैः ।।१६।।

इन्द्रोऽपि वज्रपातेन दैत्यामात्यं न्यपातयत् ।
उद्यम्य निशितं खड्गं दैत्यपुत्रः समाययौ ।।१७।।

हन्तुकामो जयन्तं तं वीरेषु पतितेषु च ।
तं निरीक्ष्य तथा यान्तं खड्गं चिच्छेद पत्रिणा ।।१८।।

जयन्तोऽभ्यहनच्छीघ्रं दैत्यसूनुं त्रिभिः शरैः ।
तैराहतो वमन् रक्तं न्यपतन् मोहसंयुतः ।।१९।।

एवं सर्वेषु सैन्येषु प्रभग्नेषु समन्ततः ।
दृष्ट्वा पलायनपरान् दैत्यान् देवगणार्दितान् ।।२०।।

अधावन् पृष्ठतः केचित् प्रमथा जयशालिनः ।
एवं जयत्सु देवेषु स्वसैन्ये विद्रुतेऽपि च ।।२१।।

आययौ स्वयमेवेशं त्रिपुराधिष्ठितोऽसुरः ।
शस्त्रयुद्धं पुरा कृत्वा युध्येतामस्त्रतो ह्युभौ ।।२२।।

वारुणास्त्रं जहौ दैत्यो वृष्टिर्घोरतराऽभवत् ।
नीहारबहुले युद्धे न प्राज्ञायत किञ्चन ।।२३।।

क्वचिद् विद्युत्प्रकाशेन स्वपरज्ञानकारिणा ।
युद्धमासीत् तु तुमुलङ्घोररूपं दुरासदम् ।।२४।।

विलोक्य सैन्यं तत्सर्वं वृष्टिवातप्रपीडितम् ।
शिलापातभयाद् याते स्वसैन्ये तु दिशो दश ।।२५।।

वायव्यमस्त्रं गिरिशो मोचयामास सत्वरम् ।
महावातान् महामेघा विशीर्णाः खण्डशोऽम्बरे ।।२६।।

वातेन घूर्णिता सेना दैत्यानां सर्वतो दिशम् ।
जगलुः पक्षिपिच्छानि वीरोष्णीषाणि दूरतः ।।२७।।

वज्रदंष्ट्रमाथि चारवटा बाण प्रहार गरे । ती बाणहरूलाई तर्काएर वज्रदंष्ट्रले वीरभद्रलाई तीनवटा बाणले प्रहार गऱ्यो ।।१४-१५।। ती बाणहरू शरीरमा नलाग्दै तीव्रगतिमा वीरभद्रले तिनलाई आफ्ना तीनवटा बाणले काटिदिए। फेरि वीरभद्रले आफ्नो धनुबाट तीनवटा बाण प्रहार गरेर वज्रदंष्ट्रलाई भुइँमा लडाए ।।१६।। इन्द्रले जोशका साथ वज्र प्रहार गरेर त्रिपुरासुर दैत्यको मन्त्रीलाई घाइते बनाए । त्यसपछि त्रिपुरासुरको छोरो हातमा तीखो धार भएको खड्ग उठाएर इन्द्रका छोरा जयन्तलाई मार्ने उद्देश्यले आयो । शरीरमा घाउ लागेर छट्पटाइरहेका योद्धा वीरहरूको माझमा दैत्यपुत्रलाई आएको देखेर जयन्तले बाणद्वारा त्यसको तरबारलाई टुक्राटुक्रा पारिदिए ।।१७-१८।। त्यसपछि जयन्तले छिटै तीन वटा बाण प्रहार गरेर त्रिपुरासुरको छोरालाई भुइँमा लडाए । यसरी घाइते भई भुइँमा लडेको त्यो दैत्यपुत्र मुखबाट रगतका धारा बान्ता गर्दै बिहोश भयो ।।१९।। चारैतिरबाट प्रहार हुँदा दैत्य सैनिकहरू छिन्नभिन्न भएपछि घायल भएका दैत्यहरूलाई पलायन गरिरहेको देखेर विजयी देवताहरू दैत्यहरूका पछि-पछि गई तिनीहरूलाई अझ धपाउन थाले । देवताहरू विजयी हुनाले र आफ्ना सैन्यहरू पराजित हुनाले चिन्तित त्रिपुरासुर म आफै लड्छु भनेर शिवजीका सामु आयो। भगवान् शिवजी र त्रिपुरासुरले सर्वप्रथम शस्त्रयुद्ध गरे।।२०-२२।। अस्त्रयुद्धको प्रारम्भमा त्रिपुरासुरले शिवजीमाथि वारुणास्त्र प्रहार गर्दा त्यहाँ भयङ्कर वर्षा भयो । चारैतिरबाट बादलले ढाकिएको हुँदा युद्धमा के भइरहेको छ भन्ने कुरा कसैले पनि राम्ररी जान्न पाएन।।२३।। कुनै बेला आकाशमा बिजुली चम्किंदा त्यसको प्रकाशमा यो हाम्रो पक्षको वीर हो र यो शत्रुपक्षको वीर हो भन्ने थाहा पाएका दुवै पक्षका वीरहरूको घनघोर, विस्तृत र दुर्लभ युद्ध भयो।।२४।। त्यस युद्धमा आफ्ना सैनिकहरू वर्षा र आँधीले व्याकुल अवस्थामा रहनु र केही वीरहरू चट्याङ्का डरले दिशा-विदिशातिर भाग्नु जस्ता दृश्य देखेर भगवान् शिवजीले तुरुन्तै वायव्यास्त्र प्रहार गर्नुभयो। त्यसबाट ठूलो हावा-हुरी चल्यो । वारुणास्त्रले जन्माएका बादलहरू आकाशमा टुक्रा-टुक्रा भए।।२५-२६।। वायव्यास्त्रको प्रहारले पैदा भएको हावाले कम्पायमान दैत्यसेना चारैतिर भाग्न थाल्यो । दैत्ययोद्धाहरूले टाउकामा बाँधेका पगरीहरू र शिरमा शोभाका लागि धारण गरिएका मुजुरका प्वाँखहरू भुइँमा खस्न र उड्न थाले ।।२७।।

पतिताश्चूर्णिताः केचिद् रथाश्वगजपत्तयः ।
उन्मूलिता लतावृक्षाश्छादयन्ति स्म सैनिकान् ।।२८।।

पन्नगास्त्रेण तं वायुं तथा दैत्यो न्यवारयत् ।
आकर्ण धनुराकृष्य तूणाद् बाणं प्रगृह्य च ।।२९।।

मन्त्रयन्ननलास्त्रेण शिवसैन्ये न्यपातयत् ।
अङ्गारवृष्टिः सहसा पतिता सर्वदाहिनी ।।३०।।

प्रलयं मेनिरे सर्वे ज्वालामालाभिरर्दिताः ।
ज्वालाभ्यो दीप्यमानाभ्यो महाभीतिकरः पुमान् ।।३१।।

आविरासीन् महाकायो लिखन् मूर्ध्ना नभस्तलम् ।
दंष्ट्राकरालवदनो महारावः क्षुधातुरः ।।३२।।

लालयन् रसनां घोरां शतयोजनविस्तृताम् ।
नासापवनवेगेन भ्रामयन् कुञ्जरान् रणे ।।३३।।

भक्षयामास तां सेनामुरगानिव पक्षिराट् ।
अपीपलद् भर्गसेना तेन पुंसा प्रपीडिता ।।३४।।

शिवपृष्ठं समासाद्य रक्ष रक्षेति चाब्रवीत् ।
माभैष्टेत्यभयं तस्यै दत्त्वा वह्निं न्यवारयत् ।।३५।।

पर्जन्यास्त्रप्रपातेन तत्क्षणाद् गिरिजापतिः ।
बाणेनैकेन तं घोरं पुरुषं स न्यपातयत् ।।३६।।

तत उत्थाय पुरुषो बभक्ष शिवसैनिकान् ।
ययुः पलायनपराः प्रमथा भयविह्वलाः ।।३७।।

स्खलन्तो निपतन्तश्च निश्वसन्तश्चकम्पिरे ।
शिवोऽपि निःसहायत्वाद् दरीमेवान्वपद्यत ।।३८।।

केही रथ, घोडा, हात्ती र पैदल सेना ठूलो आँधीबेहरीमा परेर घाइते भए र भुइँमा लडे । आँधीबेहरीले ढलेका रूख र लहराहरूले केही सैनिकहरू थिचिएका थिए ।।२८।। यस्तो दृश्य देखेपछि त्रिपुरासुरले आफ्नो धनुलाई कानसम्म तानेर तूणीरबाट बाण झिकी पन्नगास्त्र प्रहार गऱ्यो । त्यसले वायव्यास्त्रले जन्माएको थामिनसक्नु प्रचण्ड हावालाई हटायो। त्यसपछि त्रिपुरासुरले तूणीरबाट बाण झिकी अभिमन्त्रित गरेर कानसम्म ताँदो खिँची धनुद्वारा शिवजीको सेनामा आग्नेयास्त्र प्रहार गऱ्यो । आग्नेयास्त्रको प्रहारबाट सर्वदाहक अँगार बर्सियो। चारैतिर आगलागी भयो र पर्वताकार अग्निज्वाला देखियो । अग्निज्वालाबाट डढेका प्राणीहरूले प्रलयकाल आएको महसुस गरे । दन्किरहेको आगाको ज्वालाबाट एउटा विशालकाय र भयङ्कर पुरुष प्रकट भयो । त्यस पुरुषले आफ्ना टाउकाले आकाश छोइरहेको थियो । लामा-लामा दाह्रा निस्केका कारण त्यो डरलाग्दो थियो। आफ्नो मुखबाट चर्को स्वरमा गर्जन गरिरहेको थियो र त्यो भोकले निकै व्याकुल थियो ।।२९-३२।। त्यसले चार सय कोश लामो डरलाग्दो जिब्रो मुखबाहिर निकालिरहेको थियो । त्यसका नाकका प्वालबाट निस्कने हावाको वेगले युद्धमा रहेका हात्तीहरू आकाशमा चक्कर काटिरहेका थिए ।।३३।। त्यसले शिवजीको सेनालाई गरुडले सर्प खाएझैं खान थाल्यो । त्यस पुरुषबाट आत्तिएका शिवसेनाका जवानहरू पलायन गर्न थाले।।३४।। ती सैनिकहरूले शिवजीको पछाडि गएर - हे शिवजी ! हाम्रो रक्षा गर्नुहोस्, हाम्रो रक्षा गर्नुहोस् भनी प्रार्थना गर्न लागे । आफ्नो सेनालाई व्याकुल भई प्रार्थना गरिरहेको देखेर शङ्कर भगवान्ले तिमीहरू नडराओ भनी अभयदान दिंदै पर्जन्यास्त्र प्रहार गर्नुभयो। आग्नेयास्त्रबाट जन्मेको आगाको ज्वाला पर्जन्यास्त्रप्रहारबाट निभ्यो । त्यसपछि शिवजीले एउटा बाण प्रहार गरी त्यो डरलाग्दो पुरुषलाई भुइँमा लडाउनुभयो। केही बेरपछि त्यस पुरुषले भुइँबाट उठेर शिवजीका सैनिकलाई खान थाल्यो । डरले आत्तिएका शिवजीका सैनिकहरू यता-उति दौडन थाले । ती सैनिकहरू भुइँमा लडिबुडी गर्दै लामो सास तान्दै भागिरहेका थिए र थर्थर काँपिरहेका थिए। संयोगवश शिवजी पनि असहाय हुनुभयो र त्यस भीमकाय पुरुषसँग डराएर पहाडको गुफाभित्र पस्नुभयो ।।३५-३८।। कार्तिकेय-

षडाननादयो वीरा अनुसस्रुस्तमेव हि ।
जिघृक्षुर्गिरिजां दैत्यो विचिन्त्यैकाकिनीं गिरौ ।।३९।।

विहाय रणभूमिन्तु ययौ कैलासमेव सः ।
दूराद् दृष्ट्वा तमायान्तं चकम्पे गिरिजा तदा ।।४०।।

उवाच पितरं गत्वा दैत्यो मां किन्नु नेष्यति ।
तस्यास्तद्वचनं श्रुत्वा नीत्वा तां दुर्गमां गुहाम् ।।४१।।

अविज्ञातां स्वेतरेण स्थापयामास निर्भयाम् ।
सोऽपि दैत्यस्ततो हैमं गिरिं तद्ग्रहणेच्छया ।।४२।।

आगतो न ददर्शाऽथ गिरिजां क्वापि सत्तम ।
भ्रमन् ददर्श तत्रैकां मूर्तिं चिन्तामणेः शुभाम् ।।४३।।

सहस्रसूर्यसङ्काशां नानालङ्कारशोभिनीम् ।
त्रैलोक्यसुन्दरां सद्यो गृहीत्वा स्वस्थलं ययौ ।।४४।।

नानावादित्रनिर्घोषैः स्तुवद्भिर्वन्दिभिर्वृतः ।
ततः पातालमगमत् सर्वत्र विजयी बली ।।४५।।

गच्छतस्तस्य दैत्यस्य हस्तेप्यन्तर्हिता तदा ।
मूर्तिश्चिन्तामणेः सा तु तदद्भुतमिवाभवत् ।।४६।।

तमेवाशकुनं मत्वा तत्पुरं पुनराविशत् ।
अत्यन्तं विमनाश्चिन्तां दुरन्तां समुपागतः ।।४७।।

लगायतका अरू वीरहरू पनि शिवजीको पछिपछि लागे। तीसले कामिरहेको त्यो दैत्य कैलास पर्वतमा एक्लै बसिरहेकी पार्वतीलाई अपहरण गर्छु भन्ने विचार गरेर रणभूमि छाडी कैलास पर्वततर्फ लाग्यो । पार्वती पनि टाढैबाट भयानक पुरुषलाई आफूतर्फ आएको देखेर थर्थर काँप्न थाल्नुभयो ।।३९-४०।। त्यस बेला उहाँले आफ्ना पिता हिमालय पर्वतका सामु गई - 'हे पिता ! यो दैत्यले मलाई लैजान्छ कि? मेरो रक्षा गर्नुहोस्' भनेर प्रार्थना गर्नुभयो । आफ्नी छोरीको प्रार्थना सुनेर हिमालय पर्वतले तिनलाई आफूबाहेक अरू कसैले नजानेको दुर्गम गुफामा लगेर निर्भय तुल्याई लुकाएर राखे । त्यो दैत्य पनि पार्वतीका पछि-पछि उहाँलाई समाल्ने उद्देश्यले हिमालय पर्वतमा आयो।।४१-४२।। त्यहाँ आई चारैतिर हेर्दा त्यसले कहीं पनि पार्वतीलाई देखेन। घुम्दाघुम्दै त्यहाँ त्यसले भगवान् श्रीगणेशको चिन्तामणि नामक मङ्गलमय मूर्ति देख्यो ।।४३।। एक हजार सूर्यसमान तेजस्वी, अनेक थरि रत्नमय अलङ्कारले सुसज्जित, स्वर्ग-मर्त्य र पातालमा भेटिने सबै मूर्तिहरूभन्दा पनि सुन्दर भगवान् श्रीगणेशको चिन्तामणि मूर्ति लिएर त्यो आफ्नो निवासतर्फ गयो ।।४४।। अनेक प्रकारका वाद्यघोषका साथ स्तुतिपाठ गरिरहेका बन्दीहरूले घेरिएको सर्वत्र विजयी त्यो बलवान् दैत्य पातालतर्फ लाग्यो। पातालमा जाँदा त्यस दैत्यको हातबाट अकस्मात् त्यो चिन्तामणि नामक दुर्लभ मूर्ति गायब भयो । यो घटना साह्रै आश्चर्यजनक थियो ।।४५-४६।। यो घटनालाई अपशकुन मानेर त्यो दैत्य त्रिपुरमा आई असीमित चिन्ताले व्यग्र र अन्यमनस्क भई दिनयापन गर्न थाल्यो ।।४७।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे त्रिपुरासुरोत्कर्षवर्णनं नाम त्रिचत्वारिंशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'त्रिपुरासुरको शङ्करमाथि विजय' शीर्षकान्वित त्रिचालीसौं अध्याय पूर्ण भयो ।।४३।।

ॐ

## चतुश्चत्वारिंशोऽध्याय:    { ४४ अध्याय }

**व्यास उवाच**

**ततः किमकरोच्छम्भुस्त्रिपुरेण पराजितः ।**
**कथं तमजयद्दैत्यं त्रिपुरं जयशालिनम् ।।१।।**

**ब्रह्मोवाच**

**ततः शम्भुः परां चिन्तामापेदे मनसाऽसकृत् ।**
**स्वाहास्वधाविहीनं तु भूतलं परिचिन्तयन् ।।२।।**

**कदा स्वस्थानगा देवा भविष्यन्ति गतज्वराः ।**
**केनोपायेन वा स स्याद् दुर्जयस्य पराजयः ।।३।।**

**एवं चिन्तातुरे तस्मिन् नारदो मुनिसत्तमः ।**
**आययौ शङ्करं द्रष्टुं देवान् सर्वान् यदृच्छया ।।४।।**

**तं दृष्ट्वा जहृषे देवो मर्त्यः प्राप्य यथाऽमृतम् ।**
**पूजयामास विधिवत् कृतासनपरिग्रहम् ।।५।।**

**आलिङ्ग्य तमुवाचेत्थं शिवश्चिन्तातुरो भृशम् ।**
**देवानां हितमन्विच्छन् दैत्यस्य वधमेव च ।।६।।**

**शिव उवाच**

**दैत्येन सर्वदेवानां कदनं कृतमोजसा ।**
**तद्रणे भग्नसङ्कल्पाः सर्वे देवाः पलायिताः ।।७।।**

**याता दश दिशो ब्रह्मन् कः कुत्रास्ते न वेद्म्यहम् ।**
**ममाप्यस्त्राणि तेनास्त्रैः प्रभग्नानि सहस्रशः ।।८।।**

**ब्रह्मोवाच**

**श्रुत्वा शिववचः सोऽमुमवादीन् मुनिसत्तम ।**
**मन्वानः परमाश्चर्यं त्रैलोक्येशपराभवम् ।।९।।**

**नारद उवाच**

**सर्वज्ञ सर्वविद्येशे सर्वेशे सर्वकर्तरि ।**
**सर्वावने सर्वहरे सर्वस्यापि नियन्तरि ।।१०।।**

**व्यासले भन्नुभयो -** हे कमलासन ! त्रिपुरासुरद्वारा पराजित हुनुभएका भगवान् शिवजीले के गर्नुभयो ? फेरि उहाँले सर्वविजयी त्रिपुरासुरलाई कसरी पराजित गर्नुभयो ? ।।१।।

**ब्रह्माजीले भन्नुभयो -** हिमालय पर्वतको गुफामा रहनुभएका भगवान् शिवजी मनबाट निरन्तर चिन्ता गर्न लाग्नुभयो- पृथिवीतल अहिले स्वाहाकार एवं स्वधाकारबाट रहित छ र अधर्मको साम्राज्य छ, कहिले देवताहरू आफ्नो ठाउँमा जान पाउलान् ? कहिले देवताहरूको सङ्कट समाधान होला ? कुन उपायले देवताहरूलाई आ-आफ्नो धाममा पुऱ्याउन सकिन्छ? कुन उपायले अजेय दानवलाई पराजित गर्न सकिन्छ ? भन्ने चिन्ताले आकुल हुनुभएका शिवजीका समक्ष उत्तम मुनि नारदजी स्वेच्छाले उहाँ र अरू देवताहरूको दर्शन गर्न आए ।।२-४।। नारदजीलाई एकाएक आएको देखेर भगवान् शिवजी कुनै मानिस अमृत पाउँदा हर्षित भएझैं हर्षित हुनुभयो । शिवजीले विधिवत् सत्कार गरी आसनमा बसाइनुभएका नारदजीको सम्मानपूर्वक पूजा गर्नुभयो । त्यसबेला चिन्ताले आतुर भगवान् शिवले नारदजीलाई आलिङ्गन गर्दै देवतापक्षको विजय र दैत्यहरूको वधको कामना गर्दै भन्नुभयो ।।५-६।।

**शिवजीले भन्नुभयो -** त्रिपुरासुरले आफ्नो पराक्रमबाट सबै देवताहरूलाई कष्ट दिएको छ । युद्धमा त्यसबाट पराजित र निराश भएका देवताहरू पलायन गरेका छन् । ती सबै देवता दसै दिशामा पुगे । हे नारदजी ! कुन देवता कहाँ छन् भन्नेसमेत पनि मलाई थाहा छैन। त्यस त्रिपुरासुरले आफ्ना अस्त्रहरूद्वारा मेरा हजारौं अस्त्रलाई छिन्न-भिन्न बनायो ।।७-८।।

**ब्रह्माजीले भन्नुभयो -** हे व्यास ! शिवजीको कुरा सुनेर नारदजीले त्रिलोकीका स्वामी शिवजीको पराजय हुनुलाई आश्चर्य मान्दै उहाँप्रति भने ।।९।।

**नारदले भने -** सर्वज्ञ, सबै विद्याका स्वामी, सर्वेश, सर्वकर्ता, सर्वरक्षक, सर्वसंहारक, सर्वनियामक, कुनै पनि कार्य गर्न सक्ने, नगर्न सक्ने र अन्यथा पनि गर्न सक्ने,

शक्ते कर्तुमकर्तुं वाऽन्यथाकर्तुमपि प्रभो ।
अणिमादिगुणोपेते षडैश्वर्यविलासिनि ।।११।।

किं वक्तव्यं मया देव सर्ववक्तृवरे त्वयि ।
मुनिना गानसक्तेन त्रिलोकीं भ्रमताऽनिशम् ।।१२।।

तव वाक्यानुरोधेन विचार्य प्रब्रवीम्यहम् ।
एवमुक्त्वा क्षणं ध्यात्वा पुनः प्राह शिवं मुनिः ।।१३।।

मुनिरुवाच

युद्धाय गन्तुकामेन नार्चितो गणपस्त्वया ।
अतः पराभवं प्राप्तो वह्निनेत्रः पिनाकधृक् ।।१४।।

इदानीमर्चय पुरा विघ्नेशं विघ्नवारणम् ।
प्रसाद्य तद्वरं लब्ध्वा याहि युद्धाय सादरम् ।।१५।।

पराजेष्यसि तं दैत्यं नात्र कार्या विचारणा ।

ब्रह्मोवाच

तेनापि तपसा देवो महताराधितः पुरा ।।१६।।
तेन तस्मै वरो दत्तोऽखिलविघ्नौघहारिणा ।
महेश्वरं विना मृत्युर्न केनापि भवेत् तव ।।१७।।

मुनिरुवाच

तस्माद् गिरिश ! तस्येदं कामगं तु पुरत्रयम् ।
एकेषुणा दारयस्व जयोपायोऽयमीरितः ।।१८।।

प्रहर्षमतुलं लेभे श्रुत्वोपायं मुनेः शिवः ।
श्रुत्वा गजाननगिरं पूर्वोक्तां प्राह तं मुनिम् ।।१९।।

शिव उवाच

सत्यमुक्तं त्वया ब्रह्मन् ! त्वद्वाक्येन स्मृतं मया ।
उपदिष्टौ पूर्वमेव मन्त्रौ तेन मुने ! मम ।।२०।।

अणिमा-महिमा आदि सिद्धिले सम्पन्न, ६ प्रकारका ऐश्वर्यद्वारा शोभायमान र वेदादि सम्पूर्ण शास्त्रका वक्ता तपाईंका विषयमा मजस्तो वीणा बजाउँदै घर-घर डुल्ने, निरन्तर स्वर्ग-मर्त्य-पातालमा चाहारिरहने साधारण मुनिले के भन्न सक्छु ? तापनि तपाईंको भनाइ र अनुरोधलाई स्वीकार गरी म केही भन्न चाहन्छु । यसरी उत्तर दिएर नारदजीले केहीबेर ध्यान गरी शिवजीका प्रति भने ।।१०-१३।।

**नारदले भने** - हे शिवजी ! हजुरले त्रिपुरासुरसँग युद्ध गर्न प्रस्थान गर्दा भगवान् गणपतिको पूजा गर्नुभएन । त्यस कारण पिनाक धनुर्धारण गर्ने, तीन आँखाले सुहाउनुभएका र ज्ञाननेत्र एवं अग्निनेत्र हुनुभएतापनि हजुरले पराजय बेहोर्नु पर्‍यो। अब हजुरले युद्धमा जानुभन्दा पहिले विघ्नका स्वामी श्रीगणेशको पूजा गर्नुपर्दछ । उहाँलाई खुसी तुल्याएर वरदान प्राप्त गरी युद्धका निमित्त प्रस्थान गर्नु उचित हुनेछ ।।१४-१५।। यसो गरेपछि मात्र हजुरले त्रिपुरासुरलाई युद्धमा पराजित गर्नुहुनेछ । यसमा कुनै सन्देह छैन ।

**ब्रह्माजीले भन्नुभयो**- त्रिपुरासुरले ठूलो तपस्या गरी भगवान् श्रीगणेशको आराधना गरेको थियो ।।१६।। त्यसबाट प्रसन्न हुनुभएका विघ्नको समुद्रलाई सुकाउनु हुने र विघ्नविनाशक श्रीगणेशले त्रिपुरलाई वरदान दिनुभयो - हे त्रिपुर ! तिम्रो मृत्यु भगवान् शङ्करबाहेक अरू कसैबाट पनि हुँदैन ।।१७।।

**नारदले भने** - हे शिवजी ! हजुरले इच्छानुसार जहाँ पनि पुऱ्याउन सकिने विमानको आकारका त्रिपुरासुरका तीनवटा पुरलाई एउटै बाणले एकै पटकमा भेदन गर्नुपर्छ । यही नै त्रिपुरासुरमाथि विजय प्राप्त गर्ने उपाय हो ।।१८।। नारदजीबाट त्रिपुरासुरमाथि विजय गर्ने उपाय थाहा पाएर शिवजीले अतुलनीय हर्ष प्राप्त गर्नुभयो । भगवान् श्रीगणेशले त्रिपुरलाई वर दिंदा भन्नुभएको वाणी सुनेर प्रसन्न हुनुभएका शिवजीले नारदलाई भन्नुभयो ।।१९।।

**शिवजीले भन्नुभयो** - हे देवर्षि! तपाईंले सत्य कुरा बताउनुभएको छ । तपाईंको कुरा सुनेपछि मैले पुराना कुरा सम्झें। मलाई पहिले नै श्रीगणेशले एकाक्षरी एउटा मन्त्र र षडक्षरी

षडक्षरैकाक्षरौ तौ सर्वसङ्कटहारकौ ।
युद्धे व्यासक्तचित्तेन न जप्तौ न च संस्मृतौ ।।२१।।

सर्वविघ्नहरो देवो न स्मृतो हि गजाननः ।
सर्वेषां कारणं कर्ता पाता हर्ता विनायकः ।।२२।।

मुनिरुवाच

तं तोषय महादेव ! महादेवं गजाननम् ।

ब्रह्मोवाच

विसृज्य नारदं देवो जगाम तपसे शिवः ।।२३।।

दण्डकारण्यदेशे तु पद्मासनस्थितोऽजपत् ।
प्रणिधाय बलात् खानि नियम्य ध्यानतत्परः ।।२४।।

सोऽतपत्तप उग्रं तु शतवर्षाणि शङ्करः ।
ततस्तस्य मुखाम्भोजान् निर्गतस्तु पुमान् परः ।।२५।।

पञ्चवक्त्रो दशभुजो ललाटेन्दुः शशिप्रभः ।
मुण्डमालः सर्पभूषो मुकुटाङ्गदभूषणः ।।२६।।

अग्न्यर्कशशिनो भाभिस्तिरस्कुर्वन् दशायुधः ।
तद्भासा धर्षितो देवोऽपश्यदुग्रं पुरःस्थितम् ।।२७।।

विनायकं पञ्चमुखं पञ्चास्यमपरं शिवम् ।
तं दृष्ट्वाऽतर्कयद् देवः किमहं द्विविधोऽभवम् ।।२८।।

किं वा ममैव रूपेण त्रिपुरोऽयमिहागतः ।
त्रयस्त्रिंशत्कोटिदेवेष्वपरः पञ्चवक्त्रवान् ।।२९।।

अथवा स्वप्न एवायं दृष्टो दीर्घतरो मया ।
अथवा मे वरं दातुमागतोऽयं गजाननः ।।३०।।

सर्वविघ्नहरं देवं यं ध्यायामि दिवानिशम् ।

ब्रह्मोवाच

एवमाकर्ण्य तद्वाक्यमुवाच द्विरदाननः ।।३१।।

अर्को मन्त्र गरी दुई प्रकारका सङ्कटनाशक मन्त्रको उपदेश गर्नुभएको थियो । त्रिपुरासुरसँग कसरी युद्ध गर्ने भनी चिन्ताका कारण मैले ती दुबै प्रकारका मन्त्रहरूको संस्मरण र जप गरिन। सबैका कारण, कर्ता, पालक, संहारक, विनायक एवं गजाननका नामबाट विख्यात र सबै प्रकारका विघ्नहरूको विनाश गर्ने श्रीगणेश भगवान्को मैले संझना पनि गरिनँ ।।२०-२२।।

नारदले भने – हे महादेव ! तपाईंले ठूला देवता श्रीगणेशको आराधना गरेर उहाँलाई सन्तुष्ट र प्रसन्न तुल्याउनुहोस्।

ब्रह्माजीले भन्नुभयो – हे वेदव्यास ! नारदजीलाई बिदा गरेपछि सदाशिवजी दण्डकारण्य वनमा गई पद्मासन कसी मन्त्रजपमा लीन हुनुभयो । इन्द्रियलाई आफ्नो नियन्त्रणमा लिएर भगवान् श्रीगणेशको ध्यान गर्दै शिवजीले सय वर्षसम्म उग्र तपस्या गर्नुभयो । त्यसपछि उहाँका मुखकमलबाट पाँच मुख र दश हात भएका, निधारमा चन्द्रमा धारण गर्ने, चन्द्रमासमान कान्तिले सुहाएका, मानिसका टाउकाको माला लगाएका, गहनाको रूपमा सर्पलाई धारण गर्ने, मुकुट र केयूरद्वारा शोभायमान, आफ्नो कान्तिले सूर्य-चन्द्रमा र अग्निलाई पनि हतप्रभ तुल्याउने र दश हातमा दश प्रकारका आयुध धारण गर्ने अद्वितीय पुरुष पैदा भए। ती पुरुषका तेजबाट कान्तिहीन बन्नुभएका शिवजीले आफ्नै अगाडि उग्र तेजले बलिरहेका पञ्चमुख भगवान् श्रीगणेशको दर्शन गर्नुभयो। साथै उहाँले पञ्चमुख महादेवको पनि दर्शन गर्नुभयो । यो दृश्य देखेर शिवजीका मनमा तर्क उठ्यो – के संसारमा शिवजी दुइटा छन्? एउटा शिवजी म यहाँ हुँदाहुँदै अर्को शिवजी कताबाट आइपुगे? अथवा त्रिपुरासुरले नै मेरो रूप लिएर मलाई भ्रान्तिमा पार्न लागेको हो कि ? तैँत्तीस कोटि देवताहरूमा मबाहेक अर्को पाँच मुख भएको देवता छैन भने आज मैले के देख्नुपर्‍यो ? ।।२३-२९।। अथवा म सपना देखिरहेको छु कि ? अथवा जुन सम्पूर्ण विघ्नका नाशक देवताको म अहोरात्र ध्यान गरिरहेको छु उहाँ गजानन श्रीगणेश प्रभु नै मलाई वर प्रदान गर्न आउनुभएको हो कि ?

ब्रह्माजीले भन्नुभयो – शिवजीका यी तर्क-वितर्कमय वचन सुनेर श्रीगणेशले उहाँलाई भन्नुभयो – 'हे शिवजी !

अन्तर्यस्तर्कितो देवः सोऽयं विघ्नहरो विभुः ।
न मे स्वरूपं जानन्ति देवर्षिचतुराननः ।।३२।।

न वेदाः सोपनिषदः कुतः षट्शास्त्रवेदिनः ।
अशेषभुवनस्याहं कर्ता पाताऽपहारकः ।।३३।।

ब्रह्मादिस्थावरचरत्रिगुणानामहं प्रभुः ।
तपसाऽनेन तुष्टोऽहं वरं दातुमिहागतः ।।३४।।

वरान् वृणु महादेव ! यावतो मत्त इच्छसि ।।३५।।

तपाईंले मनमनै धेरै तर्क-वितर्क गर्नुभयो । अरू केही पनि होइन । जुन स्वरूप देख्नुभयो त्यो म सर्वव्यापक श्रीगणेश नै हुँ । मेरो स्वरूपलाई देवता, ऋषि र ब्रह्माजीले पनि राम्ररी जान्दैनन् ।।३०-३२।। उपनिषत्सहित वेदले पनि मलाई जान्दैनन्, षड्दर्शनका ज्ञाताहरूले मलाई कसरी जानून् ? म सम्पूर्ण संसारको कर्ता, पालक, संहारक देवता हुँ । ब्रह्माजीदेखि लिएर चराचरलगायत सत्त्व, रज र तमोगुणको पनि म अधिपति हुँ । हे शिवजी ! तपाईंको यस तपस्याबाट म सन्तुष्ट भएको छु । तपाईंले चिताएको वर दिन यहाँ उपस्थित भएको छु । हे महादेव ! तपाईं जे चाहनुहुन्छ, त्यो माग्नुहोस् । म दिन तयार छु ।।३३-३५।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे तपोवर्णनं नाम चतुश्चत्वारिंशोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'श्रीशङ्करद्वारा श्रीगणेशको आराधना, श्रीगणेशदर्शन र वरप्राप्ति' शीर्षकान्वित चौवालीसौं अध्याय पूर्ण भयो ।।४४।।

ॐ

## पञ्चचत्वारिंशोऽध्याय: { ४५ अध्याय }

मुनिरुवाच
ततः प्रसन्ने विघ्नेशे देवेशे विघ्नहारिणि ।
वरान् दित्सति शर्वाय किं किं वव्रे सदाशिवः ।।१।।
ब्रह्मोवाच
गणेशवचनं श्रुत्वा शिवो वाक्यमथाऽब्रवीत् ।
स्मृत्वा गजाननं तं तु स्वस्वरूपं वरप्रदम् ।।२।।
शिव उवाच
दशापि नेत्राणि ममाद्य धन्या-
न्यथो भुजाः पूजनतस्तवाद्य।
तवानतेः पञ्च शिरांसि धन्या-
न्यथ स्तुतेः पञ्चमुखानि देव !।।३।।
पृथ्वी जलं वायुरथो दिशश्च
तेजश्च कालः कलनात्मकोऽपि ।
नभो रसो रूपमथापि गन्धः
स्पर्शश्च शब्दो मन इन्द्रियाणि।।४।।
गन्धर्वयक्षाः पितरो मनुष्याः
देवर्षयो देवगणाश्च सर्वे।
ब्रह्मेन्द्ररुद्रा वसवोऽथ साध्याः
त्वत्तः प्रसूताः सचराचराश्च।।५।।
सृजस्यदो विश्वमनन्यबुद्धे !
रजोगुणात् पासि समस्तमेतत्।
तमोगुणात् संहरसे गुणेश !
नित्यो निरीहोऽखिलकर्मसाक्षी।।६।।
ब्रह्मोवाच
ततोऽहमब्रुवं देवं गणेशं तं शिवाज्ञया ।
नाम चाकरवं तस्य यत् तच्छृणु महामते ।।७।।
त्वन्नाम बीजं प्रथमं मातृकाणा-
मोङ्काररूपं श्रुतिमूलभूतम्।
यतो गणानां त्वमसीह ईशो
गणेश इत्येव तवास्तु नाम ।।८।।
ओमित्यथोक्ते गणनायकेन
तुतोष शर्वः प्रददौ वरांश्च।
यः सर्वकार्येषु तवेश ! कुर्यात्
स्मृतिं तदन्ते स लभेदविघ्नम् ।।९।।

**नारदले भने** - हे कमलासन ! देवताहरूका स्वामी विघ्नहर्ता श्रीगणेश प्रसन्न भएर शिवजीलाई वरदान दिन लाग्नुहुँदा उहाँले के के वर माग्नुभयो ? ।।१।।

**ब्रह्माजीले भन्नुभयो** - श्रीगणेशका वचन सुनेर शिवजीले आफ्नै स्वरूपमा रहनुभएका पञ्चमुख, वरदायक गजाननलाई सम्झेर भन्नुभयो - हे श्रीगणेश ! आज तपाईँको पूजा गरेर मेरा दश आँखा र दश हात धन्य भएका छन् । तपाईँलाई प्रणाम गर्दा मेरा पाँचै शिर धन्य भएका छन् र पाँचै मुख पनि । हे श्रीगणेश ! पृथिवी, जल, वायु, दिशा, विदिशा, तेज, काल, आकाश, रस, रूप,गन्ध, स्पर्श, शब्द, मन, इन्द्रियहरू, गन्धर्व, यक्ष, किन्नर, मानिस, देवर्षि, देवता, ब्रह्मा, इन्द्र, रुद्र, वसु, साध्य र चराचरसहित दृष्टिमा आएका सबै पदार्थ हजुरबाट उत्पन्न भएका हुन् । हे श्रीगणेश ! हजुरले यस विश्वको रजोगुणबाट रचना गर्नुहुन्छ, सत्त्वगुणबाट पालन गर्नुहुन्छ र तमोगुणबाट संहार गर्नुहुन्छ । हे गुणका स्वामी श्रीगणेश ! हजुर नित्य हुनुहुन्छ, निरीह हुनुहुन्छ र सम्पूर्ण कर्मका साक्षी पनि हुनुहुन्छ ।।२-६।।

**ब्रह्माजीले भन्नुभयो** - त्यसपछि मैले शिवजीको आज्ञा पाएर श्रीगणेशलाई थाहा दिई उहाँको नाम राखें । हे बुद्धिमान् व्यास ! ती नामहरूले तिमीले सुन । मैले भनेको थिएँ - 'हे श्रीगणेश ! हजुरको नाम मातृकाहरूको प्रथमबीज हो र यो वेदको आदिकारण ॐकारको रूपमा रहेको छ । हे श्रीगणेश ! हजुर गणका स्वामी हुनुहुन्छ, त्यस कारण हजुरको नाम श्रीगणेश रहनेछ ।' श्रीगणेशले स्वीकृति दिनुभएपछि शिवजीले उहाँको स्तुति गर्नुभयो र उहाँलाई वरदान दिनुभयो- हे श्रीगणेश ! सबै कार्यको आरम्भमा जसले हजुरको संझना गर्दछ, त्यसले कार्यको अन्तसम्म कुनै विघ्न व्यहोर्नुपर्ने छैन। कुनै साधकले श्रीगणेशको स्मरण नगरीकन कुनै पनि कार्य आरम्भ गर्दछ भने त्यसका कामनाहरूको सिद्धि हुँदैन, त्यो चाहे कृमि र कीट नै किन नहोस् अर्थात् सबैले कार्यारम्भमा श्रीगणेशको संझना गर्नुपर्दछ। शैव, वैष्णव, शाक्त, सौर, गाणपत

विना स्मृतिं ते न लभेच्च कोऽपि
वाञ्छार्थसिद्धिं कृमिकीटकोऽपि ।
शैवैस्त्वदीयैरथ वैष्णवैश्च
शाक्तैश्च सौरैरथ सर्वकार्ये ।।१०।।
शुभाशुभे वैदिकलौकिके वा
त्वमर्चनीयः प्रथमं प्रयत्नात् ।
यन्मङ्गलं सर्वजनेषु देव !
सयक्षविद्याधरपन्नगेषु ।।११।।
तस्येश्वरो मङ्गलमूर्तितां त्वं
ततो यतो मङ्गलकृत् स्वभक्ते ।
अहं पुराऽनर्चयतस्तवेश !
त्वय्यस्मृतेर्दैत्यवरस्य युद्धे ।।१२।।
अवन्दनाच्चाप पराभवं तं
ततस्तवाङ्घ्रिं शरणं प्रपन्नः ।
क्षमापराधं मम सर्वशक्ते !
जयं प्रयच्छाखिलजन्यकाले ।।१३।।
ये सर्वथा त्वां न भजन्ति देव !
जडा दरिद्राः प्रभवन्तु तेऽपि ।
भजन्ति ते भक्तियुता मनुष्याः
प्राप्स्यन्ति सिद्धिं निखिलार्थदात्रीम् ।।१४।।
क उवाच
इत्थं निशम्याखिलवाक्यसार-
वेत्ताऽवदद् वाक्यमिदं गिरीशम् ।
यदा यदा मे स्मरणं विदध्या-
स्तदाऽन्तिकं तेऽहमियामुमेश ।।१५।।
मन्नामबीजेन निमन्त्र्यैकं
बाणं तु तेनैव पुरत्रयं तत् ।
निपातयास्मन्महसा महेश !
कृत्वा स दैत्यं खलु भस्मसात् त्वम् ।।१६।।
ततः स्वनाम्नामवदत् सहस्रं
गणाधिपोऽस्मै प्रणताय सम्यक् ।
शिवाय भक्त्या परितुष्टचित्तो
जयप्रदं कामकरं जनानाम् ।।१७।।
उवाच चैनं रणकाल एतत्
पठस्व दैत्यान् विनिहंसि शीघ्रम् ।
त्रिसन्ध्यमेतस्य जपान्नराणां
सिध्यन्ति कामाः सकला अभीष्टाः।।१८।।

यी सबै सम्प्रदायका आराधकहरूले सबै प्रकारका शुभ अथवा अशुभ, वैदिक अथवा लौकिक कार्यहरू आरम्भ गर्दा सर्वप्रथम हजुरको आराधना–अर्चना गर्नुपर्दछ । हे श्रीगणेश ! सबै मानिसहरूमा जुन मङ्गल छ, यक्ष, विद्याधर र नागहरूमा जुन मङ्गल छ, ती सबै मङ्गलका ईश्वर हजुर मङ्गलमूर्ति हुनुहुन्छ । किनकि हजुरले जहाँ रहे पनि, जस्तोसुकै अवस्थामा पनि जुन कुनै विधिबाट पनि आफ्ना भक्तहरूको मङ्गल गर्नुहुन्छ। हे श्रीगणेश ! मैले अघि हजुरको पूजा, संझना र बन्दना नगरीकन दैत्यका साथ युद्ध गर्न जाँदा पराजित हुनुपर्‍यो। तसर्थ अहिले म हजुरका चरणको शरणमा आएको छु । हे सर्वशक्तिमान् श्रीगणेश! मेरा अपराधलाई क्षमा गर्नुहोस् । मबाट गरिने सबै प्रकारका युद्धहरूमा मलाई बिजयी तुल्याउनुहोस् । जुन मानिसले कहिल्यै पनि हजुरको भजन गर्दैनन् ती मानिसहरू बुद्धिहीन र कंगाल हुनेछन् । जुन मानिसले भक्तिभावले हजुरको भजन गर्नेछन्, तिनले आफ्ना सम्पूर्ण कामना परिपूर्ण तुल्याउने सिद्धि प्राप्त गर्नेछन् ।।७-१४।।

**ब्रह्माजीले भन्नुभयो** – सदाशिवजीका यी कुरा सुनेर सम्पूर्ण शास्त्रका मर्मज्ञ श्रीगणेशले शिवजीप्रति भन्नुभयो – हे पार्वतीपति परमेश्वर ! तपाईंले जब जब मेरो संझना गर्नुहुन्छ, तब तब म हजुरको समीपमा हुनेछु ।।१५।। मेरो नामको बीजले एउटा बाणलाई अभिमन्त्रित गरेर हजुरले त्रिपुरमा प्रहार गर्नुहोस् र त्यसैबाट फलाम, चाँदी र सुनले बनेको त्यो त्रिपुरलाई भुइँमा खसाउनुहोस् । हे महेश ! मेरो तेजबाट हजुरले त्रिपुरलाई खसाउनुभएपछि त्यस दैत्यलाई हजुरले खरानी तुल्याउनु हुनेछ।।१६।। त्यसपछि श्रीगणेशले शिवजीलाई श्रीगणेशसहस्रनाम सुनाउनुभयो । भक्तिद्वारा प्रसन्न हुनुभएका श्रीगणेशले सुनाउनुभएको श्रीगणेशसहस्रनाम विजयदायक र कामनापूरक पनि छ ।।१७।। श्रीगणेशले शिवजीलाई भन्नुभयो- हे शिवजी ! हजुरले युद्धको आरम्भमा यो श्रीगणेशसहस्रनामको जप गर्नुहोस् र त्यसबाट हजुरले तुरुन्त दैत्यहरूलाई मार्नुहुनेछ । बिहान, दिउँसो र साँझ श्रीगणेशसहस्रनामको जप गर्नाले मानिसले चिताएका सम्पूर्ण कामनाहरू पूर्ण हुन्छन् ।।१८।।

श्रुत्वा तु वाक्यं द्विरदाननस्य,
तं पूज्य सम्यक् शिव उज्जहर्ष ।
संस्थापयामास महागणेशं
प्रासादमुच्चैर्दृढमाशु चक्रे ।।१९।।
सन्तर्प्य देवान् मुनिसिद्धसङ्घान्
दानादि दत्वा द्विजपुङ्गवेभ्यः ।
पुनश्च सम्पूज्य नमश्चकार
देवं गिरीशो वरदं गणेशम् ।।२०।।
उवाच सर्वान् मणिपूरियं तु
विख्यातिमागच्छतु सर्वलोके ।
देवेन सर्वैश्च तथोदितैस्तै-
रन्तर्दधुस्ते गणनाथमुख्या ।।२१।।
अन्तर्हिते मुनिगणे ससुरे गणेशे
शर्वोऽप्यगात् स्वनिलयं स्वगणैरुपेतः ।
गन्धर्वयक्षनिवहैरमराङ्गनाभि-
र्वृत्तं निजं परमुदा गिरिजामुवाच ।।२२।।
श्रुत्वा तदाऽमृतवचः सकलं गिरीशाद्
देवेश्वरा मुमुदिरे मुनयः सदाराः ।
योगीश्वराश्च निहतं त्रिपुरं सधिष्ण्य-
ममंसताप्यधिगतं गिरिशप्रसादात्।।२३।।

श्रीगणेशका यो वचन सुनेर शिवजीले उहाँको पूजा गर्नुभयो र प्रसन्न हुनुभयो। त्यसपछि सदाशिवजीले श्रद्धापूर्वक त्यहाँ अत्यन्त अग्लो, फराकिलो र साह्रै बलियो महागणेशको मन्दिर निर्माण गर्नुभयो।।१९।। त्यसै प्रसङ्गमा शिवजीले देवता, मुनि र सिद्धहरूलाई तृप्त गराउनुभयो। उत्तम ब्राह्मणहरूलाई दान दिएपछि वरद श्रीगणेशको पूजा गरी नमस्कार गर्नुभयो ।।२०।। फेरि शिवजीले सबैलाई भन्नुभयो - यो मणिपूर हो र यसै नामबाट यो मन्दिर संसारमा प्रख्यात हुनेछ । त्यसपछि सम्पूर्ण देवताहरूका साथमा श्रीगणेश र उहाँका गणहरू पनि अन्तर्धान हुनुभयो ।।२१।। मुनि, देवता र श्रीगणेशसमेत अन्तर्धान हुनुभएपछि शिवजी पनि आफ्ना गणका साथ कैलासतर्फ जानुभयो। गन्धर्व, यक्ष र अप्सराहरूका साथ कैलासमा पुगेपछि शिवजीले हर्षपूर्वक पार्वतीलाई सबै कुरा सुनाउनुभयो ।।२२।। शिवजीका कुरा सुनेर त्यहाँ रहेका देवता र सपत्नीक ऋषिहरूसमेत प्रसन्न भए । योगीश्वरहरूले पनि अब त्रिपुरासुर मर्नेछ र हाम्रा धाम पनि शिवजीको कृपाबाट हातमा आउनेछन् भन्ने पूर्वानुमान गरे।।२३।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे श्रीगणेशसहस्त्रनाममहिमनिरूपणं नाम पञ्चचत्वारिंशोऽध्यायः

प्रा.डा. वेणीमाधव बकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'श्रीगणेशद्वारा शङ्करसमक्ष श्रीगणेशसहस्त्रनाममहिमा प्रकाशन' शीर्षकान्वित पैंतालीसौं अध्याय पूर्ण भयो ।।४५।।

ॐ

## षट्चत्वारिंशोऽध्यायः { ४६ अध्याय }

व्यास उवाच

कथं नाम्नां सहस्त्रं स्वं गणेश उपदिष्टवान् ।
शिवायैतन्ममाचक्ष्व लोकानुग्रहतत्पर ।।१।।

ब्रह्मोवाच

देव एवं पुरारातिः पुरत्रयजयोद्यमे ।
अनर्चनाद् गणेशस्य जातो विघ्नाकुलः किल ।।२।।
मनसा स विनिर्धार्य यतस्तद्विघ्नकारणम् ।
महागणपतिं भक्त्या समभ्यर्च्य यथाविधि ।।३।।
विघ्नप्रशमनोपायमपृच्छदपराजितः ।
सन्तुष्टः पूजया शम्भोर्महागणपतिः स्वयम् ।।४।।
सर्वविघ्नैकहरणं सर्वकामफलप्रदम् ।
ततस्तस्मै स्वकं नाम्नां सहस्त्रमिदमब्रवीत् ।।५।।

अस्य श्रीमहागणपतिसहस्त्रनामस्तोत्रमालामन्त्रस्य । गणेश ऋषिः। महागणपतिर्देवता। नानाविधानिच्छन्दांसि। गमिति बीजम् । तुण्डमिति शक्तिः। स्वाहा कीलकम्। सकलविघ्ननाशनद्वारा महागणपतिप्रीत्यर्थं जपे विनियोगः। अथ न्यासाः - गणेश्वरो गणक्रीड इत्यङ्गुष्ठाभ्यां नमः, कुमारगुरुरीशान इति तर्जनीभ्यां नमः, ब्रह्माण्डकुम्भश्चिद्व्योमेति मध्यमाभ्यां नमः, रक्तो रक्ताम्बरधर इत्यनामिकाभ्यां नमः, सर्वसद्गुरुसंसेव्य इति कनिष्ठिकाभ्यां नमः, लुप्तविघ्नः स्वभक्तानामिति करतलपृष्ठाभ्यां नमः। अथ हृदयादिन्यासाः - छन्दश्छन्दोवपुरिति हृदयाय नमः, निष्कलो निर्मल इति शिरसे स्वाहा, सृष्टिस्थितिलयक्रीड इति शिखायै वषट्, ज्ञानं विज्ञानमानन्द इति कवचाय हुम्, अष्टाङ्गयोगफलभृदिति नेत्रत्रयाय वौषट्, अनन्तशक्तिसहित इत्यस्त्राय फट्। अथ ध्यानम् -

रक्ताम्भोधिस्थपोतोल्लसदरुणसरोजाधिरूढं त्रिनेत्रम्,
पाशं चैवाङ्कुशाख्यं परशुमभयदं बाहुभिर्धारयन्तम्।
शक्त्या युक्तं गजास्यं पृथुतरजठरं सिद्धिबुद्धीसमेतम्,
रक्तं चन्द्रार्धमौलिं सकलभयहरं विघ्नराजं नमामि ।।

'श्रीसिद्धिबुद्धिसहिताय सलक्षलाभाय श्रीस्वानन्ददेशाय ब्रह्मणस्पतये साङ्गाय सपरिवाराय सशक्तिकाय सायुधाय सवाहनाय सवारणाय नमः' इति नाममन्त्रेण मानसैः पञ्चोपचारैः सम्पूज्य पठेत् ।

**व्यासले भन्नुभयो-** लोककल्याणमा तत्पर हे कमलासन! श्रीगणेशले शिवजीलाई कस्तो किसिमको श्रीगणेशसहस्रनामको उपदेश गर्नुभयो ? त्यो मलाई सुनाउनुहोस् ।।१।। **ब्रह्माजीले भन्नुभयो -** भगवान् शङ्कर त्रिपुरमाथि विजय गर्ने युद्धाभियानमा श्रीगणेशको पूजा नगरेका कारण पराजय भोग्नुपर्दा विघ्नले व्याकुल हुनुभयो। मनबाट मैले श्रीगणेशपूजा नगरेका कारण विघ्न आइलाग्यो भन्ने कुरा ठम्याएर विधिपूर्वक र भक्तिपूर्वक महागणपतिको अर्चना गरी विघ्ननाश गर्ने उपायबारे सोध्नी गर्नुभयो। त्यसपछि शिवजीले गर्नुभएको पूजाबाट सन्तुष्ट हुनुभएका अपराजित भगवान् श्रीगणेशले सर्वविघ्नविनाशक, सर्वकामनापूरक श्रीगणेशसहस्रनाम उहाँलाई बताउँदै यसरी भन्नुभयो।।२-५।। **विनियोग- ऋषि-** यस श्रीमहागणपतिसहस्रनाम मालामन्त्रका ऋषि **श्रीगणेश** हुनुहुन्छ। **देवता-** यस सहस्रनामका देवता **महागणपति** हुनुहुन्छ। **छन्द-** यो सहस्रनाम **अनेक छन्दमा** रचिएको छ। **बीजमन्त्र-** श्रीगणेश-सहस्रनामको बीजमन्त्र - **गम्** हो । **शक्ति-** श्रीगणेश-सहस्रनामको शक्ति **तुण्डम्** हो। **कीलक-** श्रीगणेश-सहस्रनामको कीलक **स्वाहा** हो । **प्रयोजन-** सम्पूर्ण विघ्ननाशद्वारा **महागणपतिको प्रीति** प्रयोजन हो। उक्त प्रयोजनका लागि श्रीगणेश-सहस्रनाम महामन्त्रको विनियोग गरिन्छ । **न्यास -** गणेश्वर, गणक्रीड नामको उच्चारण गर्दै बूढी औंलाहरूमा, कुमारगुरु, ईशान यी दुई नाम मन्त्रबाट तर्जनीहरूमा, ब्रह्माण्डकुम्भ, चिद्व्योमभाल यी नामबाट मध्यमा-हरूमा, रक्त, रक्ताम्बरधर यी नामबाट अनामिकाहरूमा, सर्वसद्गुरु-संसेव्य यस नामबाट कनिष्ठाहरूमा र लुप्तविघ्नस्वभक्तानां यस नाम मन्त्रबाट करतलपृष्ठमा न्यास गर्नुपर्दछ। **हृदयन्यास-** छन्द, छन्दोमयवपु यी नामबाट हृदयमा, निष्कल, निर्मलदेव यी नामबाट शिरमा, सृष्टिस्थितिलयक्रीड यस नामबाट शिखामा, ज्ञान, विज्ञान, आनन्द यी नामबाट कवचमुद्रा गरी छातीमा, अष्टाङ्गयोगफलभृत् यस नामबाट आँखामा स्पर्श गर्नुपर्दछ । **ध्यान -** 'रातो वर्णको महासागरमा शोभायमान, नौकाकार मण्डपमा फुलिरहेको रातो कमलमाथि विराजमान, त्रिनयन, आफ्ना हातहरूमा पाश, अङ्कुश, परशु र अभयमुद्रा धारण गर्नुहुने, गजानन, शक्तिसहित विराजमान, विशाल पेटले सुहाउनुभएका, सिद्धि एवं बुद्धिद्वारा आराधित, आफ्नो दिव्यदेहमा रातो कान्ति फैलिनाले देदीप्यमान, शिरमा अर्धचन्द्र धारण गर्नुहुने, सबै भक्तका भय निवारण गर्नुहुने भगवान् श्रीगणेशलाई म भक्तिपूर्वक प्रणाम गर्दछु ।' सिद्धिबुद्धिसम्पन्न, क्षेम र लाभले सहित, स्वानन्दभुवनमा विराजमान, साङ्ग, सपरिवार, सायुध, सवाहन, सगजराज, ब्रह्मणस्पति यी नाममन्त्रले अथवा मानस रूपबाट पञ्चोपचारले पूजा गरेपछि श्रीगणेशसहस्रनाम पाठ गर्नुपर्दछ।

महागणपतिरुवाच

ॐ गणेश्वरो गणक्रीडो
गणनाथो गणाधिपः ।
एकदंष्ट्रो वक्रतुण्डो
गजवक्त्रो महोदरः ।।
।।६।।

लम्बोदरो धूम्रवर्णो
विकटो विघ्ननायकः ।
सुमुखो दुर्मुखो बुद्धो
विघ्नराजो गजाननः ।।
।।७।।

भीमः प्रमोद आमोदः
सुरानन्दो मदोत्कटः ।
हेरम्बः शंवरः शम्भु-
र्लम्बकर्णो महाबलः ।।
।।८।।

नन्दनोऽलम्पटोऽभीरु-
र्मेघनादो गणञ्जयः ।
विनायको विरूपाक्षो
धीरशूरो वरप्रदः ।।
।।९।।

महागणपतिर्बुद्धि-
प्रियः क्षिप्रप्रसादनः ।
रुद्रप्रियो गणाध्यक्ष
उमापुत्रोऽघनाशनः ।।
।।१०।।

**महागणपतिले भन्नुभयो - गणेश्वरः** - आकाशादि प्रपञ्चरूप गणका स्वामी अथवा आकाशादि प्रपञ्चरूप श्रीगणेश परमात्मा, **गणक्रीडः**- आकाशादि पञ्चमहाभूतरूप गणभित्र रहेर क्रीडा गर्ने, **गणनाथः** - जसका गुणहरूको गणना मङ्गलदायक हुन्छ, **गणाधिपः** - आदित्य विश्वावसुदेखि रुद्रसम्मका गणदेवताहरूका अधिपति, **एकदंष्ट्रः**- एउटा धारा धारण गरी पृथिवीका उद्धारक, **वक्रतुण्डः** - बाङ्गो आकारको सूँढ धारण गर्ने, **गजवक्त्रः**- हात्तीको जस्तो मुख भएका, **महोदरः** - उदरभित्र अनन्तकोटि ब्रह्माण्ड धारण गर्ने ।।६।। **लम्बोदरः** - जसको कुक्षि (कोख) अनेक ब्रह्माण्डहरूको आधार बनेर रहेको छ, **धूम्रवर्णः** – वायुको बीज धूम्रवर्णलाई आत्मसात् गर्ने, **विकटः**- मायाद्वारा अनावृत, **विघ्ननायकः** - विघ्नहरूका स्वामी अथवा भक्तिरहित र उपद्रव गर्ने प्राणीहरूलाई दण्ड दिने अथवा भक्त मानिसहरूका विघ्नहरू हटाउने, **सुमुखः** - जसको नाम लिएर गरिने कार्यारम्भ मङ्गलजनक हुन्छ अथवा जसको अनुहार आकर्षक र आह्लादक छ, **दुर्मुखः** – अग्निरूप र सूर्यरूप जसको मुख आफ्नो अतिशय तेजका कारण दुःस्पर्श र दुर्दर्श छ अथवा अभक्तहरूद्वारा स्पर्श र दर्शन गर्न नसकिने स्वरूपले सम्पन्न, **बुद्धः**- नित्य बुद्धस्वरूप भएका कारण अविद्यावृत्तिका नाशक अथवा बुद्धको रूप लिएर अवतीर्ण हुने, **विघ्नराजः** - विघ्नहरूका राजा अथवा भक्तहरूका अधीन रही विघ्ननिवारण गर्ने, **गजाननः**- जीवहरूलाई प्राणतत्त्व प्रदान गरी जीवित बनाएर कर्मक्षेत्रमा लगाउने।।७।। **भीमः** - दुष्टलाई भय प्रदान गर्ने, **प्रमोदः** - आफ्नो अभीष्ट पदार्थ प्राप्तिमा उत्पन्न हुने सुखरूप प्रमोदतत्त्वका स्वामी, **आमोदः**- आफूले गरेका लौकिक, धार्मिक र पारमार्थिक प्रयासबाट प्राप्त हुने भोगसुखका स्वामी, **सुरानन्दः**- भोगसम्बन्धी सुखप्रति हुने आसक्ति हटाएर आत्माको प्राप्तिमा तत्पर रहेका साधकले प्राप्त गर्ने आत्मानन्दस्वरूप, **मदोत्कटः**- मायाको आवरणलाई हटाउने, **हेरम्बः** - अपरिमित शौर्यका स्वामी अथवा दीनदुःखीहरूका पालक, **शंवरः** – आत्माको सुखलाई नै उत्तम सुख मानी त्यसैमा रमाउने, **शम्भुः** - अनन्त सुखका स्रोतहरू प्रवाहित गर्ने, **लम्बकर्णः**- आफ्ना भक्तहरूले नजिक अथवा टाढाबाट गरेको प्रार्थना, पुकार र स्तुतिलाई जहाँ रहेर पनि श्रवण गर्ने, **महाबलः** - अत्यन्त पराक्रमी दैत्यहरूलाई आफ्नो शक्तिबाट परास्त गर्ने अथवा जसको शक्ति र बलको तुलना कसैसँग हुन सक्दैन ।।८।। **नन्दनः** - आफ्ना भक्तहरूलाई ऐश्वर्यसुख प्रदान गरी आनन्दित तुल्याउने, **अलम्पटः** - सबैका अलङ्कारस्वरूप भइरहनुहुने अथवा विषयमा अनासक्त, **अभीरुः**- निर्भयरूपमा रहनुहुने अथवा मायारूप नारीको संसर्गबाट रहित भई प्रकाशमान, **मेघनादः** - बादलझैं गर्जन गर्ने अथवा अज्ञानका बादलहरूलाई चिरेर चारैतिर ज्ञानको प्रकाश छर्ने, **गणञ्जयः**- शत्रु समूहलाई एउटै प्रहारबाट समाप्त गर्ने, **विनायकः**- सम्पूर्ण जीवहरूका नायकका रूपमा विराजमान, **विरूपाक्षः**- अग्नि, सूर्य र चन्द्रमा जस्ता एक-अर्कासँग आकार-प्रकारमा अन्तर भएका तैजसतत्त्वहरूलाई आँखा बनाई उपयोग गर्नुहुने, **धीरशूरः**- धैर्य र शौर्यका स्वामी, **वरप्रदः**- आफ्ना चरणकमलको सेवा गर्ने भक्तहरूलाई उनले चिताएअनुसारका वर प्रदान गर्नुहुने ।।९।। **महागणपतिः**- सबै गणहरूका स्वामी, **बुद्धिप्रियः**- भक्तहरूका संशयहरूलाई छेदन गर्ने ज्ञानी परमात्मा, **क्षिप्रप्रसादनः**- भक्तहरूले ध्यान गर्दा अतिशीघ्र प्रसन्न भई फल प्रदान गर्ने, **रुद्रप्रियः**- एघार रुद्रहरूका प्यारा, **गणाध्यक्षः**-सृष्टिमा रहेका छत्तीस तत्त्वहरूको समुदायका रक्षक, **उमापुत्रः**- पार्वतीका पुत्र अथवा आफ्नो दर्शन र ज्ञान प्रदान गरी पार्वतीको उद्धार गर्ने, **अघनाशनः** - पाप-नाशक।।१०।।

कुमारगुरुरीशान-
पुत्रो मूषकवाहनः ।
सिद्धिप्रियः सिद्धिपतिः
सिद्धः सिद्धिविनायकः ।।
।।११।।

अविघ्नस्तुम्बुरुः सिंह-
वाहनो मोहिनीप्रियः ।
कटङ्कटो राजपुत्रः
शालकः सम्मितोऽमितः ।।
।।१२।।

कूष्माण्डसामसम्भूति-
र्दुर्जयो धूर्जयो जयः ।
भूपतिर्भुवनपति-
र्भूतानां पतिरव्ययः ।।
।।१३।।

विश्वकर्ता विश्वमुखो
विश्वरूपो निधिर्घृणिः ।
कविः कवीनामृषभो
ब्रह्मण्यो ब्रह्मणस्पतिः ।।
।।१४।।

ज्येष्ठराजो निधिपति-
र्निधिप्रियपतिप्रियः ।
हिरण्मयपुरान्तस्थः
सूर्यमण्डलमध्यगः ।।
।।१५।।

**कुमारगुरुः**- सनत्कुमारका रूपमा रहेर ब्रह्मविद्याको उपदेश गर्ने अथवा सबभन्दा पहिले अवतीर्ण भएका कारण स्कन्दका पनि दाजु, **ईशानपुत्रः** - शिवजीका छोरा, **मूषकवाहनः** - छुचुन्द्रोलाई वाहन बनाउने, **सिद्धिप्रियः** - अणिमा, महिमा, लघिमा आदि अष्टसिद्धिलाई प्यारो गर्ने अथवा सिद्धिनामक पत्नीका प्यारा, **सिद्धिपतिः**- अणिमा आदि सिद्धिहरूका स्वामी, **सिद्धः**- संसारमा मत्स्येन्द्रनाथ, गोरखनाथ आदि सिद्धहरूका रूपमा अवतार लिएर लोकका उपकारक, **सिद्धिविनायकः** - भक्तहरूको भक्ति सिद्ध हुँदा तिनीहरूको उद्धार गर्ने ।।११।। **अविघ्नः** - पशुरूप जीवहरूको पशुतारूप अविद्याका नाशक अथवा विघ्नहरूलाई परास्त गरी निर्विघ्न आत्मरूपमा विराजमान, **तुम्बुरुः** - वीणावादकहरूद्वारा वीणावादन गरी स्तुति गरिने, **सिंहवाहनः** - युगभेदले मयूर, मूसो र घोडालाई वाहन बनाएझैं सिंहलाई पनि वाहनका रूपमा स्वीकार गर्ने अथवा सिंहवाहिनी गौरीका आत्मरूप सुपुत्र हुनाले सिंहवाहनका नामबाट प्रसिद्ध, **मोहिनीप्रियः** - मोहिनीश शिवजीका अभिन्न रूप, **कटङ्कटः**- उच्चतम ब्रह्मविद्याको ज्ञान दिएर आफ्ना भक्त शिष्यहरूको अज्ञान निवारण गर्ने, **राजपुत्रः** - वरेण्यनामक राजाका निमित्त पुत्रसमान आचरण गर्ने अथवा चन्द्रमालाई पुत्रसमान मानी पालन गर्ने, **शालकः**- जसको एक अंश पनि दृष्टिपथमा आउँदैन अथवा अतीन्द्रिय बनी शोभायमान हुने अन्तर्यामी, **सम्मितः** - श्रुतिप्रमाणअनुसार विश्वव्यापी भएतापनि बुढीऔँलाको परिमाणमा रही सबैको हृदयमा वास गर्ने, **अमितः**- अणु, स्थूल, ह्रस्व र दीर्घ यी चार प्रकारका परिमाणदेखि रहित ।।१२।। **कूष्माण्डसाम-सम्भूतिः**- 'कुष्माण्डोद्वारा हवन गर्नुपर्दछ' भन्ने विधिवाक्यका साधक प्रसिद्ध मन्त्रहरूलाई विभूतिका रूपमा स्वीकार गर्ने, **दुर्जयः** - बलवान् दैत्यहरूद्वारा मनबाट पनि जित्न नसकिने अपरिमित शक्तिसम्पन्न, **धूर्जयः** - स्वर्ग, मर्त्य र पाताल आदि लोकहरूको सृष्टि, पालन र संहारको भारलाई सजिलै वहन गर्ने, **जयः** - विजयका रूपमा देदीप्यमान अथवा महाभारत आदि वाङ्मयको आत्मतत्त्वका रूपमा विराजमान, **भूपतिः**- पृथिवीका स्वामी, **भुवनपतिः**- चौधै भुवनका स्वामी, **भूतानां पतिः**- सम्पूर्ण प्राणीहरूका स्वामी, **अव्ययः** - अविनाशी ।।१३।। **विश्वकर्ता**- संसारका रचयिता, **विश्वमुखः** - जसबाट विश्वको आरम्भ हुन्छ अथवा जसका मुखभित्र विश्वब्रह्माण्ड अटाउँछ, **विश्वरूपः**- विश्वप्रपञ्चका रूपमा प्रकाशमान, **निधिः**- पद्म, महापद्म, शङ्ख आदि निधिका रूपमा विराजमान, **घृणिः** - सूर्यका रूपमा प्रकाशमान, **कविः** - क्रान्तदर्शी अथवा काव्यका रचयिता, **कवीनाम् ऋषभः** - श्रुतिप्रमाणअनुसार वेदरूप महाकाव्यको प्रादुर्भाव गराउने महाकवि, **ब्रह्मण्यः**- ब्रह्मज्ञ ब्राह्मण, वेद, तपस्या र ब्रह्माजीका हितसाधक, **ब्रह्मणस्पतिः**- परा, पश्यन्ती, मध्यमा र वैखरीनामक ब्रह्मरूप वाणीका स्वामी ।।१४।। **ज्येष्ठराजः** - वैदिक ज्येष्ठसाममा देदीप्यमान अथवा संसारका आदिराज, **निधिपतिः**- निधिहरूका संरक्षक, **निधिप्रियपतिप्रियः**- कुबेर एवं कुबेरसमकक्ष निधिपतिहरूद्वारा उपासनीय, **हिरण्मय-पुरान्तःस्थः** - चिन्मय ब्रह्मको आधार मानिएका शरीरको मध्यवर्ती हृदयाकाशमा विराजमान, **सूर्यमण्डलमध्यगः** - सूर्यबिम्बको बीचमा ध्यान गरिने ।।१५।।

करहतिध्वस्तसिन्धु-
सलिलः पूषदन्तभित् ।
उमाङ्ककेलिकुतुकी
मुक्तिदः कुलपालनः ।।
।।१६।।

किरीटी कुण्डली हारी
वनमाली मनोमयः ।
वैमुख्यहतदैत्यश्रीः
पादाहतिजितक्षितिः ।।
।।१७।।

सद्योजातस्वर्णमुञ्ज-
मेखली दुर्निमित्तहृत् ।
दुःस्वप्नहृत् प्रसहनो
गुणी नादप्रतिष्ठितः ।।
।।१८।।

सुरूपःसर्वनेत्राधि-
वासो वीरासनाश्रयः ।
पीताम्बरः खण्डरदः
खण्डेन्दुकृतशेखरः ।।
।।१९।।

चित्राङ्कश्यामदशनो
भालचन्द्रश्चतुर्भुजः ।
योगाधिपस्तारकस्थः
पुरुषो गजकर्णकः ।।
।।२०।।

गणाधिराजो विजय-
स्थिरो गजपतिर्ध्वजी ।
देवदेवः स्मरप्राण-
दीपको वायुकीलकः ।।
।।२१।।

**कराहतिध्वस्तसिन्धुसलिलः** - आफ्ना सूँढको प्रहारबाट महासागरलाई रित्याउने, **पूषदन्तभिद्**- पूषाका दाँत भाँचिदिने वीरभद्ररूप, **उमाङ्ककेलिकुतुकी** - बालक-भाव र कौतुकका कारण जगदम्बा पार्वतीका काखमा क्रीडा गर्न चाहने, **मुक्तिदः** - भक्तहरूलाई बन्धनबाट मुक्त गर्ने अथवा भक्तहरूका मायापाश चुँडालेर तिनलाई मुक्तिसुख प्रदान गर्ने, **कुलपालनः** - आफ्नो वंश र कौलतन्त्रका संरक्षक।।१६।। **किरीटी**- मुकुटधारी अथवा अर्जुनका रूपमा अवतीर्ण, **कुण्डली**- कुण्डलधारी अथवा शेषनागका रूपमा अवतीर्ण, **हारी** - मोतीको माला धारण गर्ने अथवा अत्यन्त सुन्दर, **वनमाली**- घाँटीदेखि पाउसम्म वनमाला धारण गर्ने, **मनोमयः**- आफ्नो सङ्कल्पद्वारा कल्पित स्वरूपमा सुहाउने, **वैमुख्यहतदैत्यश्रीः** - आफ्ना प्रतिकूल दैत्यहरूको ऐश्वर्यनाश गर्ने, **पादाहतिजितक्षितिः** - आफ्नो चरणस्पर्शद्वारा पृथिवीलाई नम्र तुल्याउने ।।१७।। **सद्योजातस्वर्णमुञ्जमेखली** - भर्खरै तयार गरिएको स्वर्णिम कान्तिले सम्पन्न र मूँजले बनेको मेखला धारण गर्ने, **दुर्निमित्तहृत्**- मूर्तिभङ्ग, भूकम्प, उल्कापात आदि कारणहरूद्वारा सूचित अरिष्टहरूका नाशक, **दुःस्वप्नहृत्** - आफ्नो प्रभावबाट नराम्रा स्वप्नलाई पनि राम्रा तुल्याउने, **प्रसहनः** - भक्तहरूबाट जानी-नजानी गरिएका अपराधलाई क्षमा दिने, **गुणी**- निश्चिन्तता र आत्मशक्ति आदि गुणका आधार, **नादप्रतिष्ठितः** - ओङ्कारबिन्दुमा स्थित अर्धचन्द्रअन्तर्गत रहेको नादद्वारा वाच्य ।।१८।। **सुरूपः** - सर्वातिशायी सौन्दर्यका स्वामी अथवा सबैलाई वशीभूत गर्ने आनन्दमय ज्ञानका स्रोत, **सर्वनेत्राधिवासः** - 'आत्मतत्त्व सबैका आँखामा रहेको हुन्छ' भन्ने श्रुतिवाक्यअनुसार सबैका आँखामा आत्मरूपले प्रकाशमान, **वीरासनाश्रयः**- बायाँ घुँडामाथि दायाँ पाउ राख्दा निष्पन्न हुने वीरासनमा विराजमान, **पीताम्बरः** - संहारकालमा आकाशलाई पनि पिउने अथवा पहेँला वस्त्र धारण गर्ने, **खण्डरदः**- भाँचिएको दाँत धारण गर्ने, **खण्डेन्दुकृतशेखरः** - आफ्नो शिरमा अर्धचन्द्रमा धारण गर्ने ।।१९।। **चित्राङ्कश्यामदशनः** - नीलो आदि रङ्गका कारण रङ्गीन चित्रहरूद्वारा दाँत रंगाउने, **भालचन्द्रः** - आफ्नो निधारमा चन्द्रमा धारण गर्ने, **चतुर्भुजः**- अष्टमीको चन्द्रमाको आकारको निधार भएका र शरीरमा चार हात धारण गर्ने, **योगाधिपः** - लकुलीश आदि नामबाट प्रसिद्ध योगाचार्यहरूका रूपमा शोभायमान, **तारकस्थः** - प्रणवद्वारा वाच्य पुरुष, **पुरुषः** - सम्पूर्ण जीवहरूका दहराकाशमा साक्षीरूपले विराजमान, **गजकर्णकः** - हात्तीका जस्ता कानले शोभायमान।।२०।। **गणाधिराजः**- छन्दोमय काव्यमा रहेका म-आदि गणहरूका प्रवर्त्तक, **विजयस्थिरः** - भक्तहरूलाई विजय दिलाउने र धैर्यधारण गर्न उत्प्रेरित गर्ने, **गजपतिध्वजी** - आफ्नो ध्वजामा गजराजको चिह्न धारण गर्ने, **देवदेवः** - इन्द्र आदि देवताहरूका उपास्य, **स्मरप्राणदीपकः**- शिवजीको सरापबाट शरीर डढेका कामदेवका प्राणलाई पुनर्जीवन प्रदान गर्ने, **वायुकीलकः**- नौ वटा ढोकाले बनेको शरीरमा प्राणवायुलाई रोकेर राख्ने ।।२१।।

विपश्चिद्वरदो नादो-
न्नादभिन्नबलाहकः ।
वराहरदनो मृत्यु-
ञ्जयो व्याघ्राजिनाम्बरः ॥
॥२२॥

**विपश्चिद्वरदः**- अग्निका रूपमा प्रकट भएर विपश्चिद् नामक राजालाई तीन अथवा चार वर प्रदान गर्ने, **नादोन्नादभिन्नबलाहकः** - आफ्ना घोर र गम्भीर गर्जनद्वारा बादलहरूलाई चिर्ने, **वराहरदनः** - एकदन्तद्वारा बँदेलका दाह्राको कान्तिलाई मन्द तुल्याउने, **मृत्युञ्जयः** - मृत्यु र प्रमादलाई परास्त गरी आफ्ना भक्तहरूलाई अमरता प्रदान गर्ने, **व्याघ्राजिनाम्बरः**- आफ्नो शरीरमा वस्त्रका रूपमा बाघको छाला धारण गर्ने ॥२२॥

इच्छाशक्तिधरो देव-
त्राता दैत्यविमर्दनः ।
शम्भुवक्त्रोद्भवः शम्भु-
कोपहा शम्भुहास्यभूः ॥
॥२३॥

**इच्छाशक्तिधरः** - 'एकोऽहं बहु स्याम्' इत्यादि श्रुतिवचनअनुसार जगत्को सृष्टि गर्ने इच्छाशक्तिले सम्पन्न, **देवत्राता** - देवताहरूलाई दैत्यहरूको भयबाट रक्षा गर्ने, **दैत्यविमर्दनः**- दैत्यहरूलाई आफ्नो पुरुषार्थबाट परास्त गर्ने, **शम्भुवक्त्रोद्भवः**- भगवान् शिवजीका मुख-मण्डलबाट प्रादुर्भूत, **शम्भुकोपहा**- आफ्नो सुमधुर बाललीलाद्वारा पिता शिवजीको क्रोधलाई शान्त गराउने, **शम्भुहास्यभूः**- केही नजानेका केटाकेटीले झैं बाललीला देखाएर शङ्करलाई हँसाउने॥२३॥

शम्भुतेजाः शिवाशोक-
हारी गौरीसुखावहः ।
उमाङ्गमलजो गौरी-
तेजोभूः स्वर्धुनीभवः ॥
॥२४॥

**शम्भुतेजाः**- शिवजीको तेजबाट उत्पन्न, **शिवाशोकहारी**- महिषासुर आदि दानवहरूसँग युद्ध गर्ने अवसरमा भगवतीलाई सहयोग प्रदान गरी उहाँका शोक-सन्ताप नाश गर्ने, **गौरीसुखावहः**- आफ्नो दर्शनका लागि तपस्या गरिरहेकी माता पार्वतीलाई दर्शन दिएर उहाँको सुखवृद्धि गराउने, **उमाङ्गमलजः**- भगवती पार्वतीको शरीरको मयलबाट उत्पन्न, **गौरीतेजोभूः**- विष्णु र ब्रह्मा आदि देवताहरूको तेजबाट प्रकट भएकी भगवती पार्वतीका सुपुत्र, **स्वर्धुनीभवः**- श्रीगणेश र कार्तिकेयको एकरूपता भएकाले गङ्गापुत्रका रूपमा अवतीर्ण॥२४॥

यज्ञकायो महानादो
गिरिवर्ष्मा शुभाननः ।
सर्वात्मा सर्वदेवात्मा
ब्रह्ममूर्द्धा ककुप्श्रुतिः ॥
॥२५॥

**यज्ञकायः**- अश्वमेध आदि यज्ञलाई शरीरका रूपमा धारण गर्ने, **महानादः** - उच्च स्वरले पढिने वषट्कार आदि मन्त्रहरूको नादका रूपमा विराजमान, **गिरिवर्ष्मा**- पर्वतहरूलाई शरीरका रूपमा धारण गर्ने, **शुभाननः** - मङ्गलमूर्ति, **सर्वात्मा** - **'सर्वं खलु इदं ब्रह्म'** इत्यादि श्रुतिको भनाइअनुसार सम्पूर्ण संसारका आत्मा, **सर्वदेवात्मा** - सम्पूर्ण देवताहरूका आत्मा, **ब्रह्ममूर्धा**- सर्वोत्तम ब्रह्मतत्त्वका रूपमा प्रकाशमान, **ककुप्श्रुतिः**- पूर्व आदि दिशाहरूलाई कर्णेन्द्रियका रूपमा धारण गर्ने ॥२५॥

ब्रह्माण्डकुम्भश्चिद्व्योम-
भालः सत्यशिरोरुहः ।
जगज्जन्मलयोन्मेष-
निमेषोऽग्न्यर्कसोमदृक् ॥
॥२६॥

**ब्रह्माण्डकुम्भः** - ब्रह्माण्डरूपी कलश धारण गर्ने, **चिद्व्योमभालः** - ब्रह्माण्डकुम्भको बीचमा रहने आकाशलाई ब्रह्मरन्ध्रका रूपमा धारण गर्ने, **सत्यशिरोरुहः**- सत्यलोकलाई केशराशिका रूपमा धारण गर्ने, **जगज्जन्मलयोन्मेषनिमेषः**- जागरणकालमा जगत्लाई पैदा गर्ने र आँखा चिम्लिँदा त्यसलाई आफूमा लीन गराउने, **अग्न्यर्कसोमदृक्** - अग्नि, सूर्य र चन्द्रमालाई आँखाका रूपमा धारण गर्ने ॥२६॥

गिरीन्द्रैकरदो धर्मा-
धर्मोष्ठः सामबृंहितः ।
ग्रहर्क्षदशनो वाणी-
जिह्वो वासवनासिकः ॥
॥२७॥

**गिरिन्द्रैकरदः** - सुमेरु पर्वतलाई एकदन्तका रूपमा धारण गर्ने, **धर्माधर्मोष्ठः** - माथिल्लो ओठलाई धर्म र तल्लो ओठलाई अधर्मका रूपमा धारण गर्ने, **सामबृंहितः** - मधुर स्वरले सामगायन गर्ने, **ग्रहर्क्षदशनः** - सूर्य आदि ग्रह र कृत्तिका आदि नक्षत्रहरूलाई दाँतका रूपमा वहन गर्ने, **वाणीजिह्वः** - वेद, धर्मशास्त्र, पुराण, न्याय, मीमांसा आदि वाङ्मयलाई जिब्राको रूपमा धारण गर्ने, **वासवनासिकः**- देवराज इन्द्रलाई नासिकाको रूपमा धारण गर्ने॥२७॥

भ्रूमध्यसंस्थितकरो
ब्रह्मविद्यामदोत्कट: ।
कुलाचलांस: सोमार्क-
घण्टो रुद्रशिरोधर: ।।
।।२८।।

**भ्रूमध्यसंस्थितकर:** - आँखीभौं र नाकको सन्धिस्थलमा सूँढ धारण गर्ने, **ब्रह्मविद्यामदोत्कट:** - सच्चिदानन्दघन आत्मतत्त्वको बोध गर्न भक्तहरूलाई अभिप्रेरित गर्दै ब्रह्मविद्याको उपदेश दिएर माया एवं प्रपञ्चबाट मुक्त तुल्याउने, **कुलाचलांस:** - विन्ध्य आदि कुलपर्वतलाई काँधका रूपमा धारण गर्ने, **सोमार्कघण्ट:**- आफ्नो विराट् शरीरमा सूर्य र चन्द्रलाई घण्टाका रूपमा धारण गर्ने, **रुद्रशिरोधर:** - रुद्रघण्टीमाथि निवास गर्ने ।।२८।।

नदीनदभुज: सर्पाङ्-
गुलीकस्तारकानख: ।
व्योमनाभि: श्रीहृदयो
मेरुपृष्ठोऽर्णवोदर: ।।
।।२९।।

**नदीनदभुज:** - गङ्गा आदि नदी र ब्रह्मपुत्र आदि नदहरूलाई हातका रूपमा धारण गर्ने, **सर्पाङ्गुलीक:** - आफ्नो विराट् शरीरमा शेष आदि नागहरूलाई औंलाका रूपमा धारण गर्ने, **तारकानख:**- ध्रुव आदि ताराहरूलाई नङका रूपमा धारण गर्ने, **व्योमनाभि:**- आकाशरूप गुफालाई नाभिका रूपमा वहन गर्ने, **श्रीहृदय:**- अमृतलक्ष्मीका रूपमा स्वीकार गरिएका ऋग्वेद, यजुर्वेद र सामवेदलाई हृदयमा धारण गर्ने, **मेरुपृष्ठ:** - सुमेरुपर्वतलाई पिठ्यूँ बनाउने, **अर्णवोदर:**- आफ्नो विशाल उदरमा सम्पूर्ण महासागरहरूलाई समाहित गर्ने ।।२९।।

कुक्षिस्थयक्षगन्धर्व-
रक्ष:किन्नरमानुष: ।
पृथ्वीकटि: सृष्टिलिङ्ग:
शैलोरुर्दस्त्रजानुक: ।।
।।३०।।

**कुक्षिस्थयक्षगन्धर्वरक्ष:किन्नरमानुष:** - आफ्नो पेटभित्रका अङ्ग-प्रत्यङ्गका रूपमा यक्ष, गन्धर्व, राक्षस, किन्नर र मानिसहरूलाई धारण गर्ने, **पृथिवीकटि:** - पृथिवीलाई कटिस्थानका रूपमा धारण गर्ने, **सृष्टिलिङ्ग:** - सम्पूर्ण मैथुनजात प्राणीहरूको सृष्टिका कारण यौन इन्द्रियका रूपमा विराजमान, **शैलोरु:**- पर्वतलाई जङ्घाका रूपमा धारण गर्ने, **दस्त्रजानुक:**- देवताका वैद्य अश्विनीकुमारहरूलाई घुँडाका रूपमा धारण गर्ने।।३०।।

पातालजङ्घो मुनिपात्
कालाङ्गुष्ठस्त्रयीतनु: ।
ज्योतिर्मण्डललाङ्गूलो
हृदयालाननिश्चल: ।।
।।३१।।

**पातालजङ्घ:** - तल, अतल आदि सप्त पाताललाई तिघ्राको रूपमा धारण गर्ने, **मुनिपद:**- आफ्नो चरणको सेवामा तल्लीन मुनिहरूलाई चरणका रूपमा स्वीकार गर्ने, **कालाङ्गुष्ठ:** - महामृत्युलाई पाउको बूढी औंलाको रूपमा धारण गर्ने, **त्रयीतनु:**- चार वेदलाई आफ्नो शरीरका रूपमा धारण गर्ने, **ज्योतिर्मण्डललाङ्गूल:**, शिशुमारचक्रलाई पुच्छरका रूपमा धारण गर्ने, **हृदयालाननिश्चल:** - गजाकार बनेर भक्तका हृदयरूप खाँबोमा स्थिर भएर रहने ।।३१।।

हृत्पद्मकर्णिकाशालि-
वियत्केलिसरोवर: ।
सद्भक्तध्याननिगड:
पूजावारिनिवारित: ।।
।।३२।।

**हृत्पद्मकर्णिकाशालिवियत्केलिसरोवर:** - हृदयरूप कमलका केस्राले सुहाएको हृदयाकाशरूप सरोवरमा नित्य क्रीडा गर्ने, **सद्भक्तध्याननिगड:** - सज्जन भक्तहरूद्वारा गरिने ध्यानबाट वशीभूत भई तिनका हृदयमा थुनिएर रहने, **पूजावारिनिवारित:**- भक्तहरूद्वारा गरिने अर्चनारूप जञ्जीरद्वारा भक्तका हृदयमा बाँधिएर बस्ने।।३२।।

प्रतापी कश्यपसुतो
गणपो विष्टपी बली ।
यशस्वी धार्मिक: स्वोजा:
प्रथम: प्रथमेश्वर: ।।
।।३३।।

**प्रतापी**- पराक्रमी अथवा शत्रुहरूलाई सन्तप्त तुल्याउने, **कश्यपसुत:** - अदिति र कश्यपका पुत्र बनेर महोत्कटका रूपमा अवतीर्ण, **गणप:** - यज्ञसाधक, अध्वर्यु, होता, आचार्य आदि द्विजगणका रक्षक, **विष्टपी**- सम्पूर्ण भुवनहरूका परमाधार, **बली**- शक्तिसम्पन्न, **यशस्वी**- पुण्य कर्मबाट उत्पन्न भएको कीर्तिद्वारा शोभायमान, **धार्मिक:** - धर्मका संवर्द्धक एवं संरक्षक, **स्वोजा:** - शरीरको ओजद्वारा शोभायमान, **प्रथम:** - अग्रपूज्य, **प्रथमेश्वर:** - ब्रह्मा, विष्णु र शिवजीजस्ता प्रथम देवताहरूका उपास्य ।।३३।।

**चिन्तामणिद्वीपपतिः**
**कल्पद्रुमवनालयः ।**
**रत्नमण्डपमध्यस्थो**
**रत्नसिंहासनाश्रयः ।।**
**।।३४।।**

**तीव्राशिरोधृतपदो**
**ज्वालिनीमौलिलालितः ।**
**नन्दानन्दितपीठश्री-**
**र्भोगदाभूषितासनः ।।**
**।।३५।।**

**सकामदायिनीपीठः**
**स्फुरदुग्रासनाश्रयः ।**
**तेजोवतीशिरोरत्नं**
**सत्यानित्यावतंसितः ।।**
**।।३६।।**

**सविघ्ननाशिनीपीठः**
**सर्वशक्त्यम्बुजाश्रयः ।**
**लिपिपद्मासनाधारो**
**वह्निधामत्रयाश्रयः ।।**
**।।३७।।**

**उन्नतप्रपदो गूढ-**
**गुल्फः संवृतपार्ष्णिकः ।**
**पीनजङ्घः श्लिष्टजानुः**
**स्थूलोरुः प्रोन्नमत्कटिः ।।**
**।।३८।।**

**निम्ननाभिः स्थूलकुक्षिः**
**पीनवक्षा बृहद्भुजः ।**
**पीनस्कन्धः कम्बुकण्ठो**
**लम्बोष्ठो लम्बनासिकः ।।**
**।।३९।।**

**चिन्तामणिद्वीपपतिः** - चिन्तामणि द्वीपमा निवास गर्ने अथवा चिन्तामणि द्वीपका स्वामी, **कल्पद्रुमवनालयः** - चिन्तामणि द्वीपमा रहेको पारिजात वृक्षको वनमा निवास गर्ने, **रत्नमण्डपमध्यस्थः** - चिन्तामणि द्वीपको बीचमा रहेको मणिमण्डपमा विराजमान, **रत्नसिंहासनाश्रयः** - रत्नमण्डपको मध्यमा रहेको रत्नसिंहासनमा विराजमान ।।३४।। **तीव्राशिरोधृतपदः** - रत्नमण्डपमा रहेको आठ पाते कमलको केसरमा रहेका पीठशक्तिहरूमध्ये एउटी पीठशक्ति तीव्राले जसका चरणकमललाई आफ्नो शिरमा धारण गर्दछिन्, **ज्वालिनीमौलिलालितः** - ज्वालिनीनामक पीठशक्तिद्वारा शिर झुकाएर विनम्रतापूर्वक सेवा गरिएका, **नन्दानन्दितपीठश्रीः** - नन्दानामक पीठशक्तिको कान्तिद्वारा आनन्ददायक पीठमा विराजमान, **भोगदाभूषितासनः** - भोगदानामक पीठशक्ति रहनाले अलङ्कारमय बनेको आसनमा विराजमान ।।३५।। **सकामदायिनीपीठः** - कामदायिनी शक्तिद्वारा शोभायमान मण्डपको बीच भागमा विराजमान, **स्फुरदुग्रासनाश्रयः** - उग्रानामक पीठशक्तिको उपस्थितिले चहकिलो भएको सिंहासनमा आसीन, **तेजोवतीशिरोरत्नम्**- तेजोवतीनामक पीठशक्तिका लागि जसका चरणकमल चूडामणि बनेर सुहाउँछन्, **सत्यानित्यावतंसितः** - सत्यानामक पीठशक्तिको उपस्थितिका कारण नित्य विभूषित।।३६।। **सविघ्ननाशिनीपीठः** - विघ्ननाशिनीनामक पीठशक्तिद्वारा अलङ्कृत पीठमा विराजमान, **सर्वशक्त्यम्बुजाश्रयः** – कमलकर्णिकामा रहेका ती सबै पीठशक्तिका आश्रयमा विराजमान, **लिपिपद्मासनाधारः** - मातृकापद्मरूप आसनमा विराजमान, **वह्निधामत्रयाश्रयः**- आसन कमलका कर्णिकाहरूमाथि रहेका सूर्य, चन्द्र र अग्निजस्ता तेजोमय तत्त्वको आसनमाथि विराजमान ।।३७।। **उन्नतप्रपदः** - जसका चरणकमलका अग्रभाग कछुवाको पीठझैं उठेका छन्, **गूढगुल्फः** - जसका चरणका गोलीगाँठा मासुले ढाकिएका छन्, **संवृतपार्ष्णिकः** - जसका पाउहरूका गोलीगाँठाभन्दा तलको भाग मासुले भरिएको छ, **पीनजङ्घः** - जसका तिघ्रा स्थूल छन्, **श्लिष्टजानुकः** - जसका तिघ्रा र घुँडाको सन्धि भागमा समान रूपको स्थूलता भएका कारण कहाँनिरबाट घुँडा सुरु हुन्छ भन्ने स्पष्ट हुँदैन, **स्थूलोरुः** - जसका ऊरुभाग स्थूल छन्, **प्रोन्नमत्कटिः**- जसको कम्मर छिनिएको छ ।।३८।। **निम्ननाभिः** - गहिरो नाभिले सुहाएका, **स्थूलकुक्षिः** - विशाल उदरले सम्पन्न, **पीनवक्षाः** - विशाल छाती धारण गर्ने, **बृहद्भुजः** - आफ्ना हातले घुँडालाई स्पर्श गर्ने, **पीनस्कन्धः** - ठूला काँधले युक्त, **कम्बुकण्ठः**- शङ्खको आकारको घाँटीले सुहाएका, **लम्बोष्ठः** - हात्तीको झैं फैलिएको ओठ भएकाले गजाननका नामबाट प्रसिद्ध, **लम्बनासिकः**- लामो सूँढले सुहाएका।।३९।।

भग्नवामरदस्तुङ्ग-
सव्यदन्तो महाहनु: ।
ह्रस्वनेत्रत्रय: शूर्प-
कर्णो निबिडमस्तक: ।।
।।४०।।
स्तबकाकारकुम्भाग्रो
रत्नमौलिर्निरङ्कुश: ।
सर्पहारकटीसूत्र:
सर्पयज्ञोपवीतवान् ।।
।।४१।।
सर्पकोटीरकटक:
सर्पग्रैवेयकाङ्गद: ।
सर्पकक्ष्योदराबन्ध:
सर्पराजोत्तरीयक: ।।
।।४२।।
रक्तो रक्ताम्बरधरो
रक्तमाल्यविभूषण: ।
रक्तेक्षणो रक्तकरो
रक्तताल्वोष्ठपल्लव: ।।
।।४३।।
श्वेत: श्वेताम्वरधर:
श्वेतमाल्यविभूषण: ।
श्वेतातपत्ररुचिर:
श्वेतचामरवीजित: ।।
।।४४।।
सर्वावयवसम्पूर्ण:
सर्वलक्षणलक्षित: ।
सर्वाभरणशोभाढ्य:
सर्वशोभासमन्वित: ।।
।।४५।।
सर्वमङ्गलमाङ्गल्य:
सर्वकारणकारणम् ।
सर्वदैककर: शार्ङ्गी
बीजपूरी गदाधर: ।।
।।४६।।

**भग्नवामरद:** - जसको बायाँ दाँतको टुप्पो भाँचिएको छ, **तुङ्गसव्यदन्त:** - जसको दायाँ दाँतको टुप्पो अग्लो देखिन्छ, **महाहनु:** - हात्तीको झैं बाङ्गो च्यूँडोले सुहाएका, **ह्रस्वनेत्रत्रय:** - च्यूँडो हात्तीको आकारको भएतापनि हात्तीको शरीरमा सुहाउने साना-साना तीनवटा आँखाले सम्पन्न, **शूर्पकर्ण:** - नाङ्लोसमान फैलिएका कानले सुहाएका, **निबिडमस्तक:** - कठोर मस्तक धारण गर्ने ।।४०।। **स्तबकाकार-कुम्भाग्र:** - फूलको गुच्छाझैं राम्रो शिरले सुहाएका, **रत्नमौलि:** - रत्नमय किरीट धारण गर्ने, **निरंकुश:** - हात्तीको आकारमा देखिने जसको शिरमा कुनै पनि माउतेले प्रहार गर्न सक्दैन त्यस्ता स्वतन्त्र ईश्वरीय सत्तामा विराजमान, **सर्पहारकटीसूत्र:** - कमरबन्धको रूपमा सर्पलाई बेर्ने, **सर्पयज्ञोपवीतवान्** - सर्पलाई जनैका रूपमा धारण गर्ने ।।४१।। **सर्पकोटीरकटक:** - मुकुटको माला र मणिबन्धको बालाको रूपमा सर्पलाई धारण गर्ने, **सर्पग्रैवेयकाङ्गद:** - सर्पलाई घाँटीको माला र बाजुबन्दको रूपमा प्रयोग गर्ने, **सर्पकक्ष्योदराबन्ध:** - जसको कटि र उदरभागलाई दुईवटा सर्पले बाँधेका छन्, **सर्पराजोत्तरीयक:**- वासुकि नागलाई दोसल्लाका रूपमा धारण गर्ने ।।४२।। **रक्त:** - रातो वर्णले सुहाएका, **रक्ताम्बरधर:** - राता वस्त्र धारण गर्ने, **रक्तमाल्यविभूषण:** - राता फूलहरूको माला लगाउने, **रक्तेक्षण:** - राता आँखाले सुहाएका, **रक्तकर:** - राता वर्णका हातहरूले शोभायमान, **रक्तताल्वोष्ठपल्लव:** - रक्तिम ओठ र तालु धारण गर्ने ।।४३।। **श्वेत:** - विद्या र ब्रह्मज्ञानका साधकहरूका लागि शुक्लस्वरूपमा प्रकाशित हुने, **श्वेताम्बरधर:** - सेता वस्त्र धारण गर्ने, **श्वेतमाल्यविभूषण:** - सेता फूलद्वारा तयार गरिएको माला धारण गर्ने, **श्वेतातपत्र-रुचिर:** - सेतो छत्र धारण गरी सुन्दर स्वरूपमा प्रकाशित हुने, **श्वेतचामरवीजित:**- भक्तहरूद्वारा सेतो चामर डुलाएर सेवा गरिने ।।४४।। **सर्वावयवसम्पूर्णसर्वलक्षण-लक्षित:** - सर्वाङ्गमा सामुद्रिक शास्त्रले बताएका शुभलक्षण पूर्णरूपमा देखिनाले सर्वलक्षणसम्पन्न व्यक्तित्वद्वारा अलङ्कृत, **सर्वाभरणशोभाढ्य:** - सबै प्रकारका अलङ्कारद्वारा उत्पन्न शोभाले सम्पन्न, **सर्वशोभासमन्वित:** - लावण्य र अङ्गकान्तिद्वारा देदीप्यमान ।।४५।। **सर्वमङ्गलमाङ्गल्य:** - सबै प्रकारका मङ्गलहरूद्वारा सम्पन्न मङ्गलविधायक अथवा सर्वमङ्गलानामक देवीलाई लोकमङ्गल गर्ने कार्यमा सहयोग प्रदान गर्ने, **सर्वकारणकारणम्** - सम्पूर्ण जगत्को संरचनाका प्रमुख कारण परमाणु आदिको पनि रचना गर्ने अर्थात् कारणका पनि कारणतत्त्व, **सर्वदैककर:** - भक्तहरूले चिताएका कामना पूरा गर्न सक्ने सूँढद्वारा शोभायमान, **शार्ङ्गी** - शार्ङ्गनामक धनु धारण गर्ने, **बीजपूरी** - हातमा बेल अथवा बिमिरो धारण गर्ने, **गदाधर:** - गदानामक आयुध धारण गर्ने ।।४६।।

(शुक्लाङ्गो लोक सुखदः
सुतन्तुस्तन्तुवर्धनः ।
किरीटी कुण्डली हारी
वनमाली शुभाङ्गदः ।।
।।४७।।)

(**शुक्लाङ्गः** - सेतो आभाले परिपूर्ण अङ्गहरूद्वारा शोभायमान, **लोकसुखदः**- आफ्ना अवतार, उपदेश र लीलाद्वारा सम्पूर्ण लोकलाई निरतिशय आनन्द प्रदान गर्ने, **सुतन्तुः** - उत्तम भक्तहरूको परम्पराद्वारा सेव्यमान, **तन्तुवर्धनः** - सृष्टिको तन्तुलाई समृद्ध तुल्याउने, **किरीटी** - सुन्दर किरीटद्वारा सुहाएका, **कुण्डली** - ॐकाररूप कुण्डल धारण गर्ने अथवा कानमा सुन्दर कुण्डल धारण गर्ने, **हारी** - मनोहर स्वरूपले सम्पन्न अथवा उत्तम हार धारण गर्ने, **वनमाली** - वनमालाले सुहाएका, **शुभाङ्गदः**- आफ्ना बाहुहरूमा सुन्दर बाजुबन्द धारण गर्ने ।।४७।।)

इक्षुचापधरः शूली
चक्रपाणिःसरोजभृत् ।
पाशी धृतोत्पलः शाली-
मञ्जरीभृत् स्वदन्तभृत् ।।
।।४८।।

**इक्षुचापधरः** - उँखुबाट बनाइएको धनु धारण गर्ने, **शूली** - त्रिशूल धारण गर्ने, **चक्रपाणिः** - हातमा सुदर्शन धारण गर्ने, **सरोजभृत्** - कमलधारी, **पाशी** - पाशधारी, **धृतोत्पलः** - नीलकमल धारण गर्ने, **शालिमञ्जरीभृत्** - धानका बाला हातमा लिने, **स्वदन्तभृत्** - आफ्नो टुक्रिएको दाँत धारण गर्ने ।।४८।।

कल्पवल्लीधरो विश्वा-
भयदैककरो वशी ।
अक्षमालाधरो ज्ञान-
मुद्रावान् मुद्गरायुधः ।।
।।४९।।

**कल्पवल्लीधरः** - करकमलमा कल्पलता धारण गर्ने, **विश्वाभयदैककरः** - जसको सूँढ संसारको कुनै तत्त्वबाट पनि भयभीत र परास्त हुँदैन अथवा जसको सूँढले संसारलाई अभय प्रदान गर्दै रक्षा गर्दछ, **वशी** - संसारलाई वशवर्ती बनाई राम्ररी संसारयात्रा चलाउने, **अक्षमालाधरः** - अदेखि लिएर क्षसम्मका अक्षरहरूद्वारा तयार हुने अक्षमाला अथवा मातृकामाला धारण गर्ने, **ज्ञानमुद्रावान्** - तर्जनी र बूढी औंलाको संयोगबाट निष्पन्न हुने ज्ञानमुद्राद्वारा शोभायमान, **मुद्गरायुधः** - आफ्ना भक्तहरूको मुसल आदि आयुधहरूद्वारा रक्षा गर्दै तिनलाई हर्ष र आनन्द प्रदान गर्ने ।।४९।।

पूर्णपात्री कम्बुधरो
विधृतालिसमूहकः ।
मातुलिङ्गधरश्चूत-
कलिकाभृत् कुठारवान् ।।
।।५०।।

**पूर्णपात्री** - यज्ञको पूर्णपात्र अथवा अमृतले भरिएको अमृतपात्र धारण गर्ने, **कम्बुधरः** - शङ्ख धारण गर्ने, **विधृतालिसमुद्गकः** - भ्रमरहरूद्वारा आवेष्टित आफ्ना गण्डस्थलमा मदधारा धारण गर्ने, **मातुलिङ्गधरः** - हातमा बेल लिने, **चूतकलिकाभृत्**- हातमा आम्रमञ्जरी धारण गर्ने, **कुठारवान्** - योगीहरूका हृदयमा निहित र कुठारसंज्ञाबाट सम्बोधन गरिने ज्ञानका साक्षी ।।५०।।

पुष्करस्थस्वर्णघटी-
पूर्णरत्नाभिवर्षकः ।
भारतीसुन्दरीनाथो
विनायकरतिप्रियः ।।
।।५१।।

**पुष्करस्थस्वर्णघटीपूर्णरत्नाभिवर्षकः** - आफ्नो सूँढको टुप्पामा रहेको सुवर्ण-कुम्भमा भरिएका रत्नहरूको वर्षा गराई भक्तहरूलाई तृप्त गराउने, **भारतीसुन्दरीनाथः**- सरस्वतीका स्वामी ब्रह्मा, लक्ष्मीका स्वामी विष्णु र त्रिपुरसुन्दरी पार्वतीका स्वामी शिवजीका रूपमा प्रकट भई जगत्को सृष्टि, पालन र संहार गर्ने, **विनायकरतिप्रियः** - ग्रहहरूसँग अथवा पक्षिराज गरुडसँग क्रीडा गर्न रुचाउने ।।५१।।

महालक्ष्मीप्रियतमः
सिद्धलक्ष्मीमनोरमः ।
रमारमेशपूर्वाङ्गो
दक्षिणोमामहेश्वरः ।।
।।५२।।

**महालक्ष्मीप्रियतमः** - महालक्ष्मीका अत्यन्त प्यारा, **सिद्धलक्ष्मीमनोरमः** - सिद्धलक्ष्मीका मनमा आनन्द पैदा गराउने, **रमारमेशपूर्वाङ्गः** - जसको पूर्व दिशाका आवरणदेवताका रूपमा लक्ष्मी र नारायण रहनुहुन्छ, **दक्षिणोमामहेश्वरः** - जसको दक्षिण दिशामा आवरणदेवताका रूपमा शिव र पार्वती रहनुहुन्छ ।।५२।।

महीवराहवामाङ्गो
रतिकन्दर्पपश्चिमः ।
आमोदमोदजननः
सप्रमोदप्रमोदनः ।।
।।५३।।

**महीवराहवामाङ्गः** - जसको पश्चिम दिशामा आवरणदेवताका रूपमा पृथिवी र वराह रहनुहुन्छ, **रतिकन्दर्पपश्चिमः** - जसको पश्चिम दिशामा आवरणदेवताका रूपमा रति र कामदेव रहन्छन् ती श्रीगणेश परमात्मा, **आमोदमोदजननः** - भक्तहरूको हर्षलाई आनन्दमा परिणत गराई परमानन्द दिलाउने, **सप्रमोदप्रमोदनः** - भगवान्को दर्शन पाउँदा हर्षविभोर भएका भक्तहरूलाई सधैं हर्षको सागरमा निमग्न गराउने ।।५३।।

समेधितसमृद्धिश्री-
र्ऋद्धिसिद्धिप्रवर्त्तकः ।
दत्तसौमुख्यसुमुखः
कान्तिकन्दलिताश्रयः ।।
।।५४।।

**समेधितसमृद्धिश्रीः** - समृद्धिसम्पन्न र श्रीवृद्धिकारक, **ऋद्धिसिद्धिप्रवर्त्तकः**- आराधना गर्ने भक्तहरूलाई ऋद्धिमा रहेको सिद्धितत्त्व प्रदान गर्ने, **दत्तसौमुख्यसुमुखः**- आफ्ना भक्तहरूका लागि साम्मुख्य प्रदान गर्ने, सुन्दर स्वरूपले सम्पन्न एवं भक्तका अनुकूल, **कान्तिकन्दलिताश्रयः** - कान्ति र सौन्दर्यको विकासका आधार ।।५४।।

मदनावत्याश्रिताङ्घ्रिः
कृतदौर्मुख्यदुर्मुखः ।
विघ्नसंपल्लवोपघ्नः
सेवोन्निद्रमदद्रवः ।।
।।५५।।

**मदनावत्याश्रिताङ्घ्रिः** - मदनावती नामक शक्तिद्वारा चरणकमलमा आराधित, **कृतदौर्मुख्यदुर्मुखः** - दुर्मुख अर्थात् प्रतिकूल मानिसहरूमा रहेको प्रतिकूल भावनालाई निर्मूल तुल्याउने, **विघ्नसंपल्लवोपघ्नः** - विघ्नहरूको विस्तारका मूल अधिष्ठान अर्थात् विघ्नराज, **सेवोन्निद्रमदद्रवः** - मदद्रवादेवी जसको सेवामा निरालस्य भई निरन्तर खटिरहन्छिन् ।।५५।।

विघ्नकृन्निघ्नचरणो
द्राविणीशक्तिसत्कृतः ।
तीव्राप्रसन्ननयनो
ज्वालिनीपालितैकदृक् ।।
।।५६।।

**विघ्नकृन्निघ्नचरणः** - विघ्नकृत्को भक्तिमा आश्रित छन् पाउ जसका, **द्राविणीशक्तिसत्कृतः**- द्राविणीनामक शक्तिद्वारा सेवा गरिनुभएका, **तीव्राप्रसन्ननयनः**- तीव्रानामक शक्तिको स्वरूपमा दृष्टिपात गर्दा जसका आँखा रमाउँछन्, **ज्वालिनी-पालितैकदृक्**- जसको मुख्य दृष्टिशक्तिलाई ज्वालिनीनामक शक्तिले रक्षा गर्दछिन् ।।५६।।

मोहिनीमोहनो भोग-
दायिनीकान्तिमण्डितः ।
कामिनीकान्तवक्त्रश्री-
रधिष्ठितवसुन्धरः ।।
।।५७।।

**मोहिनीमोहनः** - मोहिनीनामक शक्तिलाई जसले आफ्ना स्वरूपसौन्दर्यबाट मुग्ध तुल्याउनुहुन्छ, **भोगदायिनीकान्तिमण्डितः** - भोगदायिनी शक्तिको कान्तिद्वारा जसका दुबै पादुका कान्तिमय बन्दछन्, **कामिनीकान्तवक्त्रश्रीः** - कामिनी शक्तिको मुहारमा रहेको शोभाद्वारा आप्लावित, **अधिष्ठितवसुन्धरः** - जसको अवतारलीला र पावन चरित्रका कारण पृथिवीले प्रतिष्ठा प्राप्त गर्दछन् ।।५७।।

वसुन्धरामदोन्नद्ध-
महाशङ्खनिधिप्रभुः ।
नमद्वसुमतीमौलि-
महापद्मनिधिप्रभुः ।।
।।५८।।

**वसुन्धरामदोन्नद्धमहाशङ्खनिधिप्रभुः**- वसुन्धरानामक पत्नीको यौवनजनित सौन्दर्यपान गरी प्रमुदित जुन महाशङ्खनामक निधि छ, त्यस निधिका अधिष्ठात्री देवताद्वारा आराधित, **नमद्वसुमतीमौलिमहापद्मनिधिप्रभुः** - वसुमतीनामक पत्नीद्वारा विनम्रतापूर्वक शिर झुकाई पतिका रूपमा सेवा गरिएको जुन महापद्मनिधि रहेको छ त्यस निधिका अधिष्ठात्री देवताद्वारा आराधित।।५८।।

सर्वसद्गुरुसंसेव्यः
शोचिष्केशहृदाश्रयः ।
ईशानमूर्धा देवेन्द्र-
शिखः पवननन्दनः ।।
।।५९।।

**सर्वसद्गुरुसंसेव्यः** - महाशङ्ख र महापद्मजस्तै विशिष्ट गौरव भएका अन्य देवताहरूद्वारा आराधनीय, **शोचिष्केशहृदाश्रयः** - गार्हपत्य आदि अग्निहरूका हृदयमा वास गर्ने, **ईशानमूर्धा**- शङ्करका लागि शिरोभागझैं माननीय देवता, **देवेन्द्रशिखा**- देवराज इन्द्रका लागि शिखाझैं आदरणीय, **पवननन्दनः** - प्राणरूप पवनलाई आनन्दित तुल्याउने।।५९।।

अग्रप्रत्यग्रनयनो
दिव्यास्त्राणां प्रयोगवित् ।
ऐरावतादिसर्वाशा-
वारणावरणप्रियः ।।
।।६०।।
वज्राद्यस्त्रपरिवारो
गणचण्डसमाश्रयः ।
जयाजयपरीवारो
विजयाविजयावहः ।।
।।६१।।
अजितार्चितपादाब्जो
नित्यानित्यावतंसितः ।
विलासिनीकृतोल्लासः
शौण्डीसौन्दर्यमण्डितः ।।
।।६२।।
अनन्तानन्तसुखदः
सुमङ्गलसुमङ्गलः ।
इच्छाशक्तिज्ञानशक्ति-
क्रियाशक्तिनिषेवितः ।।
।।६३।।
सुभगासंश्रितपदो
ललिताललिताश्रयः ।
कामिनीकामनः काम-
मालिनीकेलिलालितः ।।
।।६४।।
सरस्वत्याश्रयो गौरी-
नन्दनः श्रीनिकेतनः ।
गुरुगुप्तपदो वाचा-
सिद्धो वागीश्वरीपतिः ।।
।।६५।।

**अग्रप्रत्यग्रनयनः** - सूक्ष्म दृष्टि र नित्य नवीनताजस्ता गुणले सुहाएका नयनले सम्पन्न, **दिव्यास्त्रप्रयोगवित्** - अस्त्रविद्याको सिद्धान्त र प्रयोगका विशेषज्ञ, **ऐरावतादिसर्वाशावारणावरणप्रियः** - ऐरावत आदि सबै दिशाका दिग्गजहरूलाई आफ्नो लीलाद्वारा मोहित गर्न मन पराउने ।।६०।।

**वज्राद्यस्त्रपरीवारः**- आफ्ना अनेक भुजाहरूमा रहेका अनेक थरि शस्त्र-अस्त्रद्वारा ढाकिएका अथवा वज्र आदि अस्त्र र तिनका धारक इन्द्र आदि देवताहरूद्वारा चारैतिरबाट घेरिएका, **गणचण्डसमाश्रयः** - चण्ड आदि गणलाई शक्ति प्रदान गर्ने अथवा गणहरूमा प्रचण्ड मानिएका वीरहरूलाई शक्ति प्रदान गर्ने, **जयाजयपरीवारः** - जया र अजयानामक पीठशक्तिहरू जसको परिवारका सदस्यका रूपमा रहेका छन्, **विजयाविजयावहः** - विजयानामक पीठशक्तिलाई सर्वोत्तम ऐश्वर्य एवं विजय प्रदान गर्ने ।।६१।।

**अजितार्चितपादाब्जः** - अजिता अथवा अपराजितानामक पीठशक्तिद्वारा चरण-कमलमा आराधित, **नित्यानित्यावतंसितः** - नित्यानामक शक्तिद्वारा नित्य अलङ्कृत, **विलासिनीकृतोल्लासः** - जसको सान्निध्य पाएर विलासिनीनामक पीठशक्ति उल्लासमय बन्दछिन्, **शौण्डीसौन्दर्यमण्डितः**- शौण्डीनामक शक्तिको सौन्दर्यद्वारा अलङ्कृत।।६२।।

**अनन्तानन्तसुखदः** - अनन्तानामक शक्तिलाई आफ्नो सान्निध्य प्रदान गरी अनन्त सुख दिने, **सुमङ्गलसुमङ्गलः** - सुमङ्गलादेवीको सुमङ्गलनामक अधिष्ठानपीठ सुमङ्गल अर्थात् मङ्गलमय हुन्छ, त्यस्तै सुमङ्गल जसबाट संसारमा फैलिन्छ ती मङ्गलमूर्ति श्रीगणेश, **इच्छाशक्तिज्ञानशक्तिक्रियाशक्तिनिषेवितः**- ज्ञानशक्ति, इच्छाशक्ति र क्रियाशक्तिनामक ब्रह्मवृत्तिले सम्पन्न ।।६३।।

**सुभगासंश्रितपदः** - ब्रह्मका वृत्तिहरू नै विभिन्न धर्मको योगबाट सुभगा आदि नामले लोकमा व्याप्त भएर रहेका छन्, तीमध्येकी सुभगादेवीद्वारा सेवित, **ललितालललिताश्रयः** - ललितानामक देवीका आश्रयदाताका रूपमा विराजमान, **कामिनीकामनः**- कामकलाकी प्रतिमूर्ति कामिनी शक्तिद्वारा नित्य आकाङ्क्षित, **काममालिनीकेलिलालितः**- कामेशी देवीको कामकलाद्वारा आराधित।।६४।।

**सरस्वत्याश्रयः** - वाणीकी अधिष्ठात्री सरस्वती देवीका आश्रय, **गौरीनन्दनः**- पुत्रका रूपमा उत्पन्न भएर पार्वतीलाई आनन्दित तुल्याउने, **श्रीनिकेतनः** - भगवती लक्ष्मीका अजस्र स्रोत, **गुरुगुप्तपदः** - जसका वाचक मन्त्र सिद्ध गुरुहरूद्वारा गोपित गरिएका हुन्छन्, **वाचासिद्धः** - जसको उपासना गर्ने साधकको वाणी सिद्ध हुन्छ, **वागीश्वरीपतिः**- नकुलीनामक वाङ्मयमूर्ति देवीका स्वामी ।।६५।।

नलिनीकामुको वामा-
रामो ज्येष्ठामनोरमः ।
रौद्रीमुद्रितपादाब्जो
हुंबीजस्तुङ्गशक्तिकः ।।
।।६६।।

**नलिनीकामुकः**:- गङ्गानदीका पति, **वामारामः**:- शक्तिरूपधारी ब्रह्माजीका पति, **ज्येष्ठामनोरमः**:- शक्तिरूपधारी विष्णुका पति, **रौद्रीमुद्रितपादाब्जः** - शक्तिरूपधारी रुद्रले जसको पाउ आफ्नो शरीरमाथि राखेर सेवा गर्दछन्, **हुंबीजः**:- जसको **'वक्रतुण्डाय हुम्'** नामक ६ अक्षरको मन्त्रमा रहेको बीजरूप हुंकारले धर्म, अर्थ, काम र मोक्षनामक पुरुषार्थ प्रदान गर्दछ, **तुङ्गशक्तिकः**:- **'वक्रतुण्डाय हुम्'** मन्त्रमा रहेको **तुं** र अष्टादशाक्षरी मन्त्रमा रहेको **गं** अक्षरको योग गर्दा **तुंग** बन्दछ, तुंगजस्ता सकल शक्तिदायक पदहरूद्वारा वाच्य ।।६६।।

विश्वादिजननत्राणः
स्वाहाशक्तिः सकीलकः ।
अमृताब्धिकृतावासो
मदघूर्णितलोचनः ।।
।।६७।।

**विश्वादिजननत्राणः** - विश्वका आदिपुरुष हिरण्यगर्भका स्रष्टा र रक्षक, **स्वाहाशक्तिः** - स्वाहा जसको मन्त्रशक्तिका रूपमा रहेको छ, **सकीलकः** - मृत्युञ्जय आदि मन्त्रमा निहित स अक्षर जसको वाचक बनेर रहेको छ अथवा जुन देवता मन्त्राङ्गको साहचर्यका कारण सकीलक भनिनुहुन्छ, **अमृताब्धिकृतावासः** - सुरासमुद्र, अमृतसमुद्र र इक्षुरससमुद्रमा विराजमान, **मदघूर्णितलोचनः** - ब्रह्मरसपान गरी उत्पन्न भएको मदका कारण जसका आँखा आलस्यपूर्ण देखिन्छन् ।।६७।।

उच्छिष्टगण उच्छिष्ट-
गणेशो गणनायकः ।
सार्वकालिकसंसिद्धि-
र्नित्यशैवो दिगम्बरः ।।
।।६८।।

**उच्छिष्टगणः** - उत्कृष्ट स्वभावका गण र शिष्यले समन्वित, **उच्छिष्टगणेशः** - **'उच्छिष्टं नामरूपं च'** इत्यादि अथर्व ऋचाद्वारा प्रशंसा गरिएका अथवा मोदकभोजनमा रमाउने र नौ अक्षरको मन्त्रद्वारा आराधना गरिँदा प्रसन्न हुने, **गणनायकः** - भक्तहरूले जसका गुणहरूको गणना गर्दछन्, **सार्वकालिकसंसिद्धिः** - जसका साधकले प्राप्त गरेका सिद्धि शाश्वत यद्वा नित्य हुन्छन्, **नित्यशैवः** - सँधै कल्याणकारी भावनाले अनुप्राणित, **दिगम्बरः** - आफ्नो उपस्थितिद्वारा सम्पूर्ण दिशाहरूलाई ढाकिदिने ।।६८।।

अनपायोऽनन्तदृष्टि-
रप्रमेयोऽजरामरः ।
अनाविलोऽप्रतिरथो
ह्यच्युतोऽमृतमक्षरम् ।।
।।६९।।

**अनपायः** - कल्याणकारी विधि र विचारदेखि कहिल्यै पनि वियुक्त नहुने, **अनन्तदृष्टिः** - अपरिमित ज्ञानसम्पन्न, **अप्रमेयः** - ज्ञानेन्द्रिय, मन र वाणीद्वारा अगम्य, **अजरामरः** - **'विजरो विमृत्युः'** जस्ता श्रुतिप्रमाणद्वारा अजर एवं अमर परमात्माका रूपमा निरूपित, **अनाविलः** - प्रपञ्चजनित दोषबाट मुक्त, **अप्रतिरथः** - कुनै पनि प्रतिद्वन्द्वी नभएका, **अच्युतः** - च्युति वा त्रुटिले रहित अथवा नारायणस्वरूप, **अमृतम्**- अमृत अथवा मोक्षरूप, **अक्षरम्** - सर्वव्यापक अथवा क्षयरहित ।।६९।।

अप्रतर्क्योऽक्षयोऽजय्योऽ-
नाधारोऽनामयोऽमलः ।
अमोघसिद्धिरद्वैत-
मघोरोऽप्रमिताननः ।।
।।७०।।

**अप्रतर्क्यः** - वेदप्रतिकूल तर्कद्वारा अगम्य, **अक्षयः** -क्षतिहीन अथवा निजी आवासरहित, **अजय्यः** - अरूद्वारा जित्न नसकिने, **अनाधारः** - स्वयं जगत्का आधार भए पनि जसको कुनै निजी आधार छैन, **अनामयः**:- रोग र मलिनता नभएका, **अमलः**:- आणव आदि मलशून्य, **अमोघसिद्धिः** - जसका भक्तहरूले प्राप्त गर्ने सिद्धि सार्थक र अमोघ हुन्छ, **अद्वैतम्** - द्वैतभावजनित प्रपञ्च शान्त भएका कारण मोक्षरूप अथवा अद्वैतरूप, **अघोरः** - भक्तिभावले आराधना गर्ने भक्तहरूका लागि कल्याणरूप, **अप्रमिताननः** - असंख्य मुखले सम्पन्न अथवा जीवहरूलाई जीवन प्रदान गर्ने ।।७०।।

अनाकारोऽब्धिभूम्यग्नि-
बलघ्नोऽव्यक्तलक्षणः ।
आधारपीठ आधार
आधाराधेयवर्जितः ।।
।।७१।।

**अनाकारः** - भक्तहरूको सन्तुष्टिका लागि साकार भएतापनि वास्तविक रूपमा आकारहीन अर्थात् निराकार ब्रह्मतत्त्व, **अब्धिभूम्यग्निबलघ्नः** - महासागर, पृथिवी र अग्निका स्ताम्भन, क्लेदन र दाह आदि शक्तिद्वारा पनि अपराजेय ब्रह्मतत्त्व, **अव्यक्तलक्षणः**:- सच्चिदानन्दमयता र साकाररूपमा प्रपञ्चरचनाजस्ता दुर्बोध्य लक्षणले सम्पन्न, **आधारपीठः**:- शिवजीदेखि जीवसम्मका ३६ तत्त्वहरूका आधारपीठका रूपमा प्रसिद्ध, **आधारः**:- अ-ब्रह्मा र आ-नारायणलाई धारण गर्ने , **आधाराधेयवर्जितः** - सर्वाधार भएकाले आधारहीन र विनाशी एवं निस्सार प्रपञ्चबाट पर रहेका ।।७१।।

आखुकेतन आशापू-
रक आखुमहारथः ।
इक्षुसागरमध्यस्थ
इक्षुभक्षणलालसः ।।
।।७२।।
इक्षुचापातिरेकश्री-
रिक्षुचापनिषेवितः ।
।।७३।।
इन्द्रगोपसमानश्री-
रिन्द्रनीलसमद्युतिः ।
इन्दीवरदलश्याम
इन्दुमण्डलनिर्मलः ।।
।।७४।।
इध्मप्रिय इडाभाग
इडाधामेन्दिराप्रियः ।
इक्ष्वाकुविघ्नविध्वंसी
इतिकर्त्तव्यतेप्सितः ।।
।।७५।।
ईशानमौलिरीशान
ईशानसुत ईतिहा ।
ईषणात्रयकल्पान्त
ईहामात्रविवर्जितः ।।
।।७६।।
उपेन्द्र उडुभृन्मौलि-
रुण्डेरकबलिप्रियः ।
उन्नतानन उत्तुङ्ग
उदारत्रिदशाग्रणीः ।।
।।७७।।
ऊर्जस्वान् ऊष्मलमद
ऊहापोहदुरासदः ।
ऋग्यजुःसामसम्भूति
र्ऋद्धिसिद्धिप्रवर्त्तकः ।।
।।७८।।
ऋजुचित्तैकसुलभ
ऋणत्रयविमोचकः ।
लुप्तविघ्नः स्वभक्तानां
लुप्तशक्तिः सुरद्विषाम् ।।
।।७९।।

**आखुकेतनः**:- ध्वजामा मूसो रहेकाले मूषकध्वजका रूपमा प्रसिद्ध, **आशापूरकः**:- सबै दिशामा व्याप्त रहेकाले पूर्व आदि दिशाहरूको तृष्णा मेटाउने, **आखुमहारथः**:- मूसोलाई वाहन यद्वा महारथका रूपमा प्रयोग गर्ने, **इक्षुसागरमध्यस्थः** - इक्षुसागरका मध्य भागमा विराजमान, **इक्षुभक्षणलालसः** - गजाकार भएकाले ऊखु खान मन पराउने।।७२।।

**इक्षुचापातिरेकश्रीः** - कामदेवभन्दा पनि राम्रा, **इक्षुचापनिषेवितः** - ऊँखुबाट तयार गरिएको धनुकी अधिष्ठात्री देवताद्वारा पूजित अथवा कामदेवद्वारा आराधित ।।७३।।

**इन्द्रगोपसमानश्रीः** - इन्द्रगोप अथवा वीरबहुटी (ओरिगाँठे) नामक वर्षाकालिक कीराको जस्तै कान्तिले सुहाएका, **इन्द्रनीलसमद्युतिः** - रातो कान्तिले सम्पन्न । **इन्दीवरदलश्यामः**- नीलकमलका पातझैं नीलो कान्तिले सुहाएका, **इन्दुमण्डलनिर्मलः** - चन्द्रमण्डलझैं निर्मल स्वरूपले शोभायमान ।।७४।।

**इध्मप्रियः** - श्रौत-स्मार्त अग्निरूप भएका कारण समिधा मन पराउने, **इडाभागः**:- पृथिवी, गाई, ऋत्विक् र यजमानका रूपमा विराजमान, **इडाधाम** - पृथिवीलाई पवित्र धाम मानेर त्यसमा विराजमान हुने, **इन्दिराप्रियः** - लक्ष्मीका पूज्य विष्णुका रूपमा शोभायमान, **इक्ष्वाकुविघ्नविध्वंसी** - इक्ष्वाकु राजाका विघ्न नाश गर्ने अथवा गोलकाँक्रीझैं तीता लाग्ने असह्य कष्ट, सङ्कट र विपत्तिका रूपमा आइलाग्ने विघ्नहरूको नाश गर्ने, **इतिकर्त्तव्यतेप्सितः** - यज्ञको अङ्ग स्तोमलाई आधार बनाएर यजमानहरूका कामना पूरा गर्ने ।।७५।। **ईशानमौलिः** - मानिस, जीवजगत्, इन्द्र आदि ईशानहरूमा श्रेष्ठ, **ईशानः**:- जीवहरूलाई जीवन प्रदान गर्ने, **ईशानसुतः** - शिवजीका पुत्र, **ईतिहा** - अतिवृष्टि, अनावृष्टि, मूसो, सलह, सुगा, स्वचक्र र परचक्रनामक उपद्रवका नाशक, **ईषणात्रयकल्पान्तः** - लोकैषणा, पुत्रैषणा र धनैषणाका नाशक, **ईहामात्रविवर्जितः**:- निश्चेष्ट चित्स्वरूप ।।७६।।

**उपेन्द्रः** - वामनरूप, **उडुभृन्मौलिः** - आकाशरूप शिर धारण गरी सुहाएका अथवा चन्द्रमालाई शिरमा धारण गर्ने, **उण्डेरकबलिप्रियः** - गोलाकार वटक आदिलाई नैवेद्यका रूपमा मन पराउने, **उन्नताननः** - उत्कृष्ट जीवहरूलाई जीवनी शक्ति प्रदान गर्ने, **उत्तुङ्गः** - वराह अवतार लिंदा आफ्नो दाह्राबाट उतुङ्गानामक नदी पैदा गर्ने, **उदारत्रिदशाग्रणीः** - देवताहरूका देवता महादेवभन्दा पनि उत्तम ।।७७।।

**ऊर्जस्वान्**- तेजस्वी, **ऊष्मलमदः** - आफ्ना गालाबाट तातो मदधारा बगाउने, **ऊहापोहदुरासदः**:- ऊह-वितर्क र अपोह-तत्त्वबुद्धिद्वारा पनि अप्राप्य, **ऋग्यजुसामसम्भूतिः** - ऋग्वेद, यजुर्वेद र सामवेदलाई आफ्नो श्वास-प्रश्वासबाट पैदा गर्ने, **ऋद्धिसिद्धिप्रवर्त्तकः**:- राज्य आदि ऋद्धि र अणिमा आदि सिद्धि प्रवर्तन गर्ने ।।७८।।

**ऋजुचित्तैकसुलभः**:- सरल स्वभाव भएका भक्तहरूलाई सजिलैसँग दर्शन प्रदान गर्ने, **ऋणत्रयविमोचकः**:- पुत्रकामना, यज्ञकामना र वेदादिशास्त्रज्ञानको कामना गर्ने ब्राह्मणहरूका इच्छापूरक, **स्वभक्तानां लुप्तविघ्नः** - आफ्ना भक्तहरूका विघ्ननाशक, **सुरद्विषां लुप्तशक्तिः** - दानवहरूका शक्तिनाशक ।।७९।।

लुप्तश्रीर्विमुखार्चानां
लूताविस्फोटनाशनः ।
एकारपीठमध्यस्थ
एकपादकृतासनः ।।
।।८०।।
एजिताखिलदैत्यश्री-
रेजिताखिलसंश्रयः ।
ऐश्वर्यनिधिरैश्वर्य-
मैहिकामुष्मिकप्रदः ।।
।।८१।।
ऐरम्मदसमोन्मेष
ऐरावतनिभाननः ।
ॐ कारवाच्य ओंकार
ओजस्वानोषधीपतिः ।।
।।८२।।
औदार्यनिधिरौद्धत्य-
धुर्य औन्नत्यनिःस्वनः ।
अंकुशः सुरनागाना-
मङ्कुशः सुरविद्विषाम् ।।
।।८३।।
अः समस्तविसर्गान्त-
पदेषु परिकीर्तितः ।
कमण्डलुधरः कल्पः
कपर्दी कलभाननः ।।
।।८४।।
कर्मसाक्षी कर्मकर्ता
कर्माकर्मफलप्रदः ।
कदम्बगोलकाकारः
कूष्माण्डगणनायकः ।।
।।८५।।
कारुण्यदेहः कपिलः
कथकः कटिसूत्रभृत् ।
खर्वः खड्गप्रियः खड्ग-
खातान्तस्थः खनिर्मलः ।।
।।८६।।

**विमुखार्चानां लुप्तश्रीः** - अर्चना-उपासनादेखि पराङ्मुख हुने दुष्टहरूको ऐश्वर्यनाश गर्ने, **लूताविस्फोटनाशनः**- लुतो आदि भित्री रोग र खटिरा आदि बाहिरी रोग नाश गर्ने, **एकारपीठमध्यस्थः** - यन्त्रअन्तर्गत त्रिकोणको बीचमा स्थित बिन्दुमा विराजमान, **एकपादकृतासनः**- काशीमा एउटा पाउले उभिएर रहनुहुने ।।८०।।

**एजिताखिलदैत्यश्रीः**- दैत्यहरूको ऐश्वर्यलाई ध्वस्त बनाउने, **एधिताखिलसंश्रयः** - आफ्नो शरणमा आएका भक्तहरूको ऐश्वर्यवृद्धि गराउने, **ऐश्वर्यनिधिः** - भक्तहरूलाई ऐश्वर्य प्रदान गर्ने, **ऐश्वर्यम्** - शक्तिशाली देवता आदिका सम्पत्तिस्वरूप, **ऐहिकामुष्मिकप्रदः**- धन, पुत्र आदि ऐहिक र स्वर्ग आदि आमुष्मिक फलका दाता ।।८१।। **ऐरम्मदसमोन्मेषः** - विद्युत्समान प्रकाशित भई एकै क्षणमा अन्तर्धान हुने, **ऐरावतनिभाननः**- गजराज ऐरावतको जस्तै मुखमण्डलले सुहाएका, **ओंकारवाच्यः** - **'तस्य वाचकः प्रणवः'** इत्यादि प्रमाणवाक्यअनुसार ओङ्कारसंज्ञाद्वारा सम्बोध्य, **ओङ्कारः**- ओङ्कारस्वरूप, **ओजस्वान्** - शौर्यको उत्कर्ष गराउने शरीरको आठौं धातुका रूपमा रहेका, **औषधीपतिः** - औषधीहरूका स्वामी ।।८२।।

**औदार्यनिधिः**- उदारताका खजाना, **औद्धत्यधुर्यः** - भक्तहरूको कल्याणका लागि आश्चर्यजनक लीला देखाउने कलामा अग्रगण्य, **औन्नत्यनिःस्वनः** - अति गम्भीर नाद उच्चारण गर्ने, **सुरनागानामङ्कुशः** - त्रैलोक्यका नियामक, **सुरविद्विषामङ्कुशः** - देवता, विद्वान् र सूर्यसँग द्वेष गर्ने तत्त्वहरूमाथि नियन्त्रण गर्ने ।।८३।।

**'अः'समस्तविसर्गान्तपदेषु परिकीर्तितः**- अकार आदि ५१ विसर्गसम्पन्न मन्त्रमय अक्षरहरूद्वारा बोधित, **कमण्डलुधरः**- अमृत-कुम्भ धारण गर्ने, **कल्पः** - प्रलयस्वरूप, **कपर्दी**- जटाजूटधारी, **कलभाननः**- नादकान्तिलाई उज्जीवन गर्ने।।८४।।

**कर्मसाक्षी** - अदृष्ट कर्मका पनि द्रष्टा, **कर्मकर्ता**- स्वयं सत्कर्म गरी अरूलाई पनि प्रेरणा प्रदान गर्ने, **कर्माकर्मफलप्रदः** - कर्म र अकर्मका स्वर्ग एवं मोक्षजस्ता फल प्रदान गर्ने, **कदम्बगोलकाकारः** - कदम्ब-पुष्पाकारमा आकारित नाडीहरूको उद्गमस्थलद्वारा घेरिएर हृदयमा विराजमान, **कूष्माण्डगणनायकः** - दुष्ट ग्रहहरूका नियन्त्रक ।।८५।।

**कारुण्यदेहः** - करुणामूर्ति, **कपिलः** - कपिल मुनिका रूपमा अवतीर्ण, **कथकः**- सम्प्रदायहरूका प्रवर्त्तक, **कटिसूत्रभृत्**- रत्नजडित सुवर्णमय कन्धनी धारण गर्ने, **खर्वः** - वामनाकार, **खड्ग-प्रियः** - मृगहरूका प्यारा अथवा गैंडाहरूका प्यारा, **खड्गखातान्तःस्थः** - खड्ग शब्दमा खदेखि पर ड अक्षर रहेको छ, त्यसपछि गकार आउँछ, त्यस गकारको बीचमा गं अक्षरको रूपमा विराजमान, **खनिर्मलः**- आकाशझैं सर्वव्यापक एवं निर्मल ।।८६।।

खल्वाटशृङ्गनिलयः
खट्वाङ्गी खदुरासदः ।
गुणाढ्यो गहनो गस्थो
गद्यपद्यसुधार्णवः ॥
॥८७॥

**खल्वाटशृङ्गनिलयः** - नाङ्गा पर्वतका टुप्पामा निवास गर्ने, **खट्वाङ्गी** - खाटको आकारको खट्वाङ्गनामक आयुध धारण गर्ने, **खदुरासदः** - अमूर्तरूप भएकाले आकाशझैं दुष्प्राप्य, **गुणाढ्यः** - अनन्त कल्याणगुणले सम्पन्न, **गहनः** - सामान्य व्यक्तिका लागि दुष्प्राप्य, **गस्थः** - आफ्नो बीजमन्त्र गंमा विराजमान, **गद्यपद्यसुधार्णवः** - गद्य एवं पद्यको आत्मा मानिएको रसका सागर ॥८७॥

गद्यगानप्रियो गर्जो
गीतगीर्वाणपूर्वजः ।
गुह्याचाररतो गुह्यो
गुह्यागमनिरूपितः ॥
॥८८॥

**गद्यगानप्रियः** - सामगान मन पराउने, **गर्जः** - मेघझैं गर्जन गर्ने, **गीतगीर्वाणपूर्वजः** - गीत आदि शब्द र अमर आदि अर्थका स्वरूप, **गुह्याचाररतः** - गुहाप्रविष्ट जीवात्मा र परमात्माको स्वरूपचिन्तनमा रमाउने, **गुह्यः**- प्राणीहरूका हृदयमा लुकेर रहेका, **गुह्यागमनिरूपितः**- रहस्यका प्रतिपादक तन्त्रशास्त्रद्वारा निरूपित ॥८८॥

गुहाशयो गुहाब्धिस्थो
गुरुगम्यो गुरोर्गुरुः ।
घण्टाघर्घरिकामाली
घटकुम्भो घटोदरः ॥
॥८९॥

**गुहाशयः**- हृदयाकाशमा विराजमान, **गुहाब्धिस्थः** - अव्याकृत आकाशगुफामा विराजमान, **गुरुगम्यः** - गुरुद्वारा उपदेश गरिने योगशास्त्रको अवलम्बन गरेपछि मात्र प्राप्त गर्न सकिने, **गुरुगुरुः** - आदि देवता ब्रह्माजीलाई वेदको अध्यापन गराएका कारण गुरुका पनि गुरु मानिएका, **घण्टाघर्घरिकामाली** - बालकरूपमा रही घण्टाको झैं मधुर नाद भन्काउने र किङ्किणी धारण गर्ने, **घटकुम्भः** - कलशाकार गण्डस्थलद्वारा सुहाएका, **घटोदरः** - ठूलो पेट भएका ॥८९॥

( ङकारवाच्यो ङाकारो
ङकाराकारशुण्डभृत् । )
चण्डश्चण्डेश्वरसुहृत्
चण्डीशश्चण्डविक्रमः ॥
॥९०॥

( **ङकारवाच्यः** - ब्रह्मा, विष्णु र शिवरूप, **ङाकारः** - ओङ्काररूप, **ङकाराकारशुण्डभृत्** - वक्राकार, लामो सुन्दर सूँड धारण गर्ने ), **चण्डः** - ठूलो पराक्रमले सम्पन्न, **चण्डेश्वरसुहृत्** - शिवभक्त चण्डेश्वरका परममित्र, **चण्डीशः**- चण्डिका देवीका स्वामी, **चण्डविक्रमः** - क्रुद्ध शत्रुहरूमाथि आक्रमण गरी तिनलाई वशमा ल्याउने ॥९०॥

चराचरपतिश्चिन्ता-
मणिचर्वणलालसः ।
छन्दश्छन्दोवपुश्छन्दो-
दुर्लक्ष्यश्छन्दविग्रहः ॥
॥९१॥

**चराचरपतिः** - स्थावर र जङ्गमका स्वामी, **चिन्तामणिचर्वणलालसः** - चिन्तित पदार्थ प्रदान गर्ने सामर्थ्यबाट उत्पन्न चिन्तामणि, कामधेनु र कल्पवृक्षको अहङ्कारलाई चूर्ण चूर्ण बनाउने, **छन्दः** - गायत्री आदि छन्दका आत्मा, **छन्दोवपुः** - छन्दलाई शरीर बनाएर पद्य आदिका रूपमा प्रकाशित हुने, **छन्दोदुर्लक्ष्यः**- वेदद्वारा पनि अप्राप्य, **छन्दविग्रहः**- आफ्नो इच्छानुसार अनेक अवतार लिने ॥९१॥

जगद्योनिर्जगत्साक्षी
जगदीशो जगन्मयः ।
जपो जपपरो जप्यो
जिह्वासिंहासनप्रभुः ॥
॥९२॥

**जगद्योनिः**- विश्वका कारण, **जगत्साक्षी**- विश्वका द्रष्टा, **जगदीशः**- विश्वका ईश्वर, **जगन्मयः**- विश्वका आधार, **जपः**- जपकर्मका रूपमा प्रकाशमान, **जपपरः**- जपकर्ता, **जप्यः**- जप क्रियाका रूपमा वर्तमान, **जिह्वासिंहासनप्रभुः**- जिह्वारूप सिंहासनद्वारा कीर्तित जसको नामले धर्म, अर्थ, काम र मोक्षरूप फल प्रदान गर्दछ ॥९२॥

झलझ्झल्लोल्लसद्दान-
झङ्कारिभ्रमराकुलः ।
टङ्कारस्फारसंराव-
टङ्कारिमणिनूपुरः ॥
॥९३॥

**झलझ्झल्लोल्लसद्दानझङ्कारिभ्रमराकुलः**- गण्डस्थलबाट चम्किलो मदधारा बगिरहेका कारण रमाएर मधुर गुञ्जन गर्ने भमराहरूद्वारा घेरिएका, **टङ्कारस्फारसंरावः**- काँसको भाँडो बजेझैं उच्च नाद गर्ने, **टङ्कारिमणिनूपुरः**- रत्नमय नूपुरको झङ्कारद्वारा झङ्कृत ॥९३॥

ठद्वयीपल्लवान्तस्थ-
सर्वमन्त्रैकसिद्धिद: ।
डिण्डिमुण्डो डाकिनीशो
डामरो डिण्डिमप्रिय: ॥
॥९४॥
ढक्कानिनादमुदितो
ढौको ढुण्ढिविनायक: ॥
॥९५॥
तत्त्वानां परमं तत्त्वं
तत्त्वंपदनिरूपित: ।
तारकान्तरसंस्थान-
स्तारकस्तारकान्तक: ॥
॥९६॥
स्थाणु: स्थाणुप्रिय: स्थाता
स्थावरं जङ्गमं जगत् ।
दक्षयज्ञप्रमथनो
दाता दानवमोहन: ॥
॥९७॥
दयावान् दिव्यविभवो
दण्डभृद् दण्डनायक: ।
दन्तप्रभिन्नाभ्रमालो
दैत्यवारणदारण: ॥
॥९८॥
दंष्ट्रालग्नद्विपघटो
देवार्थनृगजाकृति: ।
धनधान्यपतिर्धन्यो
धनदो धरणीधर: ॥
॥९९॥
ध्यानैकप्रकटो ध्येयो
ध्यानं ध्यानपरायण: ॥
॥१००॥
नन्दो नन्दिप्रियो नादो
नादमध्ये प्रतिष्ठित: ।
निष्कलो निर्मलो नित्यो
नित्यानित्यो निरामय: ॥
॥१०१॥

**ठद्वयीपल्लवान्त:स्थसर्वमन्त्रैकसिद्धिद:** - स्वाहा अन्त्यमा हुने मन्त्रहरूबाट सिद्ध गरिने सम्पूर्ण सिद्धिहरूका मुख्य दाता, **डिण्डिमुण्ड:** - दमाहाको आकारका दुई कुम्भ शिरमा धारण गरी सुहाएका, **डाकिनीश:** - योगिनीहरूका स्वामी, **डामर:**- डामरतन्त्रस्वरूप, **डिण्डिमप्रिय:**- दमाहाको नादबाट आनन्दित ॥९४॥

**ढक्कानिनादमुदित:**- डमरुको ध्वनिद्वारा प्रसन्न, **ढौक:**- सर्वव्यापक अथवा सर्वज्ञ, **ढुण्ढिविनायक:** - विशिष्ट नायकका रूपमा अन्वेषण गर्न योग्य ॥९५॥

**तत्त्वानां परमं तत्त्वम्** - तत्त्वहरूको परमतत्त्वका रूपमा विराजमान, **तत्त्वंपद-निरूपित:** - **'तत्त्वमसि'** आदि श्रुतिवाक्यमा निहित तत् र त्वम् पदबाट निरूपित, **तारकान्तरसंस्थान:** - आँखाको नानीभित्र रहने, **तारक:** - संसारसागरबाट भक्तहरूलाई पार लगाउने, **तारकान्तक:** - तारकासुरका संहारक ॥९६॥

**स्थाणु:**- प्रलयकालका वायु, अग्नि र जलको प्रकोपमा पनि निष्कम्प भएर रहने, **स्थाणुप्रिय:**- शिवजीका प्यारा, **स्थाता** - युद्धमा र कल्पान्तमा पनि आकाशझैं निश्चल भएर रहने, **स्थावरजङ्गमजगद्रूप:** - चराचरमय जगत्का रूपमा विराजमान, **दक्षयज्ञप्रमथन:** - शिवजीका रूपमा प्रकट भई दक्षयज्ञ विध्वंस गर्ने, **दाता** - पतितपावन अर्थात् जस्तो पापीलाई पनि शुद्ध गराउने, **दानवमोहन:** - दानवहरूलाई तत्त्वबाट विमुख गराउने ॥९७॥

**दयावान्** - अरूका दु:खनिवारण गर्न तत्पर, **दिव्यविभव:** - दैवी सम्पत्तिका आधार, **दण्डभृद्** - दण्डनीतिका रक्षक, **दण्डनायक:** - इन्द्र आदि देवताका अधिकारमा रहेका दण्ड र दण्डनीतिका नायक, **दन्तप्रभिन्नाभ्रमाल:** - शिरको कम्पनबाट दाँतद्वारा बादलको पङ्क्तिलाई टुक्रा टुक्रा बनाउने, **दैत्यवारणदारण:** - दैत्यहरूको निवारण र वध गर्ने कार्यमा कुशल ॥९८॥

**दंष्ट्रालग्नद्विपघट:** - जसको एउटा दाह्रामा हात्तीहरूको पङ्क्ति समाहित हुन सक्छ, **देवार्थनृगजाकृति:** - देवताहरूको कार्यसिद्धिका लागि मानिस र हात्तीको आकार भएको रूपले अवतीर्ण, **धनधान्यपति:** - धन-धान्यका स्वामी, **धन्य:**- धन र पुण्यका स्रोत, **धनद:** - कुबेरका रूपमा अवतीर्ण अथवा साधकहरूलाई धन प्रदान गर्ने, **धरणीधर:** - पृथिवीलाई धारण गर्ने शेषनाग र पृथिवीको उद्धार गर्ने वराहका अनन्यरूप ॥९९॥

**ध्यानैकप्रकट:** - भक्तहरूको ध्यानपथमा दृष्टिगोचर हुने, **ध्येय:** - भक्तहरूद्वारा ध्यान गर्न योग्य, **ध्यानम्**- ध्यानक्रियाका रूपमा वर्तमान, **ध्यानपरायण:**- ध्यानक्रियाका अन्तिम लक्ष्य॥१००॥

**नन्द:**- आनन्दरूप, **नन्दिप्रिय:**- नन्दिकेश्वरनामक शिवभक्तलाई स्नेह गर्ने अथवा नन्दिकेश्वरका प्यारा, **नाद:** - अन्तर्ध्वनिका रूपमा विराजमान, **नादमध्य-प्रतिष्ठित:** - नादानुसन्धानबाट प्राप्तव्य, **निष्कल:** - अवयवरहित, **निर्मल:**- निर्दोष, **नित्य:** - अविनाशी, **नित्यानित्य:** - आकाश, पृथिवी आदि नित्यानित्य पदार्थका रूपमा विराजमान, **निरामय:** - अविद्यारूप व्याधिबाट मुक्त ॥१०१॥

परंव्योम परंधाम
परमात्मा परंपदम् ।
परात्परः पशुपतिः
पशुपाशविमोचकः ।।
।।१०२।।

**परंव्योम** – अव्याकृत आकाशस्वरूप, **परंधाम** – ज्योतिहरूका पनि परम ज्योति, **परमात्मा** – सबै जीवहरूभन्दा उत्तम पुरुष, **परंपदम्** – कैलास आदि पदहरूभन्दा पनि उत्तम पदरूप, **परात्परः**– ब्रह्मा, विष्णु र शिवजीभन्दा पनि उत्तम, **पशुपतिः**– कीटदेखि ब्रह्माजीसम्मका सबै जीवहरूका रक्षक, **पशुपाशविमोचकः**– साङ्ख्य आदि शास्त्रहरूमा बताइएका ५२ प्रकारका पाशहरूबाट ब्रह्मा आदि देवतालाई मुक्त गराउने ।।१०२।।

पूर्णानन्दः परानन्दः
पुराणपुरुषोत्तमः ।
पद्मप्रसन्ननयनः
प्रणताज्ञानमोचनः ।।
।।१०३।।

**पूर्णानन्दः** – क्रिया, कर्म र कर्ताको भेदले रहित परमसुख, **परानन्दः** – पृथिवीदेखि ब्रह्मलोकसम्मका सबै सुखभन्दा उत्कृष्ट महानन्दस्वरूप, **पुराणपुरुषोत्तमः** – अनादि उत्तम पुरुष, **पद्मप्रसन्ननयनः** – विकसित कमलझैं आकर्षक नयनहरूद्वारा शोभायमान, **प्रणताज्ञानमोचनः** – शरणागत भक्तहरूको अज्ञानका नाशक ।।१०३।।

प्रमाणप्रत्ययातीतः
प्रणतार्तिनिवारणः ।
फलहस्तः फणिपतिः
फेत्कारः फाणितप्रियः ।।
।।१०४।।

**प्रमाणप्रत्ययातीतः** – प्रमाण र प्रमेयदेखि पर रहेको नित्यज्ञानले सम्पन्न, **प्रणतार्तिनिवारणः** – शरणागत भक्तहरूका तीन प्रकारका तापहरूका नाशक, **फलहस्तः** – भक्तहरूलाई अतिशीघ्र फल प्रदान गर्ने, **फणिपतिः** – वासुकि र शेषनागका स्वामी, **फेत्कारः** – फेत्कारतन्त्रद्वारा प्रतिपाद्य, **फाणितप्रियः** – सख्खर र खुदो रुचाउने ।।१०४।।

बाणार्चिताङ्घ्रियुगलो
बालकेलिकुतूहली ।
ब्रह्म ब्रह्मार्चितपदो
ब्रह्मचारी बृहस्पतिः ।।
।।१०५।।

**बाणार्चिताङ्घ्रियुगलः** – बाणासुरद्वारा चरणकमलमा आराधित, **बालकेलिकुतूहली**– बाललीला गर्न अत्यन्त उत्सुक, **ब्रह्म** – वेदान्तवेद्य परमात्मा, **ब्रह्मार्चितपदः**– वेदहरूद्वारा चरणकमलमा आराधित, **ब्रह्मचारी** – स्त्रीसङ्ग्रहरहित, **बृहस्पतिः** – वाचस्पतिका रूपमा देवताहरूद्वारा आराधित ।।१०५।।

बृहत्तमो ब्रह्मपरो
ब्रह्मण्यो ब्रह्मवित्प्रियः ।
बृहन्नादाग्र्यचीत्कारो
ब्रह्माण्डावलिमेखलः ।।
।।१०६।।

**बृहत्तमः** – ब्रह्मा आदि देवताहरूभन्दा पनि महान्, **ब्रह्मपरः** – वेदानुशीलनको कार्यमा ब्रह्माजीभन्दा पनि अग्रगण्य, **ब्रह्मण्यः** – ब्रह्मवेत्ता र ब्राह्मणहरूको सम्मान गर्ने, **ब्रह्मवित्प्रियः** – ब्रह्मज्ञहरूका प्यारा, **बृहन्नादाग्र्यचीत्कारः** – मेघगर्जन र वज्रध्वनिभन्दा पनि डरलाग्दो चीत्कार गर्ने, **ब्रह्माण्डावलिमेखलः** – कन्धनीमा किङ्किणीहरू रहेझैं देहमा अनन्त ब्रह्माण्डलाई मेखला बनाएर धारण गर्ने ।।१०६।।

भ्रूक्षेपदत्तलक्ष्मीको
भर्गो भद्रो भयापहः ।
भगवान् भक्तिसुलभो
भूतिदो भूतिभूषणः ।।
।।१०७।।

**भ्रूक्षेपदत्तलक्ष्मीकः** – कटाक्षको सङ्केतबाट मात्र भक्तहरूलाई अनन्त ऐश्वर्य उपलब्ध गराउने, **भर्गः** – गायत्रीद्वारा आराधित तेजोरूप, **भद्रः** – भद्र, मन्द्र, मृग आदि दुबैतर्फ दाँत हुने मृगहरूमा उत्तम भद्रजातिसमान मुखाकृति धारण गर्ने, **भयापहः** – भक्तहरूको अज्ञान र भयहरण गरी तिनलाई ब्रह्मबोध प्रदान गर्ने, **भगवान्**– प्राणीहरूका उत्पत्ति, विनाश, दुर्गति, गति, विद्या र अविद्यासम्बन्धी सम्पूर्ण ज्ञान धारण गर्ने, **भक्तिसुलभः**– भक्तहरूको भक्तिभावद्वारा प्राप्त गरिने, **भूतिदः** – भक्तहरूलाई सिद्धि प्रदान गर्ने, **भूतिभूषणः** – भस्मलाई अलङ्कारका रूपमा धारण गर्ने ।।१०७।।

भव्यो भूतालयो भोग-
दाता भ्रूमध्यगोचर: ।
मन्त्रो मन्त्रपतिर्मन्त्री
मदमत्तमनोरम: ।।
।।१०८।।

**भव्य:** - कल्याणरूप अथवा विश्वात्मा, **भूतालय:** - पृथिवी, जल आदि पञ्चभूत, पिशाच आदि शरीरधारी अथवा अतीतकालका आश्रय, **भोगदाता**- प्राणीहरूलाई कर्म-अनुसार सुख-दु:ख प्रदान गर्ने, **भ्रूमध्यगोचर:** - आँखीभौंका बीचमा ध्यान गरिने, **मन्त्र:** - साम आदि वैदिक मन्त्र, षड्क्षरी आदि तान्त्रिक मन्त्र र राज्यसञ्चालनका लागि गरिने एकान्त मन्त्रणाका मूल आधार अथवा तिनका अधिष्ठात्री देवताका रूपमा वर्तमान, **मन्त्रपति:**- उक्त सबै मन्त्रहरूका स्वामी, **मन्त्री**- उपर्युक्त अनेक थरि मन्त्रहरू धारण गर्ने, **मदमत्तमनोरम:** - समाधिजनित ध्येयाकार चित्तवृत्तिमा रमाउने ।।१०८।।

मेखलावान् मन्दगति-
र्मतिमत्कमलेक्षण:।
महाबलो महावीर्यो
महाप्राणो महामना: ।।
।।१०९।।

**मेखलावान्** - कम्मरमा मौञ्जी अथवा मेखला धारण गर्ने, **मन्दगति:** - ज्ञान र कर्ममा रुचि नभएका मन्दबुद्धि प्राणीहरूका अन्तिम आश्रय, **मतिमत्कमलेक्षण:** - आफ्नो दृष्टिबाट मात्र भक्तहरूलाई बुद्धि, ज्ञान र ऐश्वर्य प्रदान गर्ने, **महाबल:** - बलका आधार, **महावीर्य:** - पराक्रमका महान् स्रोत, **महाप्राण:** - उन्नत प्राणशक्ति अथवा जीवनशक्तिका स्वामी, **महामना:** - उदार एवं सत्य सङ्कल्पले अनुप्राणित चित्तका स्वामी।।१०९।।

यज्ञो यज्ञपतिर्यज्ञ-
गोप्ता यज्ञफलप्रद: ।
यशस्करो योगगम्यो
याज्ञिको याजकप्रिय: ।।
।।११०।।

**यज्ञ:** - यज्ञका रूपमा प्रसिद्ध, **यज्ञपति:** - वाजपेय, राजसूय आदि यज्ञहरूका स्वामी, **यज्ञगोप्ता**- यज्ञका रक्षक, **यज्ञफलप्रद:**- यज्ञका फलदाता, **यशस्कर:**- कीर्तिदायक, **योगगम्य:** - ध्यान, धारणा, समाधि आदि योगका अङ्गहरूद्वारा प्राप्त गर्न सकिने, **याज्ञिक:** - यज्ञ गर्ने यजमानका रूपमा वर्तमान, **याजकप्रिय:** - यज्ञसम्पादन गराउने विद्वान्हरूका प्यारा ।।११०।।

रसो रसप्रियो रस्यो
रञ्जको रावणार्चित: ।
रक्षोरक्षाकरो रत्न-
गर्भो राज्यसुखप्रद: ।।
।।१११।।

**रस:** - परम आनन्दस्वरूप, **रसप्रिय:** - शान्त आदि काव्यरस र मधुर आदि पदार्थरस मन पराउने, **रस्य:** - विद्वान् र रसिकहरूद्वारा परम आनन्दका रूपमा आस्वाद्य, **रञ्जक:** - विद्वान् र रसिकहरूको मनोवृत्तिलाई आनन्दित तुल्याउने, **रावणार्चित:** - सिद्धिप्राप्तिका लागि लङ्काधिपति रावणद्वारा आराधित, **रक्षोरक्षाकर:**- राक्षसहरूलाई भस्म गर्ने, **रत्नगर्भ:**- रत्नगर्भा अर्थात् पृथिवीका रूपमा रहेका अथवा रत्नगर्भापृथिवीमा आश्रित, **राज्यसुखप्रद:**- भक्तहरूलाई राज्य र जीवनको सुख प्रदान गर्ने ।।१११।।

लक्ष्यं लक्ष्यप्रदो लक्ष्यो
लयस्थो लड्डूकप्रिय: ।
लानप्रियो लास्यपरो
लाभकृल्लोकविश्रुत: ।।
।।११२।।

**लक्ष्यम्** - योगीहरूद्वारा ओङ्काररूप धनुमा चित्तरूप बाण जोडी वेधन गरिने लक्ष्यरूप परमात्मा, **लक्ष्यप्रद:** - चित्तको स्थिरताका लागि ऋषिहरूले बताएका अनेकौं उपायहरूको बोध गराउने, **लक्ष्य:** - **तत्त्वमसि** आदि पद र लक्षणाशक्तिद्वारा जानिने, **लयस्थ:** - कल्पकाल र चित्तको लयावस्थामा समेत साक्षीका रूपमा वर्तमान, **लड्डूकप्रिय:** - मोदक अथवा लड्डू मन पराउने, **लानप्रिय:** - हात्तीशालामा बस्न रुचाउने, **लास्यपर:** - विलासभूमिका रूपमा रहेको आफ्नो स्वानन्दभुवनमा लास्यक्रीडा गरी रमाउने, **लाभकृल्लोकविश्रुत:** - भक्तहरूलाई उत्तम फल अर्थात् सुख प्रदान गर्ने स्वर्ग आदि लोकहरूमा उत्तम देवताका रूपमा वर्तमान ।।११२।।

वरेण्यो वह्निवदनो
वन्द्यो वेदान्तगोचरः ।
विकर्ता विश्वतश्चक्षु-
र्विधाता विश्वतोमुखः ।।
।।११३।।

**वरेण्यः** - आफूलाई एकमात्र आराध्य मानी उपासना गर्ने राजा वरेण्यका रूपमा रहनुभएका अथवा सबैद्वारा स्वीकार गर्न योग्य उत्तम देवता, **वह्निवदनः** - यज्ञको अग्निमा अर्पण गरिएको हविद्वारा तृप्ति प्राप्त गर्ने, **वन्द्यः** - सबैद्वारा नमस्कार गर्न योग्य, **वेदान्तगोचरः** - उपनिषद्हरूद्वारा वन्दनीय, **विकर्ता**- उत्पत्ति, वृद्धि, बाल्य, प्रौढता, मरणजस्ता विकारका आधार, **विश्वतश्चक्षुः** - आफ्ना भक्तले जहाँ-जहाँ पत्र, पुष्प र जल अर्पण गर्दछन् त्यहाँ-त्यहाँ पुगेर ती अर्पित वस्तुलाई ग्रहण गर्ने परमात्मा, **विधाता**- भक्तहरूद्वारा भक्तिपूर्वक अर्पण गरिएका पत्र, पुष्प र फल स्वीकार गर्ने, **विश्वतोमुखः** - भक्तहरूद्वारा समर्पित नैवेद्य र फल भोजन गर्ने ।।११३।।

वामदेवो विश्वनेता
वज्रिवज्रनिवारणः ।
विश्वबन्धनविष्कम्भा-
धारो विश्वेश्वरप्रभुः ।।
।।११४।।

**वामदेवः** - सुन्दर स्वरूपद्वारा सुहाएका, **विश्वनेता** - संसार अथवा भगवान् विष्णुका नायक, **वज्रिवज्रनिवारणः** - इन्द्रद्वारा प्रहार गरिने वज्रलाई निष्क्रिय तुल्याउने, **विश्वबन्धनविष्कम्भाधारः** - विश्वनिर्माण गर्ने सामग्रीहरूको सङ्कलन केन्द्र विष्कम्भका आधार, **विश्वेश्वरप्रभुः** - ब्रह्माण्डनायकहरूका पनि नायक ।।११४।।

शब्दब्रह्म शमप्राप्यः
शम्भुशक्तिगणेश्वरः ।
शास्ता शिखाग्रनिलयः
शरण्यःशिखरीश्वरः ।।
।।११५।।

**शब्दब्रह्म** - परा वाणीभन्दा पर रहेको नादब्रह्मका रूपमा शोभायमान, **शमप्राप्यः**- शम-दमजस्ता अध्यात्मसाधनाका उपायद्वारा प्राप्त गर्न सकिने, **शम्भुशक्तिगणेश्वरः** - शिवगण र शक्तिगणका नियामक, **शास्ता** - शास्तानामक शक्तिका रूपमा अवतीर्ण, **शिखाग्रनिलयः** - शास्तानामक शक्तिको शिखामा विराजमान, **शरण्यः** - सबैका त्राणदाता, **शिखरीश्वरः** - हिमालयका रूपमा विराजमान ।।११५।।

षड्ऋतुकुसुमस्रग्वी
षडाधारः षडक्षरः ।
संसारवैद्यः सर्वज्ञः
सर्वभेषजभेषजम् ।।
।।११६।।

**षड्ऋतुकुसुमस्रग्वी**- विभिन्न ऋतुमा पैदा हुने जाती, चम्पक, कुन्द आदि पुष्पहरूको माला धारण गर्ने, **षडाधारः**- मूलाधार चक्रमा रहेर सबै चक्रहरूलाई धारण गर्ने, **षडक्षरः**- 'वक्रतुण्डाय हुम्' नामक ६ अक्षरको मन्त्रका रूपमा विराजमान, **संसारवैद्यः** - मायिक प्रपञ्चमा आइलाग्ने जन्म, जरा, मृत्यु, आधि, व्याधिजस्ता रोगहरूका निवारक, **सर्वज्ञः** - सकल विषयका ज्ञाता अथवा बुद्धका रूपमा अवतीर्ण, **सर्वभेषजभेषजम्**- सम्पूर्ण रोगहरूका विनाशक दिव्य अमृतमा आइलाग्ने विकार एवं दोषका निवारक ।।११६।।

सृष्टिस्थितिलयक्रीडः
सुरकुञ्जरभेदनः ।
सिन्दूरितमहाकुम्भः
सदसद्व्यक्तिदायकः ।।
।।११७।।

**सृष्टिस्थितिलयक्रीडः**- सम्पूर्ण लोकहरूको सृष्टि, पालन र संहाररूप क्रीडामा रमाउने, **सुरकुञ्जरभेदनः**- दानवहरूद्वारा अर्चित हुनाले कहिलेकाहीँ देवतारूप हात्तीहरूलाई तह लगाउने, **सिन्दूरितमहाकुम्भः**- सिन्दूरले रङ्गिएको मस्तक धारण गर्ने, **सदसद्व्यक्तिदायकः** - भक्तहरूलाई ब्रह्मको नित्यता र जगत्को अनित्यताजस्ता विषयको पारमार्थिकज्ञान प्रदान गर्ने ।।११७।।

साक्षी समुद्रमथनः
स्वसंवेद्यः स्वदक्षिणः ।
स्वतन्त्रः सत्यसङ्कल्पः
सामगानरतः सुखी ।।
।।११८।।

**साक्षी** - विना चित्त स्वयं साक्षीका रूपमा विश्वदर्शन गर्ने, **समुद्रमथनः** - समुद्रमथनको आरम्भमा देवताहरूद्वारा पूजित, **स्वसंवेद्यः** - स्वयंप्रकाश, **स्वदक्षिणः**- स्वयं समर्थ, **स्वतन्त्रः** - जगत्का लागि नाना तन्त्रहरूको प्रवर्तन गर्ने तर आफू भने आफ्नै तन्त्रअनुसार शोभायमान, **सत्यसङ्कल्पः**- सत्य र शिव सङ्कल्पका स्रोत, **सामगानरतः**- सामवेदमा प्रीति गरी त्यसको गायनमा संलग्न, **सुखी**- जुनसुकै अवस्थामा पनि आनन्दपूर्वक विराजमान ।।११८।।

**हंसो हस्तिपिशाचीशो**
**हवनं हव्यकव्यभुक् ।**
**हव्यं हुतप्रियो हर्षो**
**हृल्लेखामन्त्रमध्यगः ।।**
**।।११९।।**

**हंसः** – हंस उपाधि पाउने सन्यासीहरूमा प्रकाशमान अथवा सूर्यमूर्तिका रूपमा प्रकाशमान, **हस्तिपिशाचीशः** – **'हस्तिपिशाचीशाय स्वाहा'** यस नवार्णमन्त्रका देवता, **हवनम्** – हविअर्पणरूप यज्ञका रूपमा विराजमान, **हव्यकव्यभुक्** – देवता र पितृका रूपमा क्रमशः हव्य र कव्य ग्रहण गर्ने, **हव्यः** – हविरूप ब्रह्म, **हुतप्रियः** – हवि मन पराउने, **हर्षः**:- हविग्रहण गर्दा प्राप्त हुने हर्षका रूपमा प्रतीयमान, **हृल्लेखामन्त्रमध्यगः**:- तन्त्रमा प्रतिपादित हल्लेखामन्त्रका मध्यमा रही ह्रीङ्कारद्वारा आराधित ।।११९।।

**क्षेत्राधिपः क्षमाभर्ता**
**क्षमापरपरायणम् ।**
**विप्रक्षेमकरः क्षेमा-**
**नन्दः क्षोणीसुरद्रुमः ।।**
**।।१२०।।**

**क्षेत्राधिपः** – प्रयाग आदि पुण्यक्षेत्रका स्वामी अथवा शरीर आदि क्षेत्रका स्वामी, **क्षमाभर्ता** – पृथिवीका अथवा सहनशीलताका आधार, **क्षमापरपरायणः** – क्षमागुणले सुहाएका तपस्वीहरूद्वारा प्राप्त गर्न योग्य, **क्षिप्रक्षेमकरः** – अतिशीघ्र सिद्धि र मङ्गल प्रदान गर्ने, **क्षेमानन्दः** – संसारको सुख र मोक्षसुखका रूपमा विराजमान, **क्षोणीसुरद्रुमः**:- पृथिवीमा निवास गर्ने साधकहरूलाई कल्पवृक्षले झैं धर्म आदि इष्टपदार्थ प्रदान गर्ने।।१२०।।

**धर्मप्रदोऽर्थदः काम-**
**दाता सौभाग्यवर्द्धनः ।**
**विद्याप्रदो विभवदो**
**भुक्तिमुक्तिप्रदायकः ।।**
**।।१२१।।**

**धर्मप्रदः** – धर्म प्रदान गर्ने, **अर्थदः** – अर्थ प्रदान गर्ने, **कामदाता**– कामना परिपूर्ण गर्ने, **सौभाग्यवर्द्धनः** – नारीहरूलाई सौभाग्य प्रदान गर्ने, **विद्याप्रदः**:- ज्ञान दिने, **विभवदः** – सम्पत्ति प्रदान गर्ने, **भुक्तिमुक्तिप्रदायकः** – सांसारिक सुखभोग र जीवन्मुक्तिजस्ता फल प्रदान गर्ने ।।१२१।।

**आभिरूप्यकरो वीर-**
**श्रीप्रदो विजयप्रदः ।**
**सर्ववश्यकरो गर्भ-**
**दोषहा पुत्रपौत्रदः ।।**
**।।१२२।।**

**आभिरूप्यकरः** – सभ्यहरूका सामु धनीसँग गरीब र पण्डितसँग मूर्खको समानता देखाउँदै सबैमा एउटै आत्मा रहेको शिक्षा प्रदान गर्ने, **वीरश्रीप्रदः** – हे प्रभु! युद्धमा कुन दिशातर्फ भागौं भनी दौडिरहेका कातर योद्धाहरूलाई वीरोचित वीर्य र शौर्यको तेज प्रदान गर्ने, **विजयप्रदः** – नामस्मरण गर्ने योद्धाहरूलाई विजयश्री प्रदान गर्ने, **सर्ववश्यकरः** – भक्तका वशीभूत भएर तिनलाई सर्वस्व दिने, **गर्भदोषघ्नः** – स्राव र पात आदि गर्भदोष निवारण गर्ने, **पुत्रपौत्रदः** – सांसारिक एषणा भएका आफ्ना भक्तहरूलाई छोरा-नाति आदिले परिपूर्ण तुल्याउने ।।१२२।।

**मेधादः कीर्तिदः शोक-**
**हारी दौर्भाग्यनाशनः ।**
**( श्रीशोकहारी दौर्भाग्य-**
**नाशनः सर्वशक्तिभृत् ।।**
**।।१२३।। )**

**मेधादः** – भक्तहरूलाई धारणासम्पन्न बुद्धि प्रदान गर्ने, **कीर्तिदः** – सद्गुणबाट उत्पन्न हुने कीर्ति दिएर भक्तहरूलाई भाग्यशाली तुल्याउने, **शोकहारी** – सुपात्र भक्तलाई उत्तम ज्ञान दिएर संसारको शोकबाट मुक्त गराउने, **दौर्भाग्यनाशनः**:- नारीहरूको दुर्भाग्य नाश गर्ने, (**श्रीशोकहारी** – लक्ष्मीका शोकनाशक, **दौर्भाग्यनाशनः** – दुर्भाग्य समाप्त गर्ने, **सर्वशक्तिभृत्** – सम्पूर्ण शक्तिहरूलाई धारण गर्ने) ।।१२३।।

**प्रतिवादिमुखस्तम्भो**
**रुष्टचित्तप्रसादनः ।**
**पराभिचारशमनो**
**दुःखभञ्जनकारकः ।।**
**।।१२४।।**

**प्रतिवादिमुखस्तम्भः**:- प्रतिकूल भाषा बोलिरहेका दुष्टहरूको वाणीस्तम्भन गरिदिने, **रुष्टचित्तप्रसादनः** – सेवकहरूसँग रिसाएका शासकहरूको चित्त शुद्ध गरी त्यसमा प्रसन्नता भरिदिने, **पराभिचारशमनः** – शत्रुहरूद्वारा प्रयोग गरिएका मारण आदि अभिचारलाई निष्फल तुल्याइदिने, **दुःखभञ्जनकारकः** – भक्तहरूका सबै प्रकारका दुःखहरू नाश गरिदिने ।।१२४।।

लवस्त्रुटि: कला काष्ठा
निमेषस्तत्पर: क्षण: ।
घटी मुहूर्त: प्रहरो
दिवा नक्तमहर्निशम् ।।
।।१२५।।

**लव**:- हजार कमलका पात एक ठाउँमा राखी मसिनो सुइराले माथिबाट सबै कमलका पात छेड्दा एउटा पात छेड्न जति समय लाग्छ त्यो काल लव हो, त्यसै लवको रूपमा वर्तमान, **त्रुटि: -** एक हजार लवको परिमाणकाल त्रुटिका रूपमा रहेका, **तत्पर**: - सय त्रुटिपरिमाणको काल तत्परका रूपमा रहेका, **निमेष**: - तीस तत्परपरिमाणको काल निमेषका रूपमा रहेका, **काष्ठा**- अठार निमेषको कालपरिमाण काष्ठाका रूपमा रहेका, **कला** - तीस काष्ठापरिमाणको कालबाट निष्पन्न हुने कलाका रूपमा रहेका, **क्षण**: - तीस कलापरिमाणको काल क्षणका रूपमा रहेका, **घटी** - ६ क्षणपरिमाणको काल घटीका रूपमा रहेका, **मुहूर्तम्** - दुई घटीपरिमाणको काल मुहूर्तका रूपमा रहेका, **प्रहर**: - चार मुहूर्तपरिमाणको काल प्रहरका रूपमा रहेका, **दिवा** - चार प्रहरपरिमाणको काल दिनका रूपमा रहेका, **नक्तम्** - त्यसैगरी चार प्रहरपरिमाणको काल रात्रिका रूपमा रहेका, **अहर्निशम्**- आठ प्रहरपरिमाणको काल दिनरातका रूपमा रहेका ।।१२५।।

पक्षो मासोऽयनं वर्षं
युगं कल्पो महालय: ।
राशिस्तारा तिथिर्योगो
वार: करणमंशकम् ।।
।।१२६।।

**पक्ष**:- पन्ध्र दिनरातपरिमाणको काल पक्षका रूपमा रहेका, **मास**:- दुई पक्षपरिमाणको काल महिनाका रूपमा रहेका, **अयनम्**- ६ महिना परिमाणको काल अयनका रूपमा रहेका, **वर्षम्** - दुई अयनपरिमाणको काल वर्षका रूपमा रहेका, **युगम्** - तीन सय साठी वर्षको एक दिव्यवर्ष हुन्छ र त्यस्ता बाह्र हजार दिव्यवर्षबाट एउटा चतुर्युग बन्दछ, त्यस्तो चतुर्युगको रूपमा रहेका, **कल्प**: - एक हजार चतुर्युगबाट निष्पन्न हुने कालपरिमाण कल्पका रूपमा रहेका, **महालय**: - बहत्तर हजार कल्पबाट हुने काललाई ब्रह्माजीको महालय भनिन्छ, त्यस महालयको रूपमा वर्तमान, **राशि**:- मेष आदि १२ राशिका रूपमा रहेका, **तारा**- कृत्तिका आदि २७ नक्षत्रका रूपमा रहेका, **तिथि**:- प्रतिपदा आदि तिथिका रूपमा रहेका, **योग**: - विष्कुम्भ एवं अमृतसिद्धि आदि योगका रूपमा रहेका, **वार**: - रविवार आदि ७ वारका रूपमा रहेका, **करणम्** - वव आदि करणका रूपमा रहेका, **अंशकम्** - प्रतिनक्षत्र ४ अंशका रूपमा रहेका ।।१२६।।

लग्नं होरा कालचक्रं
मेरु: सप्तर्षयो ध्रुव: ।
राहुर्मन्द: कविर्जीवो
बुधो भौम: शशी रवि: ।।
।।१२७।।

**लग्नम्**- राशिको उदयरूप लग्नका रूपमा रहेका, **होरा**- लग्नको आधा भाग मानिने होराका रूपमा रहेका, **कालचक्रम्**- शिशुमारचक्रका रूपमा रहेका, **मेरु**:- सुमेरुपर्वतका रूपमा रहेका, **सप्तर्षय**:- कश्यप आदि सप्तर्षिका रूपमा रहेका, **ध्रुव**:- उत्तानपाद राजाका छोरा ध्रुवका रूपमा रहेका, **राहु**:- सिंहिकापुत्र राहुका रूपमा रहेका, **मन्द**:- शनैश्चरका रूपमा रहेका, **कवि**:- शुक्रका रूपमा रहेका, **जीव**:- बृहस्पतिका रूपमा रहेका, **बुध**:- बुधका रूपमा रहेका, **भौम**:- मङ्गलका रूपमा रहेका, **शशी** - चन्द्रमा रूपमा रहेका, **रवि**: - सूर्यका रूपमा रहेका ।।१२७।।

काल: सृष्टि: स्थितिर्विश्वं
स्थावरं जङ्गमं च यत् ।
भूरापोऽग्निर्मरुद्व्योमा-
हंकृति: प्रकृति: पुमान् ।।
।।१२८।।

**काल**: - संहारक्रियाका रूपमा रहेका, **सृष्टि**: - सृष्टिक्रियाका रूपमा रहेका, **स्थिति**: - पालनक्रियाका रूपमा रहेका, **स्थावरजङ्गमात्मकं विश्वम्** - स्थावर एवं जङ्गम तत्त्वले परिपूर्ण विश्वका रूपमा प्रकाशमान, **भू**: - पृथिवीरूप, **आप**: - जलरूप, **अग्नि**: - अग्निरूप, **मरुद्**- वायुरूप, **व्योम**- आकाशरूप, **अहंकृति**:- अहङ्काररूप, **प्रकृति**:- मूलकारणरूप, **पुमान्** - प्रकृत्यादि भिन्न पच्चीसौं पुरुषतत्त्वरूप ।।१२८।।

ब्रह्मा विष्णु: शिवो रुद्र
ईश: शक्ति: सदाशिव: ।
त्रिदशा: पितर: सिद्धा
यक्षा रक्षांसि किन्नरा: ।।
।।१२९।।

**ब्रह्मा** - सृष्टिकर्ताको रूपमा वर्तमान, **विष्णु**:- पालनकर्ताको रूपमा वर्तमान, **शिव**: - संहारकर्ताको रूपमा वर्तमान, **रुद्र**:- एकादश रुद्ररूप, **ईश**: - कामेशरूप, **शक्ति**: - कामेशीरूप, **सदाशिव**: - सदाशिवरूप, **त्रिदशा**: - देवतारूप, **पितर**: - अर्यमादि पितृरूप, **सिद्धा**: - सिद्धयोनिरूप, **यक्षा**:- यक्षजातिरूप, **रक्षांसि** - राक्षसगणरूप, **किन्नरा**: - किन्नरजातिरूप ।।१२९।।

साध्या विद्याधरा भूता
मनुष्याः पशवः खगाः ।
समुद्राः सरितः शैला
भूतं भव्यं भवोद्भवः ।।
।।१३०।।

**साध्याः**- साध्यगणरूप, **विद्याधराः**- विद्याधरका नामबाट प्रसिद्ध देवयोनिरूप, **भूताः**- समस्त प्राणिरूप, **मनुष्याः**- मनुष्यजातिरूप, **पशवः**- पशुजातिरूप, **खगाः**- पक्षिजातिरूप, **समुद्राः**- सात समुद्ररूप, **सरितः**- नदीसमूहरूप, **शैलाः** - पर्वतगणरूप, **भूतम्**- अतीत कालरूप, **भव्यम्**- भावी कालरूप, **भवोद्भवः** - शिवपुत्ररूप अथवा संसारका उत्पत्तिकारण ।।१३०।।

साङ्ख्यं पातञ्जलं योगः
पुराणानि श्रुतिः स्मृतिः ।
वेदाङ्गानि सदाचारो
मीमांसा न्यायविस्तरः ।।
।।१३१।।

**साङ्ख्यम्**- कपिलोक्त साङ्ख्यदर्शनरूप, **पातञ्जलम्**- पतञ्जलिद्वारा प्रतिपादित शास्त्रस्वरूप, **योगः** - पतञ्जलिद्वारा प्रतिपादित योगशास्त्रस्वरूप, **पुराणानि**- महापुराण र उपपुराणस्वरूप, **श्रुतिः**- वेदरूप, **स्मृतिः**- स्मृतिरूप, **वेदाङ्गानि**- शिक्षा, कल्प, ज्योतिष, निरुक्त, व्याकरण र छन्दका रूपमा वर्तमान, **सदाचारः** - सज्जनहरूको विशिष्ट आचारका रूपमा वर्तमान, **मीमांसा** - पूर्वमीमांसा र उत्तरमीमांसाका स्वरूपमा वर्तमान, **न्यायविस्तरः**- कणाद र गौतमद्वारा प्रणीत न्यायशास्त्रका रूपमा वर्तमान।।१३१।।

आयुर्वेदो धनुर्वेदो
गान्धर्वं काव्यनाटकम् ।
वैखानसं भागवतं
सात्वतं पाञ्चरात्रकम् ।।
।।१३२।।

**आयुर्वेदः**- ऋग्वेदको उपवेद मानिएको आयुर्वेदका स्वरूपमा वर्तमान, **धनुर्वेदः**- यजुर्वेदको उपवेद मानिएको धनुर्वेदका रूपमा वर्तमान, **गान्धर्वम्** - सामवेदको उपवेद मानिएको गान्धर्ववेदका रूपमा वर्तमान, **काव्यनाटकम्**- श्रव्य र दृश्यकाव्यका रूपमा वर्तमान, **वैखानसम्**- विष्णुसँग सम्बद्ध वैखानसनामक आगमका रूपमा वर्तमान, **भागवतम्** - विष्णुसँग सम्बद्ध भागवतनामक आगमका रूपमा वर्तमान, **सात्वतम्** - विष्णुसँग सम्बद्ध सात्वतनामक आगमका रूपमा वर्तमान, **पाञ्चरात्रकम्** - विष्णुसँग सम्बद्ध पाञ्चरात्रनामक आगमका रूपमा वर्तमान ।।१३२।।

शैवं पाशुपतं काल-
मुखं भैरवशासनम् ।
शाक्तं वैनायकं सौरं
जैनमार्हतसंहिता ।।
।।१३३।।

**शैवम्**- शैवतन्त्ररूप, **पाशुपतम्**- पशुपतिसँग सम्बद्ध शैवदर्शनरूप, **कालामुखम्**- कालामुखनामक शैवदर्शनका रूपमा स्थित, **भैरवशासनम्**- भैरवसँग सम्बद्ध भैरवतन्त्र-नामक आगमका रूपमा स्थित, **शाक्तम्**- शक्तितन्त्रस्वरूप, **वैनायकम्** - गणपतितन्त्ररूप, **सौरम्**- सूर्यतन्त्ररूप, **जैनम्**- जैनतन्त्ररूप, **आर्हतसंहिता** - बौद्धतन्त्ररूप ।।१३३।।

सदसद् व्यक्तमव्यक्तं
सचेतनमचेतनम् ।
बन्धो मोक्षः सुखं भोगोऽ-
योगः सत्यमणुर्महान् ।।
।।१३४।।

**सत्** - कार्यको रूपमा उपस्थित हुने कारणरूप सत्यतत्त्व, **असत्** - कार्यरूपमा उपस्थित नहुने कारणरूप असत्यतत्त्व, **व्यक्तम्** - कार्यरूपमा प्रकट हुने तत्त्व, **अव्यक्तम्**- कारणरूपमा अवस्थित तत्त्व, **सचेतनम्** - प्राणीमात्रको रूपमा वर्तमान तत्त्व, **अचेतनम्**- आकाशादि रूपमा वर्तमान तत्त्व, **बन्धः** - आत्मामा अनात्मा र अनात्मामा आत्माको भ्रमका रूपमा वर्तमान, **मोक्षः** - अविद्यानाश, **सुखम्** - अविद्यानाशपछि प्राप्त हुने सुखका रूपमा वर्तमान, **भोगः** - अनुभवात्मक भोगका रूपमा वर्तमान, **अयोगः** - निस्सङ्गावस्थारूप, **सत्यम्**- निर्बाधरूपमा प्रकाशित हुने सत्यतत्त्व, **अणुः**- पाँच ज्ञानेन्द्रिय र छैठौं मनद्वारा पनि प्राप्त गर्न नसकिने अणुरूप तत्त्व, **महान्**- अनिर्वचनीय र असीमित आनन्दका रूपमा वर्तमान ।।१३४।।

स्वस्ति हुं फट् स्वधा स्वाहा
श्रौषड्वौषड्वषण्नमः ।
ज्ञानं विज्ञानमानन्दो
बोधः संविच्छमो यमः ।।
।।१३५।।

**स्वस्ति** - परम कल्याणरूप, **हुम्**- सत्य तत्त्वबाहेक अरू तत्त्वलाई हटाउने, **फट्** - भक्तहरूका निमित्त सत्य तत्त्वबाहेक अरू तत्त्व निराकरण गर्ने मात्र नभएर विनाश पनि गर्ने, **स्वधा**- स्वधा भनेर गरिने कर्मरूप, **स्वाहा** - स्वाहा भनेर गरिने कर्मरूप, **श्रौषट्** - श्रौषट् शब्द भनेर गरिने कर्मरूप, **वौषट्** - वौषट् शब्द भनेर गरिने कर्मरूप, **वषट्** - वषट् शब्द भनेर गरिने कर्मरूप, **नमः** - नमः भनेर गरिने कर्मरूप, **ज्ञानम्**- मोक्षबुद्धिरूप, **विज्ञानम्** - प्रपञ्चबुद्धिरूप, **आनन्दः** - प्रत्यगानन्दरूप, **बोधः**- प्रत्यगबोधरूप, **संवित्**- बाह्यवृत्तिलाई निवारण गर्ने बुद्धि अथवा ज्ञान, **शमः** - अशान्तिजनक तत्त्व निवारण गर्ने शमका रूपमा वर्तमान, **यमः** - सम्पूर्ण प्रपञ्चबाट उपरत ।।१३५।।

एक एकाक्षराधार
एकाक्षरपरायणः ।
एकाग्रधीरेकवीर
एकानेकस्वरूपधृक् ।।
।।१३६।।

एकः - स्वगत, सजातीय र विजातीय गरी तीन प्रकारका भेदले रहित अद्वितीय तत्त्वका रूपमा वर्तमान, **एकाक्षराधारः** - गं बीजरूप एकाक्षरमा आश्रित, **एकाक्षरपरायणः**- ओङ्काररूप एकाक्षरमा विराजमान, **एकाग्रधीः** - आत्मासम्म पुऱ्याउने तत्त्वबुद्धिका रूपमा वर्तमान, **एकवीरः** - जगत्तत्त्वलाई आत्मतत्त्वमा लीन गराउने कार्यमा पराक्रमी, **एकानेकस्वरूपधृक्** - प्रत्येक प्राणीमा रहेकाले अनेकरूपमा र एकरूपमा वर्तमान ।।१३६।।

द्विरूपो द्विभुजो द्व्यक्षो
द्विरदो द्वीपरक्षकः ।
द्वैमातुरो द्विरदनो
द्वन्द्वातीतो द्वयातिगः ।।
।।१३७।।

**द्विरूपः** - जीवात्मा र परमात्माका रूपमा वर्तमान, **द्विभुजः** - दुई हातले सुहाएका, **द्व्यक्षः** - दुई आँखाले सुहाएका, **द्विरदः** - दुई दाँतले सुहाएका, **द्वीपरक्षकः**- सातै द्वीपका पालक, **द्वैमातुरः**- पार्वती र गङ्गा नामक दुई आमाहरूका छोराका रूपमा प्रसिद्ध, **द्विवदनः**- अग्निमूर्ति र आत्ममूर्तिका रूपमा वर्तमान, **द्वन्द्वातीतः**- वर्षा, गर्मी, जाडो आदि द्वन्द्वबाट पर रहेका, **द्वयातिगः**- तमोगुण र रजोगुणदेखि पर रहेको सत्त्वगुणमा विराजमान ।।१३७।।

त्रिधामास्त्रिकरस्त्रेता-
त्रिवर्गफलदायकः ।
त्रिगुणात्मा त्रिलोकादि-
स्त्रिशक्तीशस्त्रिलोचनः ।।
।।१३८।।

**त्रिधामा**- सूर्य, चन्द्र र अग्निरूप तेजका रूपमा विराजमान, **त्रिकरः**- स्वर्ग, मर्त्य र पाताल लोकका निर्माता, **त्रेतात्रिवर्गफलदायकः**- तीन प्रकारका अग्निलाई प्रसन्न तुल्याउने धर्म, अर्थ र कामपुरुषार्थमा आधारित कर्मका फलदाता, **त्रिगुणात्मा**- मूलप्रकृतिका रूपमा विराजमान, **त्रिलोकादिः** - स्वर्ग, मर्त्य र पातालका आदिकारण, **त्रिशक्तीशः** - **श्रीं ह्रीं क्लीं** मन्त्ररूप तीन शक्तिका स्वामी अथवा प्रभुशक्ति, उत्साहशक्ति र मन्त्रशक्तिका स्वामी, **त्रिलोचनः** - तीन आँखाले युक्त ।।१३८।।

चतुर्बाहुश्चतुर्दन्त-
श्चतुरात्मा चतुर्मुखः ।
चतुर्विधोपायमय-
श्चतुर्वर्णाश्रमाश्रयः ।।
।।१३९।।

**चतुर्बाहुः** - चार भुजाले युक्त, **चतुर्दन्तः** - चार प्रकारका दाँतले सम्पन्न, **चतुरात्मा**- आत्मा, अन्तरात्मा, ज्ञानात्मा र परमात्माका रूपमा विराजमान, **चतुर्मुखः** - चार वेदलाई मुखभित्र धारण गर्ने, **चतुर्विधोपायमयः**- साम, दान, दण्ड र भेद यी चार प्रकारका उपायद्वारा गरिने कर्मका साधक, **चतुर्वर्णाश्रमाश्रयः**- ब्राह्मण आदि वर्ण र ब्रह्मचर्य आदि आश्रमका आश्रय ।।१३९।।

चतुर्विधवचोवृत्ति-
परिवृत्तिप्रवर्त्तकः ।
चतुर्थीपूजनप्रीत-
श्चतुर्थीतिथिसम्भवः ।।
।।१४०।।

**चतुर्विधवचोवृत्तिपरिवृत्तिप्रवर्त्तकः** - परा, पश्यन्ती, मध्यमा, वैखरीनामक वाणीहरूका वृत्तिका प्रवर्त्तक, **चतुर्थीपूजनप्रीतः** - चतुर्थी तिथिमा आराधना गर्दा प्रसन्न हुने, **चतुर्थीतिथिसम्भवः**- भाद्रशुक्ल चतुर्थी तिथिमा उत्पन्न ।।१४०।।

पञ्चाक्षरात्मा पञ्चात्मा
पञ्चास्यः पञ्चकृत्यकृत् ।
पञ्चाधारः पञ्चवर्णः
पञ्चाक्षरपरायणः ।।
।।१४१।।

**पञ्चाक्षरात्मा**- नाद, बिन्दु, मकार, उकार र अकार यी पाँच अक्षरलाई शरीर बनाई त्यो शरीरभित्र ओङ्कारका रूपमा विराजमान, **पञ्चात्मा**- नाद आदि पूर्वोक्त तत्त्वलाई शरीरका रूपमा धारण गर्ने, **पञ्चास्यः**- ब्रह्माण्डलाई नै एक गासमा निल्नसक्ने विशाल मुख भएका, **पञ्चकृत्यकृत्**- सृष्टि, स्थिति, संहार, तिरोधान र अनुग्रह यी पाँच प्रकारका कृत्यहरू सम्पादन गर्ने, **पञ्चाधारः** -पृथिवी, जल, वायु, तेज, आकाशनामक पाँच महाभूतहरूलाई धारण गर्ने, **पञ्चवर्णः** - सूर्यकान्ति, चन्द्रकान्ति, अर्जुनकान्ति, इन्द्रगोपकान्ति र धूम्रवर्णका रूपमा रहने हुनाले पञ्चवर्णका रूपमा प्रसिद्ध, **पञ्चाक्षरपरायणः** - **'नमः शिवाय'** मन्त्रको नित्य जप गर्ने ।।१४१।।

पञ्चताल: पञ्चकर:
पञ्चप्रणवभावित: ।
पञ्चब्रह्ममयस्फूर्ति:
पञ्चावरणवारित: ।।
।।१४२।।

**पञ्चताल:** - मध्यमाको टुप्पोदेखि बूढीऔंठाको फेदसम्मको स्थानलाई एकताल परिमाणको भनिन्छ, त्यस्ता पाँच ताल परिमाणको मात्र उचाइ भएका हुनाले वामनका रूपमा प्रसिद्ध, **पञ्चकर:** - पाँच हात परिमाणको उचाइ भएका, **पञ्चप्रणवभावित:**- ॐ ऐं ह्रीं क्लीं श्रीं यी पाँच प्रणवद्वारा वाच्य, **पञ्चब्रह्ममयस्फूर्ति:** - सद्योजात, वामदेव, अघोर, तत्पुरुष र ईशाननामक पञ्चब्रह्मको रूपमा वर्तमान, **पञ्चावरणवारित:**- पाँच प्रकारका आवरणरूप कोशहरूले ढाकिएका अथवा पञ्चावृत्तिस्तवमा प्रतिपादित अङ्ग आदि आवरणले सम्पन्न ।।१४२।।

पञ्चभक्ष्यप्रिय: पञ्च-
बाण: पञ्चशिवात्मक: ।
षट्कोणपीठ: षट्चक्र-
धामा षड्ग्रन्थिभेदक: ।।
।।१४३।।

**पञ्चभक्ष्यप्रिय:** - लड्डु, माड, पुरी, खुदो र बटुक यी पाँच प्रकारका खाद्यपदार्थ रुचाउने, **पञ्चबाण:** - बाणेश्वरी अम्बाका पाँच बीज मन्त्र छन् ती बीजमन्त्रहरूको स्वरूपमा रहेका, **पञ्चशिवात्मक:**- कामेश्वर शिवजीका पाँच बीज मन्त्र छन् ती मन्त्रको स्वरूपमा रहेका, **षट्कोणपीठ:** - षट्कोण यन्त्र अथवा षट्कोण भएको मण्डप जसको पूजास्थानका रूपमा रहने गर्दछ, **षट्चक्रधामा** - मूलाधार, स्वाधिष्ठान, मणिपूरक, अनाहत, विशुद्ध र आज्ञा चक्रमा विराजमान, **षड्ग्रन्थिभेदक:** - उक्त ६ चक्रका ६ प्रकारका सन्धिस्थललाई भेदन गर्ने कुण्डलिनीका रूपमा वर्तमान ।।१४३।।

षडध्वध्वान्तविध्वंसी
षडङ्गुलमहाह्रद: ।
षण्मुख: षण्मुखभ्राता
षट्शक्तिपरिवारित: ।।
।।१४४।।

**षडध्वध्वान्तविध्वंसी** - पद, भुवन, वर्ण, तत्त्व, कला र मन्त्रनामक ६ प्रकारका मार्गहरूको शोधन गर्दै तिनमा रहेका मलहरूको निराकरण गर्ने, **षडङ्गुलमहाह्रद:** - ६ औंला-परिमाणको विशाल एवं गहिरो नाभिले सुहाएका, **षण्मुख:** - शिक्षा, कल्प, निरुक्त, व्याकरण, ज्योतिष र छन्द यी ६ वेदाङ्ग शास्त्रहरूलाई मुखमा धारण गर्ने, **षण्मुखभ्राता**- ६ वटा मुखले सम्पन्न स्वामी कार्तिकेयका अग्रजका रूपमा सम्मानित, **षट्शक्तिपरिवारित:** - ६ प्रकारका शक्तिले घेरिएका ।।१४४।।

षड्वैरिवर्गविध्वंसी
षडूर्मिभयभञ्जन: ।
षट्तर्कदूर: षट्कर्म-
निरत: षड्रसाश्रय: ।।
।।१४५।।

**षड्वैरिवर्गविध्वंसी** - काम, क्रोध, लोभ, मोह, मद र मात्सर्यनामक ६ प्रकारका शत्रुहरूलाई समाप्त गर्ने, **षडूर्मिभयभञ्जन:** - भोक, प्यास, शोक, मोह, वृद्धावस्था र मरणनामक ६ प्रकारका तरङ्गहरूको भयलाई समाप्त गर्ने, **षट्तर्कदूर:**- ६ प्रकारका साङ्ख्य, योग, न्याय, वैशेषिक, मीमांसा र वेदान्त शास्त्रका युक्तिहरूद्वारा ग्रहण गर्न नसकिने वागगोचर, **षट्कर्मनिरत:**- अध्ययन, अध्यापन, यजन, याजन, दान र परिग्रह यी ६ कर्ममा नित्य संलग्न, **षड्रसाश्रय:** - गुलियो, अमिलो, नुनिलो, तीतो, पीरो र टर्रो यी ६ प्रकारका रसका आधार ।।१४५।।

सप्तपातालचरण:
सप्तद्वीपोरुमण्डल: ।
सप्तस्वर्लोकमुकुट:
सप्तसप्तिवरप्रद: ।।
।।१४६।।

**सप्तपातालचरण:** - अतल, वितल, सुतल, रसातल, तलातल, महातल र पाताल नामक सातवटा तलका लोकहरूमा पाउ राखेर उभिएका, **सप्तद्वीपोरुमण्डल:**- जम्बू, प्लक्ष, शाल्मलि, कुश, क्रौञ्च, शाक र पुष्कर नामक द्वीपहरूलाई जङ्घाको रूपमा धारण गर्ने, **सप्तस्वर्लोकमुकुट:** - भूर्लोक, भुवर्लोक, स्वर्लोक, महलोक, जनलोक, तपोलोक र सत्यलोक यी सात लोकलाई मुकुटका रूपमा धारण गर्ने, **सप्तसप्तिवरप्रद:** - सूर्यलाई वर प्रदान गर्ने ।।१४६।।

सप्ताङ्गराज्यसुखदः
सप्तर्षिगणमण्डितः ।
सप्तछन्दोनिधिः सप्त-
होता सप्तस्वराश्रयः ।।
।।१४७।।

**सप्ताङ्गराज्यसुखदः**- स्वामी, अमात्य, मित्र, कोश, राष्ट्र, दुर्ग र सैनिक यी सात अङ्गले सम्पन्न राज्यलाई सुख प्रदान गर्ने, **सप्तर्षिगणमण्डितः** - कश्यप, अत्रि, भरद्वाज, वसिष्ठ, गौतम, विश्वामित्र र जमदग्नि यी सात ऋषि र गणेदेवताले पनि सेवा गरिएका, **सप्तछन्दोनिधिः**- गायत्रीदेखि जगतीसम्मका सात प्रकारका छन्दहरूका निधि, **सप्तहोता** - यज्ञमा वरण गरिएका होता आदि ब्राह्मणहरूका रूपमा विराजमान, **सप्तस्वराश्रयः** - मध्यम, धैवत, पञ्चम आदि सात स्वरका आधार ।।१४७।।

सप्ताब्धिकेलिकासारः
सप्तमातृनिषेवितः ।
सप्तच्छन्दोमोदमदः
सप्तछन्दोमखप्रभुः ।।
।।१४८।।

**सप्ताब्धिकेलिकासारः** - सात समुद्रलाई क्रीडासरोवर बनाई विहार गर्ने, **सप्तमातृनिषेवितः**- ब्राह्मी आदि सात मातृकाहरूद्वारा सेवा गरिएका, **सप्तच्छन्दोमोदमदः** - गायत्री आदि सात छन्दमा आधारित साहित्यको अध्ययन गर्दा प्राप्त हुने आनन्दले रमाएका, **सप्तच्छन्दोमखप्रभुः** - सात प्रकारका छन्दहरूद्वारा उच्चारण गरिने मन्त्रहरूले आराधना गरिने यज्ञका स्वामी ।।१४८।।

अष्टमूर्तिध्येयमूर्ति-
रष्टप्रकृतिकारणम् ।
अष्टाङ्गयोगफलभू-
रष्टपत्राम्बुजासनः ।।
।।१४९।।

**अष्टमूर्तिध्येयमूर्तिः** - पृथिवी, जल, तेज, वायु, आकाश, यजमान, सूर्य र चन्द्रमारूपी आठमूर्ति भएका शिवजीद्वारा ध्यान गरिने सुन्दरमूर्तिले शोभायमान, **अष्टप्रकृतिकारणम्** - प्रकृति, अहङ्कार, महत्तत्त्व र पञ्चतन्मात्रालाई पैदा गर्ने, **अष्टाङ्गयोगफलभूः**- यम, नियम, आसन, प्राणायाम, प्रत्याहार, ध्यान, धारणा, समाधि यी अष्टाङ्गयोगको फल प्रदान गर्ने, **अष्टपत्राम्बुजासनः** - आठपाते कमलमा विराजमान ।।१४९।।

अष्टशक्तिसमृद्धश्री-
रष्टैश्वर्यप्रदायकः ।
अष्टपीठोपपीठश्री-
रष्टमातृसमावृतः ।।
।।१५०।।

**अष्टशक्तिसमृद्धश्रीः**- आठपाते कमलमा रहेका पीठशक्तिहरूद्वारा विस्तार गरिने सौन्दर्यका स्वामी, **अष्टैश्वर्यप्रदायकः** - भक्तहरूलाई अणिमा, महिमा, लघिमा, प्राप्ति, प्राकाम्य, ईशत्व र वशित्व यी आठ प्रकारका सिद्धि प्रदान गर्ने, **अष्टपीठोपपीठश्रीः** - अष्टदल कमलका पातहरूमा रहेका शक्तिहरूको पीठ र उपपीठद्वारा शोभायमान, **अष्टमातृसमावृतः** - ब्राह्मी, माहेश्वरी, ऐन्द्री, वाराही, कौमारी, वैष्णवी, चामुण्डा र महालक्ष्मीनामक आठ मातृकाहरूद्वारा चारैतिरबाट घेरिएका ।।१५०।।

अष्टभैरवसेव्योऽष्ट-
वसुवन्द्योऽष्टमूर्तिभृत् ।
अष्टचक्रस्फुरन्मूर्त्ति-
रष्टद्रव्यहविःप्रियः ।।
।।१५१।।

**अष्टभैरवसेव्यः** - कालवटुक, शङ्करवटुक, मातृवटुक, देवीवटुक, स्थानवटुक, मेघवटुक, चन्द्राग्रवटुक र वैनायकवटुक नामक आठ भैरवहरूद्वारा सेवनीय, **अष्टवसुवन्द्यः** - धर, ध्रुव, सोम, अह, अनिल, अनल, प्रत्यूष र प्रभास नामक आठ वसुहरूद्वारा वन्दनीय, **अष्टमूर्तिभृत्**- पृथिवी, जल, आकाश, वायु, तेज नामक महाभूत, अग्नि, सूर्य र चन्द्रमाजस्ता ८ वटा मूर्ति धारण गर्ने, **अष्टचक्रस्फुरन्मूर्त्तिः** - आठ चक्रले सम्पन्न यन्त्रमा विराजमान, **अष्टद्रव्यहविःप्रियः** - सातु, चिउरा, केरा, लड्डू, तिल, उखु, नरिवल र घिउजस्ता आठ प्रकारका हवि रुचाउने ।।१५१।।

नवनागासनाध्यासी
नवनिध्यनुशासिता ।
नवद्वारपुराधारो
नवाधारनिकेतनः ।।
।।१५२।।

**नवनागासनाध्यासी** - अनन्त, वासुकि, पद्म, महापद्म, तक्षक, कुलीर, कर्कट, शङ्ख र शेष नामक नौ प्रकारका नागहरूका आसनमा विराजमान, **नवनिध्यनुशासिता-** महापद्म, पद्म, शङ्ख, मकर, कच्छप, मुकुन्द, कुन्द, नील र खर्ब नामक नौ प्रकारका निधिहरूमाथि नियन्त्रण कायम गर्ने, **नवद्वारपुराधारः** - दुई आँखा, दुई कान, दुई नाकका प्वाल, मुख, गुदद्वार र उपस्थ यी नौ द्वार भएको शरीररूपी पुरमा जीवरूपले विराजमान, **नवाधारनिकेतनः** - मूलाधार, स्वाधिष्ठान, अनाहत, मणिपूर, विशुद्ध, आज्ञा, कुल, अकुल र सहस्रार नामक नौ आधारमा विराजमान ।।१५२।।

नवनारायणस्तुत्यो
नवदुर्गानिषेवितः ।
नवनाथमहानाथो
नवनागविभूषणः ।।
।।१५३।।

**नवनारायणस्तुत्यः** - आदिनारायण, धर्मनारायण, अनन्तनारायण, बदरीनारायण, रूपनारायण, शङ्करनारायण, सुन्दरनारायण, लक्ष्मीनारायण र साध्यनारायण यी नौ प्रकारका नारायणहरूद्वारा स्तुति गर्न योग्य, **नवदुर्गानिषेवितः** - भद्रकालीकल्पअनुसार - शैलपुत्री, ब्रह्मचारिणी, चन्द्रघण्टा, कूष्माण्डा, स्कन्दमाता, कात्यायनी, कालरात्रि, महागौरी, सिद्धिदात्री नामक नौ प्रकारका दुर्गाहरूद्वारा सेवा गरिएका अथवा उग्रचण्डाकल्पअनुसार - रुद्रचण्डा, प्रचण्डा, चण्डोग्रा, चण्डनायिका, चण्डा, चण्डावती, चण्डरूपा, अतिचारिका र महोग्रचण्डा नामक नौ दुर्गाहरूद्वारा सेवा गरिएका, **नवनाथमहानाथः** - ज्ञान, प्रकाश, सत्य, आनन्द, विमर्श, स्वभाव, सुभग, प्रतिभ र पूर्ण यी नाथहरूका पनि नाथ हुनुभएकाले ज्ञाननाथ, प्रकाशनाथ, सत्यनाथ, आनन्दनाथ, विमर्शनाथ, स्वभावनाथ, सुभगनाथ, प्रतिभनाथ, पूर्णनाथ यी नौ नाथका पनि स्वामी त्यसकारण नवनाथमहानाथ शब्दद्वारा सम्बोध्य, **नवनागविभूषणः** - कर्कोटक आदि नागहरूलाई गहना बनाएर धारण गर्ने ।।१५३।।

नवरत्नविचित्राङ्गो
नवशक्तिशिरोधृतः ।
दशात्मको दशभुजो
दशदिक्पतिवन्दितः ।।
।।१५४।।

**नवरत्नविचित्राङ्गः** - मोती, पन्ना, माणिक, मुगा, हीरा, गोमेद, पुष्पराज, नीर र लहसुनी यी नौ थरिका रत्नहरू धारण गरी सुहाएका, **नवशक्तिशिरोधृतः** - तीव्रा, ज्वालिनी, नन्दा, भोगदा, कामदायिनी, उग्रा, तेजोवती, सत्या र विघ्ननाशिनी यी नौ शक्तिले शिरमा धारण गरिएका, **दशात्मकः** - दश दिशालाई नै आत्मा बनाएर प्रकाशमान, **दशभुजः** - महागणपतिको स्वरूपमा दशबाहु बनेर शोभायमान, **दशदिक्पतिवन्दितः**- दश दिशाका नायक क्रमशः - इन्द्र, अग्नि, यम, निर्ऋति, वरुण, वायु, कुबेर, ईशान, ब्रह्मा र अनन्त नामक दश प्रकारका दिक्पालहरूद्वारा वन्दित ।।१५४।।

दशाध्यायो दशप्राणो
दशेन्द्रियनियामकः ।
दशाक्षरमहामन्त्रो
दशाशाव्यापिविग्रहः ।।
।।१५५।।

**दशाध्यायः** - ऋग्वेद, यजुर्वेद, अथर्ववेद, सामवेद, शिक्षा, कल्प, निरुक्त, व्याकरण, ज्योतिष र छन्दको पूर्ण ज्ञानले सम्पन्न, **दशप्राणः** - नाग आदिका रूपमा रहेका दश प्रकारका प्राण शक्तिले सम्पन्न, **दशेन्द्रियनियामकः** - चक्षु, श्रोत्र, नासिका, त्वक् र जिह्वा यी पाँच ज्ञानेन्द्रिय एवं वाणी, हात, खुट्टा, गुदा र उपस्थ यी पाँच कर्मेन्द्रियका नियामक, **दशाक्षरमहामन्त्रः** - **ॐ हस्तिपिशाचीशाय स्वाहा** यस दश अक्षर भएको महामन्त्रका देवता र आत्माका रूपमा विराजमान, **दशाशाव्यापि-विग्रहः** - दसै दिशामा आफ्नो विराट् स्वरूप फैलाएर विराजमान ।।१५५।।

एकादशमहारुद्रैः
स्तुत एकादशाक्षरः ।
द्वादशोद्दण्डदोर्दण्डो
द्वादशान्तनिकेतनः ॥
॥१५६॥

**एकादशादिभिः रुद्रैः स्तुतः** - मृगव्याध, सर्प, निर्ऋति, अजैकपाद, अहिर्बुध्न्य, पिनाकी, दहन, ईश्वर, कपाली, स्थाणु र भव नामक एघार रुद्रहरूद्वारा प्रशंसा गरिएका, **एकादशाक्षरः** - ॐ **ह्रीं** गं **ह्रीं वशमानय स्वाहा** जस्ता एघार अक्षरको मन्त्रका आत्माका रूपमा विराजमान, **द्वादशोद्दण्डदोर्दण्डः** - बाह्र हातले युक्त भएको मूर्तिद्वारा शोभायमान, **द्वादशान्तनिकेतनः** - निधारदेखि माथि ब्रह्मरन्ध्रसम्मको द्वादशान्त भागमा विराजमान ॥१५६॥

त्रयोदशभिदाभिन्न-
विश्वेदेवाधिदैवतम् ।
चतुर्दशेन्द्रवरद-
श्चतुर्दशमनुप्रभुः ॥
॥१५७॥

**त्रयोदशभिदाभिन्नविश्वेदेवाधिदैवतम्** - विभिन्न पुराण र धर्मशास्त्रका ग्रन्थहरूमा वर्णन गरिएअनुसार तेह्र प्रकारका विश्वेदेवाहरू रहेका छन्, तिनका अधिदेवता। तदनुसार पार्वणश्राद्धमा पूजा गरिने १. पुरुरवा २. आर्द्रव ३. नान्दीमुखीश्राद्धमा पूजा गरिने सत्य र ४. वसु ५. सपिण्डीकरणश्राद्धमा पूजा गरिने काल, ६. काम; ७. महालय-श्राद्धमा पूजा गरिने कुरु र ८. कुत्स ९. इष्टिश्राद्धमा पूजा गरिने क्रतु र १०. दक्ष; ११. काम्यश्राद्धमा पूजा गरिने धूरि र १२. लोचन, १३. योगीहरूको सपिण्डीकरण-श्राद्धमा पूजा गरिने साधुरुरु गरी १३ प्रकारका विश्वेदेवाहरू रहेका छन्\श्रीगणेश ती सबैका अधिदेवता हुनुहुन्छ; **चतुर्दशेन्द्रवरदः** - यज्ञ, विपश्चित्, सुशान्ति, शिखी, विभु, मनोजव, ऊर्जस्वी, बलि, अद्भुत, शान्ति, वृष, ऋतधामा, दिवस्पति र शुचिनामक चौध इन्द्रहरूलाई वर प्रदान गर्ने, **चतुर्दशमनुप्रभुः** - स्वायम्भुव, स्वारोचिष, उत्तम, तामस, रैवत, चाक्षुष, वैवस्वत, सावर्णि, दक्षसावर्णि, ब्रह्मसावर्णि, धर्मसावर्णि, रुद्रसावर्णि, रौच्यसावर्णि र भौत्यसावर्णि नामक मनुहरूका स्वामी ॥१५७॥

चतुर्दशादिविद्याढ्य-
श्चतुर्दशजगत्प्रभुः ।
सामपञ्चदशःपञ्च-
दशीशीतांशुनिर्मलः ॥
॥१५८॥

**चतुर्दशादिविद्याढ्यः** - ऋग्वेद, यजुर्वेद, सामवेद, अथर्ववेद, शिक्षा, कल्प, निरुक्त, व्याकरण, ज्योतिष, छन्द, धर्मशास्त्र, पुराणवाङ्मय, मीमांसाशास्त्र र तर्कशास्त्रजस्ता चौध विद्याका सागर) (**चतुर्दशजगत्प्रभुः** - भूर्लोक, भुवर्लोक, स्वर्लोक, महर्लोक, जनलोक, तपोलोक, सत्यलोक, ब्रह्मलोक एवं तल, अतल, वितल, सुतल, महातल, रसातल र पाताल नामक चौध भुवनका स्वामी, **सामपञ्चदशः** - स्तोमसमन्त्रहरूका साथ चार प्रकारका राज्यस्तोत्र मिलाउँदा त्यो साम बन्दछ, त्यसलाई सामपञ्चदश भनिन्छ, त्यसको आत्माका रूपमा विराजमान, **पञ्चदशीशीतांशुनिर्मलः** - पूर्णिमाको चन्द्रमाझैं निर्मल र उज्ज्वल ॥१५८॥

षोडशाधारनिलयः
षोडशस्वरमातृकः ।
षोडशान्तपदावासः
षोडशेन्दुकलात्मकः ॥
॥१५९॥

**षोडशाधारनिलयः** - तन्त्रशास्त्रमा प्रतिपादित आगमका ज्ञाता गुरुका मुखबाट मात्र जान्न सकिने, षोडशाधारचक्रमा विराजमान, **षोडशस्वरमातृकः** - अ, आ, इ, ई, उ, ऊ, ऋ, ॠ, ऌ, ॡ, ए, ऐ, ओ, औ, अं, अः यी सोह्र प्रकारका स्वरहरूका उद्‌गमस्रोत, **षोडशान्तपदावासः** - ब्रह्मरन्ध्रमा रहेको कमलको केसरदेखि माथि उन्मना शक्तिसम्म फैलिएका सोह्र चक्रभन्दा माथि माथि रहेको स्थानमा विराजमान, **षोडशेन्दुकलात्मकः** - चन्द्रमाका अमृता, मानदा, पूषा, तुष्टि, पुष्टि, रति, धृति, शशिनी, चन्द्रिका, कान्ति, ज्योत्स्ना, श्री, प्रीति, अङ्गदा, पूर्णा र पूर्णामृता नामक सोह्र कलाका रूपमा विराजमान ॥१५९॥

कलासप्तदशी सप्त-

दश: सप्तदशाक्षर: ।

अष्टादशद्वीपपति-

रष्टादशपुराणकृत् ।।

।।१६०।।

**कलासप्तदशी**- त्रिपुरतन्त्रमा प्रतिपादित सत्रौं आत्मविद्यारूप कलाको रूपमा विराजमान, **सप्तदश**:- राज्यस्तोत्रसहित सामसम्पन्न सप्तदशस्तोमको आत्माका रूपमा रहेका, **सप्तदशाक्षर:- वौषट्, आश्रावय, यज, अस्तु, श्रौषट्, ये, यजामहे** यी सत्र अक्षरद्वारा यजन गर्दा प्राप्त हुने यज्ञफलका भोक्ता, **अष्टादशद्वीपपति**:- जम्बू, प्लक्ष, शाल्मलि, कुश, क्रौञ्च, शाक, पुष्करनामक यी सात द्वीप र सिंहल, लङ्का आदि ११ उपद्वीपका अधिपति, **अष्टादशपुराणकृत्**- मत्स्य-महापुराण, मार्कण्डेयमहापुराण, भागवतमहापुराण, भविष्यमहापुराण, ब्रह्माण्डमहापुराण, ब्रह्मवैवर्तमहापुराण, ब्रह्ममहापुराण, विष्णुमहापुराण, वामनमहापुराण, वायुमहापुराण, वाराहमहापुराण, अग्निमहापुराण, नारदमहापुराण, कूर्ममहापुराण, पद्ममहापुराण, स्कन्द-महापुराण, लिङ्गमहापुराण र गरुडमहापुराण यी महापुराणका कर्ता व्यासका रूपमा विराजमान ।।१६०।।

अष्टादशौषधीसृष्टि-

रष्टादशविधिस्मृत: ।

अष्टादशलिपिव्यष्टि-

समष्टिज्ञानकोविद: ।।

।।१६१।।

**अष्टादशौषधीसृष्टि**: - अठारथरिका धान्य आदि औषधीहरूका स्रष्टा, **अष्टादशविधिस्मृत**: - अपूर्व, नियम, परिसंख्या आदि विधिको प्रयोग र विनियोगका आधारमा निष्पन्न हुने अठार विधिका भेदहरूद्वारा स्मरण गरिएका, **अष्टादशलिपिव्यष्टि-समष्टिज्ञानकोविद**: - देवनागरी, ब्राह्मी, द्राविड, आन्ध्र, कलिङ्ग, वङ्ग आदि प्रमुख अठार लिपिहरूमध्ये प्रत्येक लिपिको आन्तरिक वैशिष्ट्य र स्वरूपबाट अवगत ।।१६१।।

एकविंश: पुमानेक-

विंशत्यङ्गुलिपल्लव: ।

चतुर्विंशतितत्त्वात्मा

पञ्चविंशाख्यपूरुष: ।।

।।१६२।।

**एकविंश**: - ऐतरेय श्रुतिअनुसार एक्काइसौं पुरुषका रूपमा मानिएका, **एकविंशत्यङ्गुलिपल्लव**: - चार हातका बीस औंला र सूँढसमेत गरी एक्काइस औंला धारण गर्ने, **चतुर्विंशतितत्त्वात्मा** - पाँच ज्ञानेन्द्रिय, पाँच कर्मेन्द्रिय, पाँच महाभूत, पाँच तन्मात्रा, मन, बुद्धि, अहङ्कार र प्रकृतिरूप चौबीस तत्त्वका रूपमा वर्तमान, **पञ्चविंशाख्यपूरुष**: - चौबीस तत्त्वपछि पच्चीसौं पुरुषतत्त्वका रूपमा वर्तमान ।।१६२।।

सप्तविंशतितारेश:

सप्तविंशतियोगकृत् ।

द्वात्रिंशद्भैरवाधीश-

श्चतुस्त्रिंशन्महाह्रद: ।।

।।१६३।।

**सप्त-विंशतितारेश**: - अश्विनी, भरणी, कृत्तिका, रोहिणी, मृगशिरा, आर्द्रा, पुनर्वसु, तिष्य, अश्लेषा, मघा, पूर्वाफाल्गुनी, उत्तराफाल्गुनी, हस्ता, चित्रा, स्वाति, विशाखा, अनुराधा, ज्येष्ठा, मूल, पूर्वाषाढा, उत्तराषाढा, श्रवण, धनिष्ठा, शतभिषा, पूर्वभाद्र, उत्तरभाद्र र रेवती नामक सत्ताइस नक्षत्रका स्वामी, **सप्तविंशतियोगकृत्**- विष्कम्भ, प्रीति, आयुष्मान्, सौभाग्य, शोभन, अतिगण्ड, सुकर्मा, धृति, शूल, गण्ड, वृद्धि, ध्रुव, व्याघात, हर्षण, वज्र, सिद्धि, व्यतिपात, वरीयान्, परिघ, शिव, सिद्धि, साध्य, शुभ, शुक्ल, ब्रह्म, ऐन्द्र, र वैधृति नामक सत्ताइस योगहरूका रचयिता, **द्वात्रिंशद्भैरवाधीश**: - सतीदेवीको अङ्ग पतन भएका पीठहरूमा उत्पन्न बत्तीस भैरवहरूका स्वामी अथवा असिताङ्ग आदि चार अष्ट भैरव गणका स्वामी अथवा महाविद्याभैरव, वटुकभैरव, अष्टमातृकाभैरव आदि गरी बत्तीस भैरवहरूका स्वामी, **चतुस्त्रिंशन्महाह्रद**: - पुष्कर आदि चौतीस पुण्यसरोवरका रूपमा वर्तमान ।।१६३।।

षट्त्रिंशत्तत्त्वसम्भूति-
रष्टत्रिंशत्कलातनुः ।
नमदेकोनपञ्चाशन्-
मरुद्वर्गो निरर्गलः ।।
।।१६४।।

**षट्त्रिंशत्तत्त्वसम्भूतिः**- शैवतन्त्रअनुसार शिवजीदेखि पृथिवीसम्म व्याप्त भएका छत्तीस तत्त्वहरूलाई पैदा गर्ने, **अष्टात्रिंशत्कलातनुः** - धूम्रार्चि, ऊष्मा, ज्वालिनी, विस्फुलिङ्गिनी, सुश्री, सुरूपा, कपिला, स्वाहा, स्वधानामक यी अग्निका दश कला, तपिनी, तापिनी, धूम्रा, मरीचि, ज्वालिनी, रुचि, सुषुम्णा, भोगदा, विश्वा, बोधिनी, धारिणी, क्षमानामक सूर्यका यी बाह्र कला र अमृता, मानदा, पूषा, पुष्टि, तुष्टि, रति, धृति, शशिनी, चन्द्रिका, कान्ति, ज्योत्स्ना, श्रीति, अङ्गना, पूर्णा र पूर्णामृतानामक चन्द्रमाका यी सोह्र कला गरी अठतीस कलाद्वारा सुहाएको दिव्य स्वरूप धारण गर्ने, **नमदेकोनपञ्चाशन्मरुद्वर्ग-निरर्गलः** - उनन्पचास वायुद्वारा वन्दित भई निर्बाधरूपमा संसारमा विचरण गर्ने ।।१६४।।

पञ्चाशदक्षरश्रेणीः
पञ्चाशद्रुद्रविग्रहः ।
पञ्चाशद्विष्णुशक्तीशः
पञ्चाशन्मातृकालयः ।।
।।१६५।।

**पञ्चाशदक्षरश्रेणीः** - अदेखि क्षसम्मका पचास वर्ण को माला धारण गर्ने, **पञ्चाशद्रुद्रविग्रहः** - श्रीकण्ठ आदि नामबाट प्रसिद्ध पचास रुद्रका रूपमा विराजमान, **पञ्चाशद्विष्णुशक्तीशः**- केशव आदि पचास विष्णु र उनीहरूका कीर्ति आदि नामका पचास शक्ति रहेका छन् तिनका स्वामी, **पञ्चाशन्मातृकालयः** - एक्काउन्न अक्षरका आलय र लयस्थान भएकाले एक्काउन्नौं अक्षर श्रीगणेशकै स्वरूप भएकाले पनि उहाँ पचास मातृकाका लय र आलयका आधार मानिनुभएको छ ।।१६५।।

द्विपञ्चाशद्वपुःश्रेणी-
स्त्रिषष्ट्यक्षरसंश्रयः ।
चतुःषष्ट्यर्णनिर्णेता
चतुःषष्टिकलानिधिः ।।
।।१६६।।

**द्विपञ्चाशद्वपुःश्रेणी** - शास्त्रहरूमा वर्णित बाउन्नथरि शरीरधारीहरूका आत्माको रूपमा विराजमान, **त्रिषष्ट्यक्षरसंश्रयः** - शिवजीको मतानुसार त्रिसट्ठी वर्णहरूका आधार, **चतुःषष्ट्यर्णनिर्णेता** - शिवजीको मतमा वर्णहरू त्रिसट्ठी अथवा चौसट्ठी वर्णहरू मानिएका छन्, ती चौसट्ठीथरि वर्णहरूका उन्नायक, **चतुःषष्टि-कलानिधिः** - इतिहास, आगम, काव्य, अलङ्कार, नाटक, गायन, कविता, कामशास्त्र, द्यूत, देशभाषालिपिज्ञान, लिपिकर्म, वाचन, गणन, व्यवहार, स्वरशास्त्र, शाकुन, सामुद्रिक, रत्नशास्त्र, गजाश्वरथकौशल, मल्लशास्त्र, सूपकर्म (भान्छे काम), भूरुहदोहद (बागबानी), गन्धवाद, धातुवाद, रससम्बन्धी खनिवाद, बिलवाद, अग्निस्तम्भन, जलस्तम्भन, वाणीस्तम्भन, वयःस्तम्भन, वशीकरण, आकर्षण, मोहन, विद्वेषण, उच्चाटन, मारण, कालवञ्चन, परकायप्रवेश, पादुकासिद्धि, वाणीसिद्धि, गुटिकासिद्धि, ऐन्द्रजालिक, अञ्जन, परदृष्टिवञ्चन, स्वरवञ्चन, मणिमन्त्रौषधिसिद्धि, चौर्यकर्म, चित्रक्रिया, लोहक्रिया, अश्मक्रिया, मृत्तिकाक्रिया, दारुक्रिया, वेणुक्रिया, चर्मक्रिया, अम्बरक्रिया, अदृश्यकरण, दन्तीकरण, मृगयाविधि, वाणिज्य, पाशुपाल्य, कृषि, आसवकर्म, कुक्कुटमेषादि युद्ध सम्पादन, शुकसारिका प्रलापन नामक चौसट्ठी कलाका कोश ।।१६६।।

चतुःषष्टिमहासिद्ध-
योगिनीवृन्दवन्दितः ।
अष्टषष्टिमहातीर्थ-
क्षेत्रभैरवभावनः ।।
।।१६७।।

**चतुःषष्टिमहासिद्धयोगिनीवृन्दवन्दितः** - चौसट्ठी महासिद्ध र योगिनीको समूहद्वारा आराधित, **अष्टषष्टिमहातीर्थक्षेत्रभैरवभावनः** - अठसठी भैरवतीर्थहरूमा रही भैरवहरूलाई प्रसन्न तुल्याउने ।।१६७।।

चतुर्नवतिमन्त्रात्मा
षण्णवत्यधिकः प्रभुः ।
शतानन्दः शतधृतिः
शतपत्रायतेक्षणः ।।
।।१६८।।

**चतुर्नवतिमन्त्रात्मा**- अठतीस कला, पचास मातृका, हंस, शुचि, प्रतद्विष्णु, विष्णुर्योनि र त्रियम्बक तद्विष्णोमूलविद्या यी छ मन्त्रसहित चौरानब्बे संख्यामा रहेका मन्त्रहरूका आत्मा, **षण्णवत्यधिकप्रभुः** - तन्त्रराजमा बताइएका छयानब्बे चक्रदेवताका स्वामी, **शतानन्दः**- मनुष्यहरूले भन्दा सय गुना आनन्दको आस्वादन गर्ने, **शतधृतिः**- अनन्त ब्रह्माण्ड धारण गर्ने, **शतपत्रायतेक्षणः**- कमलजस्ता सुन्दर आँखाले सुहाएका।।१६८।।

शतानीकः शतमखः
शतधारावरायुधः ।
सहस्रपत्रनिलयः
सहस्रफणभूषणः ।।
।।१६९।।
सहस्रशीर्षा पुरुषः
सहस्राक्षः सहस्रपात् ।
सहस्रनामसंस्तुत्यः
सहस्राक्षबलापहः ।।
।।१७०।।
दशसाहस्रफणभृत्
फणिराजकृतासनः ।
अष्टाशीतिसहस्रौघ-
महर्षिस्तोत्रयन्त्रितः ।।
।।१७१।।
लक्षाधीशप्रियाधारो
लक्षाधारमनोमयः ।
चतुर्लक्षजपप्रीत-
श्चतुर्लक्षप्रकाशितः ।।
।।१७२।।
चतुरशीतिलक्षाणां
जीवानां देहसंस्थितः ।
कोटिसूर्यप्रतीकाशः
कोटिचन्द्रांशुनिर्मलः ।।
।।१७३।।
शिवाभवाध्युष्टकोटि-
विनायकधुरन्धरः ।
सप्तकोटिमहामन्त्र-
मन्त्रितावयवद्युतिः ।।
।।१७४।।
त्रयस्त्रिंशत्कोटिसुर-
श्रेणीप्रणतपादुकः ।
अनन्तदेवतासेव्यो
ह्यनन्तमुनिसंस्तुतः ।।
।।१७५।।

**शतानीकः** - अनेक सेनाले युक्त इन्द्रका रूपमा विराजमान, **शतमखः** - इन्द्रका रूपमा विराजमान, **शतधारावरायुधः** - वज्रभन्दा पनि उत्तम अस्त्रलाई आयुधका रूपमा धारण गर्ने, **सहस्रपत्रनिलयः** - ब्रह्मरन्ध्रमा रहेको सहस्रारचक्रमा विराजमान, **सहस्रफणभूषणः** - हजार फणा भएका शेषनागलाई गहनाको रूपमा धारण गर्ने ।।१६९।।

**सहस्रशीर्षा पुरुषः**- अनन्त शिर भएका उत्तम पुरुष, **सहस्राक्षः** - हजारौं आँखा भएका, **सहस्रपाद्** - हजार पाउ भएका, **सहस्रनामसंस्तुत्यः** - हजारौं नामहरूद्वारा स्तुति गर्न योग्य, **सहस्राक्षबलापहः**- इन्द्रको पराक्रमलाई परास्त गर्ने ।।१७०।।

**दशसाहस्रफणिभृत्फणिराजकृतासन**- दश हजार फणा धारण गर्ने शेषनागमाथि विराजमान, **अष्टाशीतिसहस्रौघमहर्षिस्तोत्रयन्त्रितः** - शौनक आदि अठासी हजार महर्षिहरूको स्तुतिद्वारा प्रसन्न ।।१७१।।

**लक्षाधीशप्रियाधारः** - हजारौं कुबेरहरूका प्रिय आधार, **लक्षाधारमनोमयः**- मनको शुद्धिका लागि अपनाइने हजारौं योगसाधनाका रूपमा वर्तमान, **चतुर्लक्ष-जपप्रीतः** - चार लाख जपसंख्याले जप गर्दा प्रसन्न हुने, **चतुर्लक्ष-प्रकाशितः** - चार लाख पुराणहरूका श्लोकहरूमा प्रकाशित ।।१७२।।

**चतुरशीतिलक्षाणां जीवानां देहसंस्थितः** - जलमा आश्रित जीव माछा, कछुवा आदि जलचर ९ लाख, पृथिवीमा आश्रित वृक्ष; पर्वत आदि स्थावर २७ लाख, कृमि; सर्प आदि तिर्यक् वर्गका प्राणीहरू ११ लाख, कोइली; कौवा; भँमरा आदि उड्ने प्राणीहरू १० लाख, चारखुट्टा हुने पशुयोनिका प्राणीहरू २३ लाख र मनुष्ययोनिका प्राणीहरू ४ लाख गरी ८४ लाख योनिहरूमा रहेका प्राणीहरूको शरीरमा आत्माको रूपमा विराजमान, **कोटिसूर्यप्रतीकाशः** - करोडौं सूर्यसमान तेजस्वी, **कोटिचन्द्रांशुनिर्मलः**- करोडौं चन्द्रमाको कान्तिझैं निर्मल ।।१७३।।

**शिवाभवाध्युष्टकोटिविनायकधुरन्धरः** - साढे तीन करोड विनायक आदि शिवगण र साढे तीन करोड विनायक आदि शक्तिगणका स्वामी, **सप्तकोटिमहामन्त्रमन्त्रितावयवद्युतिः** - सात करोड मन्त्रद्वारा आराधित निर्मल एवं कान्तिमय देहद्वारा शोभायमान ।।१७४।।

**त्रयस्त्रिंशत्कोटिसुरश्रेणीप्रणतपादुकः** - तेत्तीस करोड देवताको पङ्क्तिद्वारा पाउमा आराधना गरिएका, **अनन्तदेवतासेव्यः** - अनन्त देवताहरूद्वारा आराध्य, **अनन्तमुनिसंस्तुतः** - अनन्त मुनिहरूद्वारा स्तुति गरिएका ।।१७५।।

अनन्तनामानन्तश्रीरनन्तानन्तसौख्यदः ।
ॐ इति वैनायकं नाम्नां सहस्रमिदमीरितम् ।।१७६।।

इदं ब्राह्मे मुहूर्ते वै यः पठेत् प्रत्यहं नरः ।
करस्थं तस्य सकलमैहिकामुष्मिकं सुखम् ।।१७७।।

आयुरारोग्यमैश्वर्यं धर्मः शौर्यं बलं यशः ।
मेधा प्रज्ञा धृतिः कान्तिः सौभाग्यमतिरूपता ।।१७८।।

सत्यं दया क्षमा शान्तिर्दाक्षिण्यं धर्मशीलता ।
जगत्संयमनं विश्वसंवादो वादपाटवम् ।।१७९।।

सभापाण्डित्यमौदार्यं गाम्भीर्यं ब्रह्मवर्चसम् ।
औन्नत्यं च कुलं शीलं प्रतापो वीर्यमार्यता ।।१८०।।

ज्ञानं विज्ञानमास्तिक्यं धैर्यं विश्वातिशायिता ।
धनधान्याभिवृद्धिश्च सकृदस्य जपाद्भवेत् ।।१८१।।

वश्यं चतुर्विधं नृणां जपादस्य प्रजायते ।
राज्ञो राजकलत्रस्य राजपुत्रस्य मन्त्रिणः ।।१८२।।

जप्यते यस्य वश्यार्थे स दासस्तस्य जायते ।
धर्मार्थकाममोक्षाणामनायासेन साधनम् ।।१८३।।

शाकिनीडाकिनीरक्षोयक्षोरगभयापहम् ।
साम्राज्यसुखदं चैव समस्तरिपुमर्दनम् ।।१८४।।

समस्तकलहध्वंसि दग्धबीजप्ररोहणम् ।
दुःस्वप्नशमनं क्रुद्धस्वामिचित्तप्रसादनम् ।।१८५।।

षट्कर्माष्टमहासिद्धित्रिकालज्ञानसाधनम् ।
परकृत्योपशमनं परचक्रविमर्दनम् ।।१८६।।

संग्रामरङ्गे सर्वेषामिदमेकं जयावहम् ।
सर्ववन्ध्यात्वदोषघ्नं गर्भरक्षैककारणम् ।।१८७।।

पठ्यते प्रत्यहं यत्र स्तोत्रं गणपतेरिदम् ।
देशे तत्र न दुर्भिक्षमीतयो दुरितानि च ।।१८८।।

न तद्गेहं जहाति श्रीर्यत्रायं जप्यते स्तवः ।
क्षयकुष्ठप्रमेहार्शोभगन्दरविषूचिकाः ।।१८९।।

**अनन्तनामा**– अनन्त नामले सम्पन्न, **अनन्तश्रीः**– अनन्त ऐश्वर्यले विभूषित र **अनन्तानन्तसौख्यदः** – अनन्त आनन्द र सुखका दाता। यसरी श्रीगणेशसहस्रनामको उपदेश गरियो।।१७६।।

जुन मानिसले यो श्रीगणेशसहस्रनाम स्तोत्रको दिनदिनै ब्राह्ममुहूर्तमा पाठ गर्दछ त्यसले सम्पूर्ण संसारको सुख र परलोकको सुख पनि प्राप्त गर्दछ।।१७७।। श्रीगणेशसहस्रनामको पाठबाट आयु, आरोग्य, ऐश्वर्य, धर्म, शूरता, बल, यश, मेधा, प्रज्ञा, धृति, कान्ति, सौभाग्य, सुन्दर स्वरूप, सत्य, दया, क्षान्ति, शान्ति, दाक्षिण्य, धर्मशीलता, जागतिक पदार्थहरूमा संयम, विश्वसंवाद, वादचातुर्य, सभापाण्डित्य, उदारता, गम्भीरता, ब्रह्मतेज, उन्नति, उत्तम कुल, उत्तम शील, प्रताप, वीर्य, सज्जनता, ज्ञान, विज्ञान, आस्तिक बुद्धि, धैर्य, विश्वजनीन विशेषता र धन एवं धान्यको वृद्धिजस्ता फल प्राप्त हुन्छन् ।।१७८-१८१।। यस सहस्रनामको पाठबाट मानिसले राजा, रानी, राजकुमार र राजाका मन्त्री यी चारै जनालाई आफ्नो वशमा तुल्याउन सक्दछन् ।।१८२।। जसलाई वशीकरण गर्न यो स्तोत्र जपिन्छ अथवा पढिन्छ त्यो मानिस आफ्नो सेवक बन्दछ । धर्म, अर्थ, काम र मोक्ष नामक यी चारै पुरुषार्थको अनायास सिद्धि हुन्छ।।१८३।। श्रीगणेश-सहस्रनामको पाठबाट डाकिनी, शाकिनी, राक्षस, यक्ष, सर्प आदिबाट हुने भय हराउँछ, साम्राज्य-सुख प्राप्त हुन्छ र सम्पूर्ण शत्रुहरूमाथि विजय प्राप्त हुन्छ ।।१८४।। कलहका बीजहरू समाप्त हुन्छन् । डढेका बीजहरू पुनः अङ्कुरित हुन्छन् । दुस्वप्नको दोष नाश हुन्छ । रिसाएका राजा अथवा स्वामीको चित्त प्रसन्न बन्दछ ।।१८५।। अध्ययन-अध्यापन, दान, ग्रहण, यजन र याजन यी ६ प्रकारका कर्म सिद्ध हुन्छन् । अणिमा, महिमा आदि अष्टमहासिद्धि प्राप्त हुन्छन् र कालज्ञान हुन्छ । साथै अरूले प्रयोग गरेका कृत्या र अभिचारहरू शान्त हुन्छन् र शत्रुको समूह समाप्त हुन्छ ।।१८६।। संग्रामभूमिमा विजय प्राप्त हुन्छ, वन्ध्यात्वदोष निर्मूल बन्दछ र गर्भको रक्षा पनि हुन्छ ।।१८७।। जुन देशमा दिनदिनै यो स्तोत्र पढिन्छ, त्यहाँ अनिकाल लाग्दैन, ईति-भीति र अरू दोष हुँदैनन् ।।१८८।। जुन घरमा यो स्तोत्र पढिन्छ, त्यहाँ निरन्तर लक्ष्मीले बास गर्दछिन् । यस स्तोत्रको पाठबाट क्षयरोग,

गुल्मं प्लीहानमश्मानमतिसारं महोदरम् ।
कासं श्वासमुदावर्त्तं शूलं शोफादिसम्भवम् ।।१९०।।

शिरोरोगं वमिं हिक्कां गण्डमालामरोचकम् ।
वातपित्तकफद्वन्द्वत्रिदोषजनितज्वरम् ।।१९१।।

आगन्तु विषमं शीतमुष्णं चैकाहिकादिकम् ।
इत्याद्युक्तमनुक्तं वा रोगं दोषादिसम्भवम् ।।१९२।।

सर्वं प्रशमयत्याशु स्तोत्रस्यास्य सकृज्जपः ।
सकृत्पाठेन संसिद्धः स्त्रीशूद्रपतितैरपि।।१९३।।

सहस्रनाममन्त्रोऽयं जप्तव्यस्तु शुभाप्तये ।
महागणपतेः स्तोत्रं सकामः प्रजपन्निदम् ।।१९४।।

इच्छया सकलान् भोगानुपभुज्येह पार्थिवान् ।
मनोरथफलैर्दिव्यैर्व्योमयानैर्मनोरमैः ।।१९५।।

चन्द्रेन्द्रभास्करोपेन्द्रब्रह्मरुद्रादिसद्मसु ।
कामरूपः कामगतिः कामतो विचरन्निह ।।१९६।।

भुक्त्वा यथेप्सितान् भोगानभीष्टैः सह बन्धुभिः ।
गणेशानुचरो भूत्वा महागणपतेः प्रियः ।।१९७।।

नन्दीश्वरादिसानन्दी नन्दितः सकलैर्गणैः ।
शिवाभ्यां कृपया पुत्रनिर्विशेषं च लालितः ।।१९८।।

शिवभक्तः पूर्णकामो गणेश्वरवरात् पुनः ।
जातिस्मरो धर्मपरः सार्वभौमोऽभिजायते ।।१९९।।

निष्कामस्तु जपन्नित्यं भक्त्या विघ्नेशतत्परः ।
योगसिद्धिं परां प्राप्य ज्ञानवैराग्यसंस्थितः ।।२००।।

निरन्तरोदितानन्दे परमानन्दसंविदि ।
विश्वोत्तीर्णे परे पारे पुनरावृत्तिवर्जिते ।।२०१।।

लीनो वैनायके धाम्नि रमते नित्यनिर्वृतः ।
यो नामभिः सहस्रैर्मामर्चयेद् जुहुयान्नरः ।।२०२।।

कुष्ठरोग, प्रमेह, अर्श, भगन्दर रोग, हैजा, गाना-गोला, चर्मरोग, पत्थरी, अतिसार, जलोदर, श्वासकास रोग, उदावर्त, शूल, बाथरोग, शिरोवेदना, बान्ता, बाडुली, कब्जियत, गण्डमाला, वात-पित्त र कफबाट उत्पन्न हुने अनेक रोगका साथै आगन्तुक, विषम र शीत एवं गर्मीबाट उत्पन्न हुने रोग समाप्त हुन्छन् । त्यसरी नै अनेक कारणबाट उत्पन्न हुने रोगहरू यस स्तोत्रको निरन्तर पाठबाट निर्मूल हुन्छन् र नारी, शूद्र एवं पतितहरूले पनि श्रीगणेशसहस्रनामको पाठबाट तत्काल सिद्धि प्राप्त गर्दछन् ।।१८९-१९३।। मानिसहरूले कल्याणप्राप्तिका लागि निरन्तर श्रीगणेशसहस्रनामको पाठ गर्नुपर्दछ। जुन मानिसले कुनै कामना लिएर यस स्तोत्रको जप-पाठ गर्दछ, त्यसका सम्पूर्ण मनोरथ पूर्ण हुन्छन् । साधकले पृथिवीमण्डलमा पाइने सम्पूर्ण भोगहरू प्राप्त गरी विमानद्वारा देवलोकहरूमा विचरण गर्दै आफूले चिताएका स्वर्गादि लोकहरूका दिव्य सुखको उपभोग गर्दछ । त्यो मानिस चन्द्रलोक, इन्द्रलोक, सूर्यलोक, उपेन्द्रलोक र कैलास आदि दिव्य धामहरूमा आफ्नो इच्छाअनुसारका रूप धारण गर्दै स्वतन्त्रतापूर्वक विचरण गर्दछ ।।१९४-१९६।। आफ्ना बन्धुहरूका साथ दिव्य लोकका भोगहरू प्राप्त गरेपछि महागणपतिको प्यारो सेवक बनेर जन्म लिन्छ ।।१९७।। नन्दीश्वर आदि शिवगणहरूका साथमा रमाउँदै पार्वती र परमेश्वरद्वारा पुत्रसमान लालित भक्त बन्दछ ।।१९८।। श्रीगणेशको कृपाबाट सम्पूर्ण कामना परिपूर्ण तुल्याउने र जन्मजन्मान्तरका घटनाहरूसमेत याद गर्ने धर्मनिष्ठ राजा भएर धर्तीमा जन्म लिन्छ ।।१९९।। जुन मानिसले निष्काम भावले दिव्य श्रीगणेशसहस्रनामको पाठ गर्दछ, भक्तिपूर्वक श्रीगणेश भगवान्को सेवा गर्दछ र ज्ञान एवं वैराग्यको पनि साधना गर्दछ भने त्यस व्यक्तिले परम योगसिद्धि प्राप्त गरेर जहाँ आनन्दबाहेक अन्य कुनै तत्त्व हुँदैन, त्यस परम आनन्दको भूमि सच्चिदानन्द परमात्मामा लीन हुन्छ । संसारदेखि माथि रहेको आनन्दको अन्तिम सीमामा पुगेर त्यसलाई फेरि फर्कनु पर्दैन ।।२००-२०१।। त्यो भक्त श्रीगणेशलोकमा लीन हुँदै नित्य आनन्दमा रमाउँछ । श्रीगणेश सहस्रनाममा प्रतिपादित एक हजार नामहरूबाट श्रीगणेशको प्रीतिका लागि हवन र पूजन गर्ने मानिसका अधीनमा पृथिवीमण्डलका शासकहरू